नेपालमा सर्वाधिक बिक्री हुने राष्ट्रिय दैनिक

# कान्तिपुर

ekantipur.com

वर्ष ३३ अंक १ काठमाडौं | ७ फागुन २०८१ बुधबार फाल्गुण कृष्णपक्ष सप्तमी | नेपाल संवत् ११४५ | राष्ट्रिय संस्करण | KANTIPUR, Nepali National Daily, Wednesday, February 19, 2025 | पृष्ठ १०+२+४८ | १० रुपैयाँ

# BUILDING SMART **INFRASTRUCTURE** FOR A STRONGER NEPAL





SOLAR POWER SOLUTIONS



HYDRO POWER SOLUTIONS



BRIDGES SOLUTIONS



HIGHWAY SOLUTIONS



### HYDRO POWER STEEL GATE

High-strength, precision-engineered gates designed for efficient water flow control and durability in hydropower projects.



### CRASH BARRIER

High-impact-resistant safety barriers designed to prevent vehicle collisions and enhance road safety.



### HIGH MAST POLE

Tall, durable poles designed for large-area illumination, ensuring optimal visibility in highways, stadiums, and industrial zones.



### GALVANIZED COILS & SHEETS

Corrosion-resistant, high-durability steel solutions designed for construction, roofing, and industrial applications.



### HYDROPOWER PENSTOCK PIPES

High-strength, pressure-resistant pipes designed for efficient water flow in hydropower generation.



### MULTI-PURPOSE POLES

Sturdy, multi-purpose poles designed for street lighting, signage, and infrastructure applications with enhanced durability and aesthetics.



### TRANSMISSION TOWERS

High-strength steel structures designed to support power transmission lines, ensuring reliable and efficient electricity or mobile network distribution.



### C & Z PURLINS

C & Z purlins are produced from Hi-tensile galvanised steel using cold roll forming process that ensures stability and accuracy in its dimensions and lengths.

#JamanaInfraKo




**HULAS INFRA LIMITED**

6th Floor, Amir Bhawan, Kamaladi Ganeshthan, Kathmandu, Nepal
Contact No. +977 9802266101, 9801922202, 9801922280, 9820299503, Land Line No. +977-1-5970085
Mail: sales@hulasinfra.com I Website: www.hulasinfra.com



Scan for more details



नेपालमा सर्वाधिक बिक्री हुने राष्ट्रिय दैनिक

ekantipur.com

# कान्तिपुर

वर्ष ३३ अंक १ काठमाडौं | ७ फागुन २०८१ बुधबार फाल्गुण कृष्णपक्ष सप्तमी | नेपाल संवत् ११४५ | राष्ट्रिय संस्करण | KANTIPUR, Nepali National Daily, Wednesday, February 19, 2025 | पृष्ठ १०+२+४८ | १० रुपैयाँ

KANTIPUR DAY
32nd ANNIVERSARY
FALGUN 7TH

## प्रकाशकीय

कान्तिपुर पब्लिकेशन्स् आज ३३ औं वर्षमा प्रवेश गरेको छ। देशको लोकतन्त्रका लागि पटकपटक भएका संघर्ष, संघीयता संस्थागत गर्न भएका पहल, सुशासन स्थापनामा उठेका आवाज र अर्थतन्त्रको सबलीकरणका लागि भएका बहससँगै कान्तिपुरको यात्रा अघि बढिरहेको छ। प्रविधि विकासले राजनीतिक, आर्थिक तथा सामाजिक बहसको शैली र आयामलाई पनि परिवर्तन गर्दै ल्याएको छ। परिवर्तनका सबल पक्षलाई अंगीकार र दुर्बल पक्षलाई परिस्कार गर्दै सूचना र संवादको साझा मञ्च सञ्चारमाध्यमलाई अझ उदार र फराकिलो बनाउने जिम्मेवारी हामीसँग छ, आफ्नो यात्रालाई अझ गतिशील बनाउन कान्तिपुर पब्लिकेशन्स् प्रतिबद्ध छ।

सूचना लोकतन्त्रको प्राणवायु हो। तर, सूचनाको सञ्चार कसरी हुन्छ भन्ने विषयले लोकतन्त्रको स्वास्थ्य पनि प्रभावित गर्छ। प्रशोधन गरिएका प्रमाणित सूचनाले समाजलाई जागरुक बनाउँछ भने दुराशयले रचना गरिएका सूचनाले समाजलाई दिग्भ्रमित बनाउँछ। जागरुक समाजले जिम्मेवार प्रश्न सोधेर प्रणालीलाई जवाफदेही र विधिलाई बलियो बनाउँछ भने दिग्भ्रमित मनोविज्ञानले ध्वंस मात्र गर्छ। 'मिसइन्फर्मेसन र डिसइन्फर्मेसन' ले सामाजिक चिन्तनलाई नै प्रदूषित बनाएको विषयमा राष्ट्रसंघीय नियोग युनेस्कोदेखि विश्वभरका जिम्मेवार संघसंस्था र सञ्चारमाध्यमसमेत चिन्तित छन्। नेपालमा हामीलाई पनि निराश होइन, जागरुक समाज चाहिएको छ, कान्तिपुरले आफ्ना सूचना संयन्त्रलाई यही अभियानमा समर्पित गरेको छ।

जिम्मेवार सञ्चारमाध्यमले जहिले पनि सत्ता र शक्तिमाथि प्रश्न गर्छ। तर, प्रश्नलाई सत्ताले जिम्मेवार रूपमा ग्रहण गर्छ भन्ने निश्चित हुँदैन। प्रश्नले कतिपय समूह र शक्ति अत्तालिन्छन् र सञ्चारमाध्यममाथि प्रतिशोधपूर्ण आक्रमणमा उत्रन्छन्। कान्तिपुरले पनि त्यसको सामना गर्दै आएको छ। सार्वजनिक पदमा पुगेको व्यक्तिले आफ्नो प्रतिरक्षाका लागि राज्य संयन्त्र दुरुपयोग गर्छ भने त्यसको जवाफदेहिता उसैले लिनुपर्छ। तर, यस्तो प्रवृत्तिबाट किञ्चित् पनि विचलित नभएको कान्तिपुरको इतिहास छ, वर्तमान र भविष्यमा पनि कान्तिपुर आफ्नो व्यावसायिक अडानमा अविचलित रहनेछ।

निःसन्देह देशको अर्थव्यवस्थाको आधार खलबलिएको छ। उद्योगले आफ्नो पूर्ण क्षमतामा उत्पादन गर्न सकेका छैनन्, व्यापार–व्यवसायमा लगानी बढ्न सकेको छैन, भएको लगानीप्रति आत्मविश्वास छैन। रोजगारी संकुचित भएकाले उपभोक्ताको क्रय शक्तिमा पनि ह्रास आएको छ। यसरी समग्र उद्योग व्यापार नै अलमलिएको अवस्थामा सञ्चारमाध्यमको अर्थतन्त्र बलियो हुन सक्दैन। त्यसको परिणामस्वरूप सञ्चार उद्योग पनि संघर्षरत छ। सञ्चार र समग्र उद्योगको आत्मबल बढाउन रचनात्मक बहसको वातावरण बढाउनुपर्नेछ, यसका लागि कान्तिपुरले आफ्नो व्यावसायिक भूमिका अवश्य पूरा गर्नेछ।

कान्तिपुरको सफलतापूर्ण ३२ वर्षे यात्रामा सबैभन्दा ठूलो भरोसा हामीले पाठकबाट पाएका छौं, त्यसका लागि हामी सदासर्वदा आभारी छौं। हरेक अनुकूल/प्रतिकूल समयमा विज्ञापनदाता र विज्ञापन एजेन्सीबाट साथ पाएका छौं। त्यस्तै, हरेक बिहान झिसमिसेमै पाठकको घरघरमा पत्रिका पुऱ्याउने डेलिभरी कर्मचारीदेखि सम्पूर्ण विभागका सहकर्मीको लगन र मिहिनेतले कान्तिपुर र नेपालको पत्रकारितालाई समृद्ध बनाएको छ, सबैलाई धन्यवाद।

**कैलाश सिरोहिया**
अध्यक्ष
KMG
कान्तिपुर मिडिया ग्रुप

# एमसीसी पनि स्थगित

**एमसीएए नेपालको कोषबाट भुक्तानी हुने कार्यक्रम ९० दिनसम्म रोक्न अर्थ मन्त्रालयलाई मिलेनियम च्यालेन्ज कर्पोरेसनको पत्र**

**यज्ञ बञ्जाडे** (काठमाडौं)

राष्ट्रपति डोनाल्ड ट्रम्पको कार्यकारी आदेशपछि अमेरिकी अनुदान सहयोगको मिलेनियम च्यालेन्ज कर्पोरेसन (एमसीसी) अन्तर्गतका परियोजनासमेत स्थगित भएका छन्। एमसीसी परियोजना कार्यान्वयनका लागि मिलेनियम च्यालेन्ज एकाउन्ट (एमसीए) नेपाल गठन भएको थियो। ट्रम्पको आदेशपछि एमसीए नेपालको कार्यक्रम रोकिएको हो।

उपप्रधान तथा अर्थमन्त्री विष्णु पौडेलको सचिवालयले ३ महिनाका लागि एमसीए नेपाल कार्यक्रम स्थगित भएको जनाएको छ। 'एमसीसीले यही फागुन २ मा पठाएको इमेलमा नेपाल सरकार र उक्त निकायबीच २०७४ भदौ २९ मा भएको सम्झौताअन्तर्गत कार्यान्वयन भइरहेका आयोजनासँग सम्बन्धित एमसीसी कोषबाट भुक्तानी हुने क्रियाकलाप अमेरिकी राष्ट्रपतिको २० जनवरी २०२५ मा जारी ९० दिनको स्थगनसम्बन्धी कार्यकारी आदेशानुसार रोकिएको जानकारी गराइन्छ,' सचिवालयले भनेको छ।

एमसीए नेपाल एमसीसीअन्तर्गतको कार्यक्रम हो। ०७४ भदौ २९ मा नेपाल सरकार र एमसीसीबीच भएको सम्झौता अनुसार ०८० भदौ १३ देखि परियोजना कार्यान्वयन सुरु भएको हो। सुरुआती सम्झौतामा ६९ करोड ७० लाख डलर (करिब ९२ अर्ब) परियोजनामा अमेरिकी सरकारले ५० करोड डलर र नेपाल सरकारले १९ करोड ७० लाख डलर व्यहोर्ने उल्लेख छ। गत पुसमा अमेरिकी सरकारले परियोजनाका लागि थप ५ करोड डलर दिने घोषणा गरेको थियो।

- सुरुआती सम्झौतामा ६९ करोड ७० लाख डलरको परियोजनामा अमेरिकी सरकारले ५० करोड र नेपाल सरकारले १९ करोड ७० लाख डलर व्यहोर्ने उल्लेख थियो
- परियोजनाका लागि थप ५ करोड डलर दिने घोषणा अमेरिकाले गत पुसमा गरेको थियो

यो कार्यक्रमअन्तर्गत ५ वर्षभित्र करिब ३१५ किमि लामो विद्युत् प्रसारण लाइन र ७० किमि सडक विस्तार गर्ने योजना छन्। एमसीए नेपालका अनुसार तीन सबस्टेसनका लागि ठेक्का सम्झौता भइसकेको छ। जसअनुसार ३ करोड ५५ लाख १० हजार डलरमा न्यू बुटवल (नवलपरासी पश्चिम) सबस्टेसन बनाउन ०८१ वैशाख २७ मा ठेक्का सम्झौता भएको हो। यस्तै, ५ करोड १६ लाख डलरमा रातामाटे-नुवाकोट सबस्टेसन बनाउन ०८१ असार १ मा ठेक्का सम्झौता भएको छ। ३ करोड ८८ लाख ९० हजार डलरमा नयाँ दमौली-तनहुँ सबस्टेसन बनाउन ०८१ साउन १६ मा ठेक्का सम्झौता भएर काम भइरहेको छ।

'विद्युत् प्रसारण आयोजनाअन्तर्गत १८ किमि लामो सीमापार विद्युत् प्रसारण लाइनका लागि ०८१ साउनमा ठेकेदार छनोट भएको छ। २९७ किलोमिटर प्रसारण लाइनका लागि यस वर्ष पुनः बोलपत्र आह्वान गरिनेछ,' एमसीए नेपालको प्रगति प्रतिवेदनमा उल्लेख छ, 'धान खोलादेखि लमहीसम्म फुल डेप्थ रिक्लेमेसन (एफडीआर) प्रविधि प्रयोग गर्न ४० किमि लामो सडक खण्डको यसै वर्ष बोलपत्र आह्वान गरिनेछ। आवधिक मर्मत सम्भारका लागि दुईवटा सम्भावित सडक खण्डको पहिचान गरी स्वीकृत गरिएको छ।'

सडक मर्मत सम्भार आयोजनाअन्तर्गत प्रयोगशाला स्तरोन्नति, सडक परीक्षण उपकरण र प्राविधिक तालिमलगायतका कार्यक्रम छन्। जीविकोपार्जन पुनःस्थापना कार्यक्रममार्फत २७० जनालाई तालिम प्रदान गरिएको, जग्गाको मुआब्जा निर्धारण गर्न ९ जिल्लामा निर्धारण समिति गठन गरिएको, धादिङ, मकवानपुर र नवलपरासी पश्चिम गरी ३ जिल्लामा जग्गाको मुआब्जा निर्धारण भएको र ९ वटा जिल्लामा पहिलो चरणको रूख गणना कार्य सम्पन्न भएको एमसीए नेपालले जनाएको छ।

यसअघि अमेरिकी सहयोग नियोग (यूएसएआईडी) ले अर्थ मन्त्रालयलाई औपचारिक रूपमा पत्र लेखेर आफ्नो सहयोगका कार्यक्रम स्थगित गर्न निर्देशन दिएको थियो। 'यूएसएआईडी र नेपाल सरकारबीच ५ मे २०२२ मा हस्ताक्षरित सम्झौतामार्फत नेपाललाई प्राप्त भएको अनुदान सहायतामध्ये बजेट प्रणालीमार्फत सर्वसञ्चित कोषबाट भुक्तानी हुने प्रकृतिका चारवटा आयोजनाहरू क्रमशः स्वास्थ्य, कृषि, शिक्षा र समावेशी नीतिका परियोजनामा प्राप्त अनुदान सहयोग तत्काल ९० दिनका लागि स्थागित भएको यूएसएआईडी नेपालले पत्रमार्फत जानकारी गराएको छ,' यूएसएआईडीले अर्थ मन्त्रालयलाई पठाएको पत्रमा भनिएको छ।

यूएसएआईडीले एनजीओ/आईएनजीओ, गैरनाफामूलक कम्पनीलगायत मार्फत पनि अनुदान परिचालन गर्दै आएको छ।

चौतर्फी दबाबपछि केआईआईटीले माफी माग्यो, फर्कने वातावरणको प्रतीक्षामा विद्यार्थी — पृष्ठ ३

**बुधबारको अनुमानित अधिकतम-न्यूनतम तापक्रम** (सेल्सियसमा)

| | |
|---|---|
| धनगढी | ३२-१८° |
| जुम्ला | १३-(–१)° |
| पोखरा | २१-११° |
| भैरहवा | २७-१४° |
| काठमाडौं | २१-७° |
| जनकपुर | २८-१३° |
| विराटनगर | ३०-१४° |



**आज फागुन ७**
कान्तिपुरको ३२औं वार्षिकोत्सवमा ४८ पृष्ठको विशेषांक
नयाँ पुस्ता
लोक सेवा तयारी गर्दागर्दै सांसद बनें
नेटवर्किङमा सक्रियता : सफल उद्यमशीलता
महिला विश्वकप : जुनियरको अनुभव, सिनियरको अपेक्षा
राजनीति, अर्थतन्त्र, खेलकुद र कलामा नयाँ पुस्ता : सपना र सम्भावना

# नेपाली युवाका सपना र सम्भावना

**डिजिटल अर्थतन्त्र, खेलकुद, सिनेमा र संगीतमा नेपाली युवाले करिअर बनाउन थालेका छन्, राजनीतिमा पनि युवा पुस्ताको चासो र सहभागिता बढ्दो छ, स्थानीय तहमा ४० प्रतिशत जनप्रतिनिधि ४० वर्षमुनिका छन्**

**सजना बराल** (काठमाडौं)

राष्ट्रिय टिमबाट खेलिसकेका खेलाडीसमेत एकपछि अर्को गर्दै विदेश गइरहेकै बेला खेलकुद क्षेत्रलाई नै आशावादी बनाउने गरी यो वर्ष नेपाल प्रिमियर लिग (एनपीएल) आयोजना भयो। यसले विश्वस्तरका विदेशी खेलाडीलाई क्रिकेट खेल्न काठमाडौंमा ओराल्यो भने केही समय अघिसम्म नामै नसुनिएका क्षेत्रीय खेलाडीलाई टिमले लाखौंमा किन्ने वातावरण बनाइदियो। कुनै बेला राष्ट्रिय टिमका खेलाडीले ब्याटसमेत मागेर खेल्नुपर्ने स्थितिमा रहेका नेपाली क्रिकेट खेलाडीले लाखौं पारिश्रमिकसहित लिग खेल्ने अवस्था आउनुलाई खेलकुद क्षेत्रकै ठूलो छलाङ मानिएको छ।

नेपाल क्रिकेट संघ (क्यान) ले आयोजना गरेको एनपीएलको पहिलो संस्करणमा नेपाली व्यवसायीले साढे ३ करोड रुपैयाँसम्म तिरेर टिम खरिद गरेका थिए। खेलाडी किन्नमै झन्डै १७ करोड लगानी भएको क्यानले जनाएको छ। प्रतियोगितामा १ अर्ब रुपैयाँ हाराहारी कारोबार भएको थियो। चर्चित भारतीय टेलिभिजन च्यानल 'स्टार स्पोर्ट्स' ले प्रत्यक्ष प्रसारण गरेर प्रतियोगितालाई विश्वव्यापी बनाइदिएको थियो।

फाइल तस्बिर

एनपीएलको सफलतापूर्वक समापनलगत्तै दीपेन्द्र सिंह ऐरी, रोहित पौडेल, कुशल मल्ललगायत क्रिकेट खेलाडीहरू विभिन्न मुलुकका लिगमा आबद्ध भएका छन्। नेपाली खेलाडीहरूको 'ब्रान्ड इन्डोर्समेन्ट' कमाइसमेत बढेको छ। नेपाली क्रिकेटको विकासलाई संस्थागत रूपमा अघि बढाउने र यसलाई पूर्ण उद्योगका रूपमा स्थापित गर्ने लक्ष्य लिइएको क्यानका सचिव पारस खड्का बताउँछन्। खेलाडीका लागि सुरक्षित भविष्य बनाउनुका साथै नेपाललाई खेलकुदको 'ग्लोबल हब' बनाउने चाहना रहेको उनले उल्लेख गरे। 'मैले खेल्न सुरु गर्दा नेपाली क्रिकेट विश्वकप वा अहिलेको जस्तो व्यावसायिक क्रिकेट खेल्ने स्तरमा पुग्ने आशासमेत राख्ने गरिएको थिएन,' उनले भने, 'खेलाडीलाई खेलेरै बाँच्न सकिने अवस्थामा आइपुग्न ३० वर्ष मिहिनेत गर्नुपऱ्यो।'

अहिले नेपाली क्रिकेट विश्वस्तरमा ब्रान्डका रूपमा स्थापित भएको उल्लेख गर्दै यसलाई अझ संस्थागत बनाउँदै नयाँ अवसर सिर्जना गर्न आवश्यक रहेको खड्का बताउँछन्। 'एउटा क्रिकेट म्याच हुँदा होटल, क्याटरिङ, सुरक्षालगायतका धेरै क्षेत्र जोडिन्छन्, यसलाई व्यवस्थित गर्दै लगेर भविष्यमा खेल क्षेत्रलाई नै उद्योगका रूपमा विकास गर्ने योजना छ,' उनले थपे, 'एनपीएलले नयाँ आशा देखाएको छ।' **बाँकी पृष्ठ ९**

# अल्लोको ब्रान्ड बनाउँदै ४० उपभोक्ता समूह

**सुर्खेत, दैलेख, जाजरकोट र अछाममा लोक्ता संकलन गर्न ४० समूहमा २१ सय ५८ जना आबद्ध छन्, उनीहरूबाट प्रतिकिलो १२० देखि १५० रुपैयाँको दरले लोक्ता खरिद हुन्छ**

**लक्ष्मीप्रसाद ढकाल**
कर्णाली नेचुरल फाइबर इन्डस्ट्री

सन् २०१० तिरको कुरा हो। दक्षिण कोरिया जानेहरू भाषा परीक्षाको फाराम भर्न लाइन लागिरहेको देखेँ। त्यतिखेर मेरो स्नातक सकिइसकेको थियो, सुर्खेतमा शैक्षिक इन्स्टिच्युट चलाइरहेका थिएँ। बेलायत पढ्न जाने भनेर पहिला नै राहदानी बनाइसकेको थिएँ। मलाई पनि कोरियाको रोजगारीले तान्यो। एक महिना कोरियन भाषा सिकें। भाषा परीक्षामा पास भएँ। रोजगारदातासँग करार सम्झौता भएपछि सन् २०११ मा कोरिया गएँ। फर्निचर उद्योगमा काम त पाएँ तर काठको धूलोका समस्याले निरन्तर दिन सकिनँ। कम्पनी फेरेर झोलामा जलप (रङ) लगाउनुपर्ने काममा आबद्ध भएँ।

हाम्रो मझौला कम्पनी थियो, जहाँ ७ जना नेपालीसहित २० जना श्रमिक थिए। कोरियाको साना र मझौला उद्योगमा मात्रै हामीजस्ता विदेशी श्रमिकले काम गर्न पाइने नीति रहेछ। ठूला कम्पनीमा विदेशी श्रमिकलाई अवसर छैन। कोरियनलाई मात्रै प्राथमिकता दिइन्छ।

नेपालमा धेरै घोटिएर काम गर्ने बानी थियो। खेतीपातीकै काम गर्दा पनि दिनमा ५-६ घण्टा मात्रै हो। कोरियामा दैनिक १२ घण्टा घोटिएर काम गर्नुपर्थ्यो। कोरिया सबैले मिहिनेत गरेर बनेको देश हो। साहू पनि हामीसँगै घोटिन्थे। बिहान ९ बजेदेखि काम सुरु हुन्थ्यो। १२ देखि एक बजेबीच खानाको समय हुन्थ्यो। त्यसपछि निरन्तर उभिएर काम गर्नुपर्ने। कफी र पानी पिउनेबाहेक आराम गर्न पाइँदैनथ्यो। त्यहाँको स्थानीय बिदा र चाडबाडबाहेक १२ महिना गर्नुपर्थ्यो। म सुरुमा १ लाख रुपैयाँ मासिक तलब पाउँथे। नेपाल फर्किने बेला ३ लाख पुगेको थियो।

पहिलो पटक ४ वर्ष १० महिना सकिएपछि २०१६ मा स्वदेश फर्किएँ। दोस्रो पटक जान फेरि कम्प्युटर बेस टेस्ट (सीबीटी) उत्तीर्ण हुनुपर्छ। मेरो साथी पुनः कोरिया जाने तयारीमा थिए। सीबीटी उत्तीर्ण गरेर मेडिकल परीक्षण गर्ने चरण पुग्दा मेरो मन बदलियो- कहिलेसम्म कोरिया गएर काम गरिराख्ने ? अब यतै व्यवसाय गर्नुपर्छ।

व्यवसाय गर्न पैसा, आँट, आइडिया र उपयुक्त समय चाहिन्छ। घर र जग्गा किनेर पैसा जोगिएको थियो। अहिले लगानी गरेर स्थापित हुन सक्ने उपयुक्त समय लाग्यो। मेरो केही साथी सुर्खेतमा गार्मेन्ट व्यवसाय बन्द गरेर बसेका थिए। मैले गार्मेन्ट उद्योग नै चलाउन सक्ने आँट गरें। त्यसमा ८ लाख रुपैयाँमा खरिद गरें। किनभने थप पैसा भयो भने यसलाई बढाउँदै लैजान सकिन्थ्यो। कोरियामा गार्मेन्ट उद्योगमा काम गरेको अनुभव पनि थियो। विद्युतीय मेसिन ५ वटा र हाते मेसिन ६ वटा थिए।

सुरुवाती चरणमा घाटा लाग्यो। किनभने उत्पादन मूल्य बढी हुने र बिक्री मूल्य कम राख्ने गरेको रहेछु। यसबारे पछि मात्रै थाहा भयो। हार खाइनँ। अगाडि बढाएँ। गार्मेन्टमा लगानी बढाउँदै गएँ। विशेषगरी विद्यालयको पोसाक बनाउन थाले। अहिले मसँग १५ वटा विद्युतीय मेसिन छन्। सिलाइदेखि प्याकिङ गर्नेसम्म १६ जना श्रमिक छन्। सुर्खेत, दैलेख, जाजरकोट, अछाम, मुगु र हुम्लासम्मका १ सय ५० विद्यालयको पोसाक बनाइरहेका छौं। दैनिक सय सेटभन्दा बढी उत्पादन हुन्छ।

जब कोभिड आयो, यसले मलाई अर्को एउटा अवसर थपिदियो। सुर्खेतका एउटा डाक्टरको समूह आएर भन्यो, 'कोभिडको बिरामीलाई हामी बचाउँछौं। तपाईंले हामीलाई जोगाउनुपर्‍यो।' पीपीएको अभाव थियो त्यसबेला। मसँग पीपीए बनाउन गुणस्तरीय सामान थिएन। तर, पानी र हावा नछिर्ने कपडा थियो। त्यसैलाई पीपीएको रूप दिएँ। डाक्टरका जवाफ थियो, 'हतियारबिना युद्धमा जानुभन्दा कमसेकम लट्ठी लिएर जाँदा त केही लड्न सकिन्छ।'

यो कामले मेरो सम्पर्क सरकारी कर्मचारी, स्थानीय जनप्रतिनिधिसम्म विस्तार भयो। त्यसपछि सरकारी काम हात पर्न थाल्यो। उनीहरूलाई चाहिने झोला र पोसाक बनाएर दिन थालें। स्थानीय कच्चा पदार्थबाट बनेको सामानलाई प्राथमिकता दिने कर्णाली प्रदेश सरकारको नीति आएपछि मलाई झनै सहज भयो। उसले स्थानीय कच्चा पदार्थबाट बनेको सामग्री विदेशीभन्दा २० प्रतिशतसम्म महँगो भए पनि खरिद गर्ने नीति ल्यायो। यो नीतिले स्थानीय कच्चा पदार्थबाट सञ्चालन हुने उद्योगको विकासमा ठूलो योगदान पुग्छ।

कर्णालीमा सबैभन्दा बढी पाइने जडीबुटी, खाद्यान्नका रूपमा गेडागुडी र अल्लो नै हो। पहाडी भेगतिर अल्लोको ठूलो झाडी-जंगल नै छ। यो घाम नलाग्ने ठाउँमा बढी उम्रिन्छ। दुई मिटरसम्मको बोट हुन्छ। यसको आयु एक वर्षको हुन्छ। प्रशस्त रूपमा जंगलमा पाइने अल्लो त्यत्तिकै खेर गइरहेको छ। मलाई लाग्छ, जंगलमा भएको १० देखि २० प्रतिशत मात्रै प्रयोगमा आएको छ। सबै मान्छेलाई यसबारे जानकारी पनि छैन। यसका लागि निश्चित सिजनमा मात्रै उत्पादन हुन्छ। यसलाई कात्तिकदेखि माघभित्र संकलन गरिसक्नुपर्छ।

अल्लोमा आधारित गार्मेन्ट उद्योग सञ्चालन गर्ने योजना बनाए कर्णालीको अल्लोलाई एउटा ब्रान्डका रूपमा चिनाउन सकिन्छ भन्ने लाग्यो। अनि स्थापना गरें- कर्णाली फाइबर इन्डस्ट्रिज।

पहिला मैले संखुवासभामा उत्पादन भएको अल्लोको कपडा ल्याएर झोला र कोट बनाइरहेको थिएँ। कर्णालीकै अल्लोलाई बृहत् रूपमा संकलन गरी कपडा बनाउनुपर्छ भनेर लागिरहेको छु। यो सिजनमा ५० हजार किलो अल्लो लोक्ता संकलन गर्ने योजना बनाएको छु। त्यसमा १२ हजार किलो लोक्ता आइसकेको छ। यसको साइज ठूलो हुन्छ। तौल कम हुन्छ। थोरैले पनि गाडी भरिन्छ। त्यही भएर सुर्खेत, दैलेख, जाजरकोट र अछामका जंगलबाट ल्याएको हो। यो संकलन गर्न स्थानीय उपभोक्ता समूह बनाएको छु। स्थानीय २१ सय ५८ उपभोक्ताका ४० वटा समूह छन्। एउटामा समूहमा ५० जना छन्। त्यसमध्ये ५० प्रतिशतबाट संकलन गरिरहेको छु। उनीहरूसँग मैले सम्झौता गरेको छु। उनीहरूसँग प्रतिकिलो १ सय २० देखि १५० रुपैयाँको दरले खरिद हुन्छ। वन डिभिजन कार्यालयको अनुमतिबिना अल्लो संकलन गर्न पाइँदैन। ठाउँअनुसार पुर्जी रकम ३ देखि ७ रुपैयाँ लाग्छ। यसमा लाग्ने सबै खर्च मैले नै दिने गरेको छु।

सुर्खेतको वीरेन्द्रनगरमा संकलन र प्रशोधन अलग-अलग ठाउँमा भइरहेको छ। यसले झोला, टोपी बनाउने काम भइरहेको थियो। हामीसँग जति धेरै अल्लोको धागो बन्छ, कपडा पनि त्यति नै बढी पाइन्छ। यसो हुँदा मागअनुसारको कपडा बनाउनेदेखि झोला, टोपी र कोटको उत्पादन हुन्छ। यसको संकलनदेखि प्रशोधनसम्म धेरै समय र खर्च लाग्ने हुँदा कपडा पनि महँगो छ। यसको कपडा प्रतिमिटर १५ सयसम्म पर्छ। यसको लगानी दीर्घकालीन हो। तुरुन्तै फाइदा लिइहाल्ने प्रकृतिको होइन। यो व्यवसायको लाभ समुदायसम्म फैलिएको छ। अब हामी आफैंले अल्लोको बजार देखाउँदै विस्तार गर्नुपर्नेछ।

अल्लोको कपडाको प्रयोगले व्यापार घाटा कम गराउन मद्दत पुग्छ। कोरियामा पनि आन्तरिक उत्पादन र कच्चा पदार्थको प्रयोगलाई निकै प्राथमिकता दिइएको देखें। त्यहाँ विदेशी श्रमिक र आयस्तर कम हुनेले मात्रै आयतीत वस्तुको प्रयोग गर्ने हो। स्थानीय रूपमा उत्पादित वस्तुको मूल्य आयातितभन्दा महँगो पर्छ। मध्यम र उच्च आम्दानी भएकाहरूको प्राथमिकता स्थानीय रूमा उत्पादन हुने मासु, चामल, कपडा उपभोग गरेको देख्छु।

कर्णाली सरकारले स्थानीय स्रोतमा आधारित दिगो उद्योग बनाउन खोजिरहेको छ। कर्णाली प्रदेशमा ८९ वटा पालिका छन्। उनीहरूको प्रत्येक वर्ष अधिवेशन हुन्छ। कम्तीमा ७ हजार झोला त पालिकाको कार्यक्रममा मात्रै चाहिन्छ। यसरी झोला मात्रै किन्दा पनि यहाँको पैसा सबै बाहिर जान्छ। एउटा झोला बेच्दा २ सय रुपैयाँ मात्रै स्थानीय व्यापारीले कमाउँछन्। तर, हामीले बनाएको अल्लोको झोला खरिद गर्दा ९५ प्रतिशत पैसा कर्णालीकै व्यापारी र समुदायले कमाउँछ। किसान, श्रमिक र र व्यापारीले कमाउँछन्।

अहिले बेरोजगारलाई भत्ता दिनुभन्दा थोरै काम गराएर पैसा दिँदा उचित हुन्छ। कोरियामा सरकारले ज्याला बढाउँदा साना व्यापारीले विरोध गर्छन्। त्यसबेला कोरिया सरकारले बढेको पैसा साना उद्योगीलाई दिन्छ। यसले श्रमिकले पनि निर्धारण गरिएको ज्याला पाए, साना व्यापारी पनि टिके। हामीकहाँ ठूलाठूला उद्योगभन्दा साना लगानीका उद्यमलाई सहयोग गर्ने नीति हुनुपर्छ।

कोरियामा कार्यस्थलमा धेरैजसो कोरियन साउदी, श्रीलंका र युरोपलगायत देशमा काम गरेर फर्केकासँग संगत भयो। उनीहरूलाई प्रवर्द्धन गर्न राज्यले फन्ड दिएर आआफ्ना व्यवसाय गर्न लगाएको रहेछ। त्यहाँ ठूला उद्योग थोरै छन् भने साना उद्योग धेरै। ठूला उद्योगभन्दा ससाना धेरै उद्योग खोल्दा रोजगारी पनि सिर्जना हुन्छ। लगानी गर्न पनि ठूलो पुँजी पर्दैन। उनीहरू जस्तै, हामीले पनि वैदेशिक रोजगारमा सिकेको सीप, पुँजी र प्रविधिलाई स्वदेशमा नै प्रयोग गर्नेको संख्या बढिरहेको छ। यो नेपालका लागि ठूलो अवसर हो। रोजगारीका लागि सधैं विदेशमा नै बसिराख्न हुँदैन। स्वदेशमा नै फर्किएर उद्यम गर्न उत्साहित भइरहेको देख्छु। यसका लागि थोरै मात्रै सहजीकरण भयो पनि पुग्छ। ८ लाखबाट सुरु गरेको व्यवसाय १ करोड पुगिसकेको छ। यो हरेक वर्ष थपिँदै जाने हो। म निराश छैन। उत्साहित नै छु। थप भविष्य देखिरहेको छु।

उद्यम गर्ने भन्दै जथाभावी लगानी गर्ने होइन। मैले सुरुमा घाटा खाएर व्यवसाय गर्न सिकें। अब उद्यम सुरु गर्नेलाई सुरुमा नै सरकारले उपयुक्त सल्लाह र सुझाव दिने निकाय बनाइदिनुपर्छ। विदेशबाट आएकालाई उद्यमसम्बन्धी केही पनि थाहा हुँदैन। कम्पनी कहाँ दर्ता गर्ने ? कम्पनी कार्यालयमा दर्ता गर्दा के हुन्छ ? घरेलुमा दर्ता के हुन्छ ? बन्द कसरी गर्ने थाहा हुँदैन। उद्यम गर्नेलाई चरण-चरणको प्रक्रिया बताइदिने निकाय चाहिन्छ। घाटामा गएर भोलि बन्द गर्नुपर्ने अवस्था हुँदा पनि न्यूनतम क्षतिपूर्ति दिने एउटा कोष बनाइदिनुपर्छ।

**उद्यमीलाई चरण-चरणको प्रक्रिया बताइदिने निकाय चाहिन्छ, घाटामा गएर उद्योग बन्द गर्नुपरे न्यूनतम क्षतिपूर्ति दिने कोष बनाइदिनुपर्छ, हामीले बनाएका अल्लोका झोला किन्दा ९५ प्रतिशत पैसा कर्णालीकै व्यापारी र समुदायकहाँ जाने हो, किसान र श्रमिकले यसको लाभ लिने हुन्**

## आजको राशिफल

प्रीति आत्रेय ज्ञवाली, फलित ज्योतिषाचार्य

**मेष** कार्यालयको कामले कतै जाने प्रबन्ध मिल्न सक्छ । पदीय मर्यादानुसार आफूलाई प्रस्तुत गरिनेछ । समग्रमा हेर्दा दिन राम्रै रहनेछ ।

**वृष** समयानुसारका प्राथमिकतामा आफूलाई खटाइनेछ । प्रायःजसो सबै काम आफ्नै प्रभुत्वमा सम्पन्न हुनेछन् । भनेअनुसार सबै कुरा मिल्न जाँदा मन खुसी हुनेछ ।

**मिथुन** कुनै कुरामा प्रतिक्रिया गर्दा राम्ररी ध्यान दिनुपर्नेछ । आफूले नजानेको कुरामा मौन बसेकै उचित होला । सकेसम्म हरेक कुरामा अपडेटेड रहन खोजिनेछ ।

**कर्कट** समयावस्था विचारेर काम गर्नुपर्ने बेला छ । निर्णयात्मक काम गर्दा सावधान रहनुहोला । कसैको लहैलहैमा नलागी आफैं कामको टुंगो लगाउनु ठीक रहला ।

**सिंह** पारिवारिक खुसीबारे जोड दिन खोजिनेछ । समय सन्दर्भ विचारी आफूलाई प्रस्तुत गरिनेछ । सकेसम्म सबै कुरामा आफूलाई सहज बनाउन लागिपरिनेछ ।

**कन्या** सकेसम्म समयानुकूल रहने प्रयत्न गरिनेछ । कुनै कुरालाई लिएर कतै बैठक बस्न सक्छ । अनुकूलता विचार्दै आफ्नो प्रस्तुति दिन तम्तयार भइएला ।

**तुला** कुनै कामविशेषले कतै जाने काम आइलाग्न सक्छ । मनपर्दो खाद्य सामग्रीमा रम्न पाइनेछ । कुनै कुराको किनमेलमा छुट पाइन सक्छ ।

**वृश्चिक** समयावस्था विचारेर काम गर्नुपर्नेछ । कसैलाई तपाईंको कुरा धुत्न तपाईंलाई उक्साउन सक्छन् । प्रतिस्पर्धात्मक काम गर्दा विशेष चनाखो हुनुपर्ने बेला छ ।

**धनु** नजानिँदो गरी कुनै कामले व्यस्त बनाउला । समयावस्था हेरी आफूलाई समय दिनुपर्नेछ । कुनै कामविशेषले कतै निस्कनुपर्ने हुन सक्छ ।

**मकर** समयलाई आफूअनुरूप नचाउन खोजिनेछ । सकेसम्म प्राथमिकतामा जोड दिइनेछ । समय बचेको खण्डमा आत्मीयजनसित भलाकुसारी गर्न मन लाग्नेछ ।

**कुम्भ** कुनै कुराको जिम्मेवारीले व्यस्त बनाउन सक्छ । समयावस्था विचारी कामको बाँडफाँट गरिनेछ । आफूलाई जतिसक्यो सहज र छरितो बनाउने प्रयत्न गरिनेछ ।

**मीन** आफ्नो सहजताको आफैंले विचार गर्नुपर्ला । मिलेसम्म झिनामसिना कुराबाट तर्किनु नै उचित होला । रक्तचापका बिरामीले खानपानमा सजग रहनुपर्नेछ ।

# चौतर्फी दबाबपछि केआईआईटीले माफी माग्यो, फर्कने वातावरणको प्रतीक्षामा विद्यार्थी

## नेपालका साथै भारतभित्रैबाट दवाव बढेपछि विश्वविद्यालयका संस्थापक, उपकुलपति र रजिस्ट्रारले मागे माफी

**बुद्धिसागर मरासिनी** र **राजेश मिश्र** (काठमाडौं)

नेपाली विद्यार्थीको शंकास्पद मृत्युको अनुसन्धान र न्यायको माग गर्ने विद्यार्थीमाथि दमन भएको घटनामा भारतीय राज्य ओडिसाको भुवनेश्वरस्थित कलिंगा इन्स्टिच्युट अफ इन्डस्ट्रियल टेक्नोलोजी (केआईआईटी) ले विद्यार्थी तथा अभिभावकसँग माफी मागेको छ। बी–टेक तेस्रो वर्षमा पढ्ने प्रकृति लम्साल आइतबार साँझ होस्टेलमा मृत भेटिएपछि अनुसन्धान र न्यायको माग गर्दा विश्वविद्यालय प्रशासनले नेपाली विद्यार्थीमाथि दमन गरेको थियो।

न्याय माग गर्दै प्रदर्शनमा उत्रिएका नेपाली विद्यार्थीलाई प्रशासनले तत्काल होस्टेल छाड्न आदेशसमेत दिएको थियो। घटनाको चौतर्फी विरोध र नेपालका साथै भारतभित्रबाटै दबाब बढाइएपछि केआईआईटीले माफी मागेको हो। विश्वविद्यालयले माफी मागेपछि नेपाली विद्यार्थी लम्सालको शंकास्पद मृत्युपछि जारी विश्वविद्यालय प्रशासन र नेपाली विद्यार्थीबीचको 'तनावको अवस्था' सामान्य बन्दै गएको छ।

कलेजका संस्थापक, उपकुलपति र रजिस्ट्रारले उत्पन्न परिस्थितिप्रति दुःख व्यक्त गर्नुका साथै क्षमा मागेका छन्। त्यसपछि क्रमशः नेपाली विद्यार्थी कलेज फर्किन थालेका हुन्। कलेजका संस्थापक अच्युत सामन्तले परराष्ट्रमन्त्री आरजु राणा देउवा र नयाँदिल्लीस्थित नेपाली राजदूत शंकरप्रसाद शर्मासँगको टेलिफोन कुराकानीमा घटनाप्रति दुःख व्यक्त गर्दै नेपाली विद्यार्थीले उठाएका विषय र शैक्षिक समस्या सम्बोधन गर्ने प्रतिबद्धता जनाएका छन्। 'नेपाली विद्यार्थीले उठाएका सवाललाई सम्भव भएसम्मका सबैजसो माग पूरा गरिने उहाँले प्रतिबद्धता व्यक्त गर्नुभएको छ,' राजदूत शर्माले भने, 'विद्यार्थीसँग अभद्र व्यवहार गर्ने शिक्षक तथा कर्मचारीलाई निलम्बन गरिएको, कुटपिट गर्ने सुरक्षा गार्डलाई कानुनी कारबाहीमा पठाइएको भन्नुभएको छ। पुनः परीक्षा र अतिरिक्त कक्षाको प्रतिबद्धता पनि जनाउनुभएको छ।'

घटनाका विषयमा बुझ्न र कलेज प्रशासन, विद्यार्थी तथा स्थानीय प्रशासनसँग समन्वय गरेर सहज वातावरण बनाउन दिल्लीस्थित नेपाली दूतावासले मंगलबार बिहान दुई जना कन्सुलरलाई भुवनेश्वर पठाएको थियो। कन्सुलरद्वय नेपाल प्रहरीका वरिष्ठ प्रहरी उपरीक्षक सञ्जीव शर्मा र राष्ट्रिय अनुसन्धानका वरिष्ठ उपरीक्षक नवीन अधिकारीले सबै पक्षसँग भेटघाट गरेका छन्। राजदूत शर्माले नेपाली विद्यार्थीका तर्फबाट उठाइएका सबैजसो माग कलेज प्रशासनले स्वीकार गरेपछि स्थिति सामान्य बनेको बताए। कन्सुलर एसएसपी शर्माका अनुसार नेपाली विद्यार्थीको सुरक्षा सवालको विषय सबै पक्षसँग राखिएको छ। 'कलेज प्रशासन र यहाँका प्रहरीले त्यस सम्बन्धमा प्रतिबद्धता व्यक्त गरेका छन्। विद्यार्थी क्रमशः फर्किन थालेका छन्,' उनले भने, 'धेरै विद्यार्थी घरतर्फ लागिसकेकाले उनीहरू फर्किन केही समय लाग्न सक्छ।' मंगलबार साँझसम्म ६० विद्यार्थी छात्रावासमा फर्किइसकेका छन्।



विश्वविद्यालय प्रशासन तथा विद्यार्थीसँग समन्वय गरेर सहज वातावरण बनाउन भुवनेश्वर पुगेका नेपाली दूतावासका कन्सुलरको साथमा नेपाली विद्यार्थी।

केआईआईटीमा अध्ययनरत विद्यार्थीका अनुसार लम्सालमाथि भारतीय विद्यार्थी आद्विक श्रीवास्तवले बारम्बार दुर्व्यवहार गर्ने गरेका थिए। दुर्व्यवहार सहन नसकेपछि लम्सालले आत्महत्या गरेको उनीहरूको भनाइ छ। लम्सालको मृत्युपछि भारतीय विद्यार्थीमाथि कारबाहीको माग गर्दै प्रशासनमा उजुरी दिन गएका विद्यार्थीमाथि केआईआईटी प्रशासनले विश्वविद्यालयका सुरक्षा गार्ड र बाउन्सर लगाएर उल्टो दमन गरेपछि स्थिति तनावग्रस्त बनेको थियो। त्यसलगत्तै विश्वविद्यालय प्रशासनले सम्पूर्ण विद्यार्थीलाई तत्काल छात्रावास छाड्न सूचना जारी गरेको थियो। ५ सयभन्दा बढी नेपाली विद्यार्थीलाई विश्वविद्यालयले भुवनेश्वर र कटक रेलवे स्टेसन लगेर छाडेको थियो। तर चौतर्फी विरोधपछि विश्वविद्यालय प्रशासन निर्णय फिर्ता लिन बाध्य भएको थियो।

विश्वविद्यालयका उपकुलपति शरणजित सिंहले पनि मंगलबार एक विज्ञप्ति जारी गर्दै सोमबार भएको घटनाप्रति क्षमायाचना गरेका छन्। 'नेपाली विद्यार्थीलगायत सबै विद्यार्थीको सुरक्षा, मर्यादा र हितका लागि हाम्रो प्रतिबद्धता दोहोर्‍याउन चाहन्छौं,' उनले भनेका छन्। विज्ञप्तिमा विश्वविद्यालयका दुई अधिकारीले नेपाल र नेपाली विद्यार्थीप्रति गरेको टिप्पणी गैरजिम्मेवार रहेको र उनीहरूले माफी मागिसकेको जनाइएको छ। 'कर्मचारीले आवेशमा आएर गरेका टिप्पणी व्यक्तिगत हुन्। ती टिप्पणीलाई संस्थाले समर्थन गर्दैन,' विज्ञप्तिमा उल्लेख छ।

> ओडिसा राज्य सरकारले केआईआईटी घटनाबारे छानबिन गर्न उच्चस्तरीय छानबिन समिति गठन गरेको छ, जिम्मेवार व्यक्तिलाई कानुनअनुसार जवाफदेही बनाइनेछ
>
> ● काठमाडौंस्थित भारतीय दूतावास

विश्वविद्यालयले नेपाली विद्यार्थीमाथि सोमबार कुटपिट गर्ने तीन जना सुरक्षा गार्डलाई बर्खास्त गरेको छ। उनीहरूसहित अर्का एक सुरक्षा गार्डलाई पक्राउ गरेको ओडिसा प्रहरीका कमिश्नर देवदत्त सिंहले बताए। सोमबार नै नेपाल र नेपाली विद्यार्थीमाथि गालीगलौजमा उत्रिएका दुई जना छात्रावास अधिकारी र एक जना अन्तर्राष्ट्रिय सम्बन्ध कार्यालयका अधिकारीलाई निलम्बन गरेको छ। नेपाल र नेपाली विद्यार्थीमाथि गैरजिम्मेवार टिप्पणी गर्ने कर्मचारी मञ्जुषा पाण्डेले सामाजिक सञ्जालमा एक भिडियो पोस्ट गर्दै क्षमायाचना गरेकी छन्।

काठमाडौंस्थित भारतीय दूतावासले विज्ञप्ति जारी गर्दै ओडिसा राज्य सरकारले केआईआईटी घटनाबारे छानबिन गर्न उच्चस्तरीय छानबिन समिति गठन गरेको जनाएको छ। 'समितिले दिएको निष्कर्षका आधारमा आवश्यक कारबाही गरिनेछ,' विज्ञप्तिमा भनिएको छ, 'विद्यार्थीमाथि भएको दुर्व्यवहारको अनुसन्धान पनि भइरहेको छ र जिम्मेवार व्यक्तिलाई कानुनअनुसार जवाफदेही बनाइनेछ।'

बि–टेक तेस्रो वर्षमा पढ्ने एक नेपाली विद्यार्थीले पनि स्थितिमा सुधार हुँदै गएको बताए। 'कलेजबाट निकालिएपछि सबैभन्दा बढी तनाव हाम्रो अभिभावकलाई भयो,' उनले भने, 'हामी होस्टल फर्किएको सूचना दिएपछि केही राहत त भएको छ। तर, ढुक्क हुन सक्नुभएको छैन।' नेपाली विद्यार्थीले घटनाबारे निष्पक्ष छानबिन, संलग्न कर्मचारीको बर्खास्ती, बाहिरबाट आएर विद्यार्थीमाथि कुटपिट गर्नेमाथि कानुनी कारबाही, पीडित विद्यार्थीलाई क्षतिपूर्तिलगायतका ७ बुँदे माग अघि सारेका छन्। घर फर्किएका कारण छुटेको स्थितिमा पुनः परीक्षा सञ्चालनदेखि अतिरिक्त कक्षा सञ्चालनसम्मको प्रतिबद्धता कलेज प्रशासनले गरेको छ। दूतावासले घर फर्किन बाध्य भएकाको टिकट खर्चसमेत बेहोर्ने प्रतिबद्धता जनाएको छ।

कान्तिपुरको सम्पर्कमा आएका विश्वविद्यालयका एक कर्मचारीले स्थिति सामान्य बन्दै गएको र विद्यार्थी छात्रावासमा फर्किन थालेको बताएका छन्। 'कतिपय विद्यार्थी भने नेपाल फर्कन रेल चढिसकेका रहेछन्,' उनले भने, 'अन्य विद्यार्थी भने फर्किरहेका छन्।' उनका अनुसार हाल विश्वविद्यालयमा १ हजार १ सय ९६ नेपाली विद्यार्थी छन्। उनका अनुसार विश्वविद्यालयमा सन् २००१ देखि नेपाली विद्यार्थीले अध्ययन गर्न थालेका हुन्। दुई दशकभन्दा लामो समयमा यस्तो तनावपूर्ण अवस्था पहिलो पटक उत्पन्न भएको उनको दाबी छ।

मृतक नेपाली छात्रा प्रकृति लम्सालको शवको पोस्टमार्टम भइसकेको छ। शव परिवारजनका साथमा बुधबार नेपाल पठाउने तयारी गरिएको छ। छोरीको मृत्युपछि भुवनेश्वर पुगेका बुबा सुनीलले भारतीय सञ्चारमाध्यम एएनआईसँग 'अनुसन्धानपछि न्याय पाउने आशा व्यक्त गरेका' छन्। 'घटनाबारे अनुसन्धान भइरहेको बताइएको छ। हामीलाई न्याय चाहिएको छ,' उनले भनेका छन्।

नेपाली अधिकारीसँगको भेटमा ओडिसा प्रहरीका कमिश्नर देवदत्त सिंहले नेपाली विद्यार्थीको सुरक्षाको प्रत्याभूति दिलाएका छन्। उनले नेपाली छात्रा लम्साल मृत्यु प्रकरणमा कुनै कसर बाँकी नराखी छानबिन गरिने प्रतिबद्धता जनाएका छन्।

नेपाली विद्यार्थीको मृत्यु र त्यसपछि उत्पन्न घटनाको विरोधमा नेपालमा विभिन्न दलनिकट विद्यार्थी संगठनहरूले पनि प्रदर्शन गरेका छन्। ओडिसामा नेपाली विद्यार्थीसँग भएको घटनाको भारतभित्र पनि विभिन्न विद्यार्थी संगठनले विरोध जनाएका छन्। घटनाको विरोधमा मंगलबार भुवनेश्वरमा प्रदर्शनसमेत भएको छ। त्यस्तै घटनाको विषयमा ओडिसा विधानसभामा पनि प्रश्न उठेको छ।

**ओडिसामा 'एनओसी' रोक्ने शिक्षा मन्त्रालयको चेतावनी**

शिक्षा मन्त्रालयले केआईआईटी विश्वविद्यालयमा भएको घटना र समस्याको न्यायपूर्ण समाधान नगरिए वैदेशिक अध्ययन अनुमतिपत्र (एनओसी) रोक्ने चेतावनी दिएको छ। शिक्षा मन्त्रालयका प्रवक्ता शिवकुमार सापकोटाले मंगलबार विज्ञप्ति जारी गर्दै ओडिसा राज्यका विश्वविद्यालय र शिक्षण संस्थामा अध्ययनका लागि प्रदान गर्दै आएको एनओसी रोक्न सकिने जनाएका हुन्। मन्त्रालयले त्यहाँ समस्यामा परेका विद्यार्थीलाई सहयोग गर्न सहायता कक्षसमेत स्थापना गरेको जनाएको छ।

# राजनीतिक दलदेखि निर्वाचन कानुनसम्म सुधार्न नागरिक आन्दोलनको माग

**आरती पौडेल** (काठमाडौं)

बृहत् नागरिक आन्दोलनले राजनीतिक दल, निर्वाचन कानुनलगायतमा सुधार गर्नुपर्ने माग गरेको छ। प्रजातन्त्र दिवसको पूर्वसन्ध्यामा मंगलबार प्रेस सम्मेलन आयोजना गर्दै नागरिक आन्दोलनले दलहरूको बेथिति रोक्न विद्यमान राजनीतिक दलसम्बन्धी कानुनमा गम्भीर पुनरावलोकन गर्नुपर्ने माग गरेको हो।

जनताको संघर्ष र बलिदानबाट प्राप्त लोकतान्त्रिक गणतन्त्रमा नेताराज चलेको नागरिक आन्दोलनले जारी गरेको विज्ञप्तिमा उल्लेख छ। 'नेताराज स्वीकार्य छैन। हामी यो विषवृक्ष ढाल्न चाहन्छौं। भ्रष्टाचार र सत्ता स्वार्थको जालो मिल्काउन, राजनीतिलाई निष्पक्ष र अर्थपूर्ण बनाउन नागरिक फेरि जाग्ने समय आएको छ,' विज्ञप्तिमा भनिएको छ।




दलको सर्वोच्च कार्यकारी पदमा कोही पनि व्यक्ति दुई पदावधिभन्दा बढी रहन नपाउने र त्यस्तो पदमा उमेरको हदबन्दी ७० वर्ष कायम गर्नुपर्ने माग छ। निर्वाचन आयोगका प्रमुख आयुक्त र आयुक्तलगायत संवैधानिक परिषद्को सिफारिसमा हुने नियुक्ति प्रक्रियामा कार्यपालिकाको ठाडो हस्तक्षेप र दलीय भागबन्डा रोक्नुपर्ने नागरिक आन्दोलनले माग राखेको छ। निर्वाचन आयोग र अख्तियारको प्रमुख तथा अन्य सदस्यमा बहालवाला सचिव वा सरकारी सेवाको पदाधिकारी राख्न नहुने पनि माग गरिएको छ।

आन्दोलनका अगुवा लेखक खगेन्द्र संग्रौलाले नेतालाई समयमै झकझक्याउन जनता अगाडि आउनुपर्ने बताए। 'बृहत् आन्दोलन नेताका विरुद्ध नभई नेताराजका विरुद्ध गर्न लागेको हो,' उनले भने। राजनीतिक पार्टी र राज्य सत्ता व्यक्तिको नियन्त्रणमा हुँदा व्यवस्थामाथि प्रश्न उठेको पनि उनले बताए। 'प्रश्न गर्नेलाई लखेटिएको छ, जनताको अपमान गरिएको छ। यसलाई रोक्न र नेतालाई खबरदारी गर्न सडकमा आन्दोलन गर्न लागेका हौं,' संग्रौलाले भने।

कार्यक्रमका सहभागीले लोकतन्त्र बलियो बनाउन सबै दल बलियो बन्नुपर्नेमा जोड दिए। प्राध्यापक कृष्ण खनाल, पहिचानको आन्दोलनमा सहभागी निरन्ती तुम्बापो, डा. रामजी रामलगायतले सरकार व्यक्तितन्त्र रोक्न र नेताराज अस्वीकार्य भएको बताए। *(प्रशिक्षार्थी)*

सम्पादकीय

# सुनौलो भविष्य निश्चित छ किनकि युवा पुस्ता तयार छ

समाजले सबैजसो पेसा, संस्था र जिम्मेवारीमा युवाको प्रतिनिधित्व र हस्तक्षेपकारी भूमिकाको खोजी गर्न थालेको छ । युवाले पनि कृषिदेखि सूचना प्रविधि, रोजगारीदेखि लगानी र अनुसन्धानदेखि उद्योगसम्म उपस्थिति बढाउँदै लगेका छन् । आफ्नो भूमिकामा नयाँपन र नयाँ आधार सिर्जना गरेका छन् । विश्वमा भएका नवप्रवर्तनबारे सबैभन्दा पहिले जानकारी पाउने नै युवा भएकाले उनीहरूसँग समस्या र सम्भावना पहिल्याउने शक्ति पनि तीक्ष्ण हुन्छ । त्यसैले यतिबेला युवालाई हौसला आवश्यक छ ।

युवा भन्नासाथ दुई पक्ष जोडिन्छन् । पहिलो, उमेर । अन्तर्राष्ट्रिय संस्था तथा देश विशेषले आफूअनुकूल उमेरको सीमा निर्धारण गर्ने गर्छन् । जस्तो कि, संयुक्त राष्ट्रसंघ तथा विश्व बैंकले १५ देखि २४ वर्षको उमेर समूहलाई युवा भनेको छ । नेपालको राष्ट्रिय युवा नीतिअनुसार १६ देखि ४० वर्षको उमेर समूहलाई युवा भनिएको छ । २०७८ सालको जनगणनाअनुसार यस्तो जनसंख्या ४२.५६ प्रतिशत छ । उमेर मुख्यतः ऊर्जा र आँटसँग जोडिन्छ । दोस्रो, नयाँ विचार, नयाँ चिन्तनशैली, समस्या समाधानको नयाँ बाटो पहिल्याउन सक्ने व्यक्ति वा समूह पनि युवा नै हो । यो अवस्था त्यतिबेला बन्छ, जतिबेला व्यक्ति स्वयंले समाजका बृहत् सत्यसँग साक्षात्कार गर्छ । स्वयंलाई अद्यावधिक गर्छ । मुख्यतः समयसँग आफूलाई सान्दर्भिक बनाउँछ । त्यसैले युवाको सन्दर्भमा चर्चा गर्दा यी दुई पक्षलाई एकै ठाउँमा राखेर हेर्नुपर्छ । जुन समाजमा यी दुई पक्षको मिलन हुन्छ, त्यहाँ समृद्धिको सम्भावना पनि बढी नै हुन्छ ।

आज नेपालको राजनीतिमा नयाँ अनुहारहरूको खोजी भइरहेको छ । गत निर्वाचनमा युवा र नयाँ उम्मेदवारप्रति मतदाताको चाहना प्रकट भएको थियो । लगभग ४० प्रतिशत स्थानीय सरकारका जनप्रतिनिधिमा ४० वर्षमुनिका युवा नै निर्वाचित भएका छन् । स्थानीय तह, प्रदेशसभा र प्रतिनिधिसभामा युवाको उपस्थितिले गुणात्मक प्रभाव पारेको कैयौं उदाहरण पाइन्छन् । आगामी दिनमा युवा उम्मेदवारप्रतिको चाहना र युवाको उपस्थिति थप बलियो बन्दै जाने निश्चित छ । उसै पनि ७० वर्ष हाराहारीमा पुगिसकेका प्रायः पार्टीका नेतृत्व वर्गसँग समाजको गति पहिल्याउने अद्यावधिक ज्ञान र सीप नभएकोमा समाज विश्वस्त भइसकेको छ । उमेरकै कारणले पनि अब उनीहरूको बहिर्गमनको समय आइसकेको छ । त्यसैले अबको एक दशकभित्रै राजनीतिको बागडोर नयाँ पुस्तामा आउने निश्चित छ । त्यसलाई नयाँ पुस्ताले कति आफूतिर तान्न सक्छ भन्नेचाहिँ प्रतीक्षाको विषय छ । तर राजनीति अहिलेको जस्तो 'जमेको पोखरी' को हालतमा नरहने निश्चित नै छ । त्यसपछि नेपालको राजनीति पुनः आशातर्फ फड्को मार्न सक्छ ।

राजनीति त एउटा क्षेत्र मात्रै भयो । सूचना प्रविधि, विज्ञान, कूटनीति, कानुन, प्रशासन, स्वास्थ्य, शिक्षा, कृषि, खेलकुद, साहित्य, फिल्म, उद्यमजस्ता क्षेत्रमा युवा उपस्थिति एकसाथ बलियो बन्दै छ । अझ 'जेन जी' पुस्ताकै हस्तक्षेपकारी उपस्थिति सम्भव बन्दै छ । नयाँ-नयाँ क्षेत्र पहिचान गरेर त्यसलाई आफ्नो व्यवसाय वा कार्यक्षेत्र बनाएका, रोजगारी सिर्जना गरेका पनि छन् । नेपालमै बसेर विदेशीलाई सूचना प्रविधि सेवा निर्यात गरिरहेका करिब साढे ६६ हजार आईटी जनशक्तिमार्फत वार्षिक ६७ अर्ब रुपैयाँभन्दा बढी आम्दानी भइरहेको अध्ययनमा देखिएको छ । यस्तो पेसामा जोडिने प्रायः नयाँ पुस्ताकै छन् । युवाको यस्तो उपस्थितिले समाजलाई अझै बढी ऊर्जा दिइरहेको छ । किनकि, उनीहरूसँग नयाँ पुस्ताले आफूलाई 'कनेक्ट' गर्न सक्छ । हौसला र आदर्शको रूपमा लिन सक्छ । यो पुस्ताको सोच्नेदेखि अभिव्यक्तिशैली नै नयाँ हुने भएकाले समाजको आवश्यकता र आकांक्षालाई नै नयाँ रूपमा परिभाषित गर्न सक्छ, जुन नयाँ पुस्ता सापेक्ष हुनेछ । यतिबेला राज्यका नीति र नेतृत्वसँग उनीहरूको ऊर्जा र उर्वरता, चिन्तन र चेतना, गति र गन्तव्य पहिल्याउन सक्ने क्षमताको आवश्यकता छ । त्यसले नै हरेक क्षेत्रमा पुस्तान्तरणलाई सहज बनाउन सक्छ ।

युवाबारे चर्चा हुँदा नछुट्ने अर्को एउटा प्रसंग छ- युवा जति सबै बाहिर छन् । ठोस तथ्यांक नभए पनि करिब ५० लाख युवा अध्ययन वा श्रमका लागि देशबाहिर रहेको आकलन गरिन्छ । कुनै पनि देशका युवा आफ्नो सम्भावना पछ्याउँदै विश्वका अन्य भूगोलमा पुग्नु स्वाभाविक मान्नुपर्छ । यसलाई आशा वा निराशाको मापनको आधार बनाउनु हुँदैन । अध्ययनका लागि गएकाहरूले नेपाल फर्किएर आफ्नो ज्ञान र चेतनाको उपयोग गर्ने आधार पनि बनिरहेको छ । त्यसरी फर्किएकाहरू राजनीतिदेखि अन्य क्षेत्रमा जोडिएका छन् । जसले सम्बन्धित पेसामा जोडिएका पुराना पुस्ता वा जोडिन चाहेका नयाँ पुस्ताले अध्ययन वा बृहत् चेतनाको आवश्यकताबोध गर्नेछन् । त्यसले सम्बन्धित पेसाको गुणस्तर वृद्धिमै सहयोग पुग्छ । जो विदेशबाट तत्काल फर्किंदैनन् उनीहरूले पनि डायस्पोराको शक्तिका रूपमा काम गरिरहेका छन् । देशका बौद्धिक पुँजीका रूपमा काम गरिरहेका छन् । निष्कर्ष यही हो कि, देशलाई अगाडि बढाउन युवा पुस्ता परिपक्व भइसकेको छ । त्यसले नै नेपाललाई सुनौलो युगमा पुर्‍याउनेछ ।

# बेचिएका सपनाहरूको परिणति

शब्द साक्षी

सीके लाल

उच्च श्रेणी, सवर्ण 'जनैजाति' र मध्यमवर्गका नेपालीहरूमध्ये दुई प्रवर्गका व्यक्तिहरू औधि वाचाल हुन्छन् । सन् २००६ पछिको परिवर्तनलाई सन् २०१५ पछि उल्लेख्य रूपले संकुचित गरिसकिएको भए तापनि एकथरी हुनेखाने र जान्नेसुन्ने जमातलाई गणतन्त्र, संघीयता, बहुलता, विविधता, समानुपातिक समावेशिता, सकारात्मक विभेद र सामाजिक न्यायजस्ता अभिव्यक्तिहरू सुन्ना साथ नैं प्रत्युर्जता (एलर्जी) हुन्छ । पहिले तिनको अनुहार रातोपिरो हुन्छ । त्यसपछि जिब्रो चिलाउन थाल्छ । अनि ती धाराप्रवाह प्रवचन दिन सुरु गर्छन् । तिनले आफ्नो संरचनात्मक लाभलाई अस्वीकार गर्छन् र आफूहरूलाई सक्षमतन्त्रको स्वाभाविक उत्पाद साबित गर्न भए/नभएका परिकल्पित तथ्य तेर्स्याउन थाल्छन् ।

प्रतिस्पर्धात्मक प्रक्रियामार्फत चयन भएकाले नेपालको शासकीय संभ्रान्त योग्य र निपुण रहेकामा तिनलाई कुनै शंका छैन । देशको भविष्य 'हामीजस्ता मान्छेहरू' अर्थात् 'हाजमा' प्रवर्गको हातमा मात्र सुरक्षित रहन सक्छ भन्ने कुरामा ती दृढ र आश्वस्त छन् । कुनै दरबारसँग नजोडिएका, न कुनै गोर्खाली थरघर, न त बत्तीस कोठी साहूमहाजनको विरासत, न कुनै फौजी वा निजामती खानदानसँग बिहेवारी तर फगत संघर्षका बलमा सन् २००८ पछि राष्ट्रिय राजनीतिमा प्रभाव जमाउन सफल मधेशी र माओवादीजस्ता बाहिरिया र व्यावहारियाहरूको राजनीतिक तागत तिनलाई अद्यापि 'हजम' हुन सकेको छैन ।

हाजमा प्रवर्ग कहिले सूर्यनाथ उपाध्यायको गुणगान गर्दछ, कहिले सुशीला कार्कीको जयजयकार गर्छ, कहिले बालेन शाहलाई बोक्छ र कहिले रवि लामिछानेका पछाडि कुद्छ । तर मूलधारका राजनीतिकर्मीहरूसँग सबभन्दा बढी फाइदा उठाए पनि तिनका बारे सकारात्मक कुरा कदापि गर्दैन ।

सन् १९९० पछिको 'वैश्वीकरण, निजीकरण एवं खुलापन' अर्थराजनीतिले गर्दा आरामदायी प्रवर्गभित्र पर्न पुगेका विभिन्न थरीका सल्लाहकार, परामर्श व्यवसायमा लागेर नाम र दाम कमाउन सफल पेसाकर्मी, गैसस उद्यममार्फत द्विपक्षीय एवं बहुपक्षीय दाताहरूसँग जोडिएर 'संभ्रान्त नागरिक समाज' मा दरिएका प्रचालक, विस्तारित बजारले गर्दा मनग्गे पुस्तैनी सम्पत्तिको भाडा खाने 'समाजसेवी' एवं विप्रेषण अर्थतन्त्रसँग सम्बद्ध सहकारीलगायत वित्तीय उपक्रम, खाजाघर, भट्टी पसल, क्याफे र जग्गा व्यापारका कारोबारीहरू फुर्सदिलो समूह (फुस) पनि सन् २००८ पछिको परिवर्तनबाट असन्तुष्ट जमातका अभियन्ताहरू हुन् । तिनलाई राजनीति मन पर्दैन, राजनीतिकर्मीलाई गाली गर्न भने असाध्यै मन पर्छ । ती चर्को स्वरमा सोध्छन्– 'युवा बाहिरिए, विदेशी हस्तक्षेप बढ्यो, देश डुब्न लाग्यो, नागरिक समाज कहाँ छ ?' त्यसपछि एक-दुई पेग अरू धोकेर मस्त सुत्छन् । एउटा कुरामा भने हाजमा र फुस प्रवर्गका सार्वजनिक प्रवक्ताहरूको कुरा मिल्छ– मौसमअनुसार ट्युनिक फेर्न खप्पिस भएकाले होला, तिनका चासो र चिन्ता बडो समसामयिक प्रकृतिका हुन्छन् । हावा, पानी र माटो सुहाउँदो उत्तेजक गफ जोत्न तिनलाई कसैले सक्दैन ।

बजेट प्रस्तुत भएपछि चल्तापुर्जा सबैलाई आफ्नो बजार विस्तारको सुर्ता हुन्छ त्यसैले अगस्ट र सेप्टेम्बर विकासका विभिन्न आयामबारे छलफल गर्ने मौसम हो । सोह्रश्राद्ध लागेपछि धर्म, परम्परा र संस्कृति एवं तिनमा देखिएका तथाकथित विकृतिहरूको सुर्ता सेप्टेम्बर-अक्टोबरदेखि दसैं एवं तिहारजस्ता 'राष्ट्रिय पर्व त्योहार' नसकुन्जेल नोभेम्बरसम्म लम्बिन्छ । सन् १९६० को शाही सैनिक 'कू' सम्झाउने महेन्द्र स्मृति दिवस, गोर्खाली विजेताको सम्मानमा मनाइने पृथ्वी जयन्ती, नारायणहिटी हत्याकाण्डपछि विस्मृतितिर धकेलिएका राजा वीरेन्द्रको जन्मजयन्ती, अन्तर्राष्ट्रिय नयाँ वर्षको प्रारम्भिक दिनलाई नव-नामकरण गरिएको टोपी दिवस र सन् २००५ को फेब्रुअरी प्रथम शाही-सैनिक 'कू' जस्ता अवसरहरूले गर्दा डिसेम्बर-जनवरीतिर अनुदारवादीहरूमा राष्ट्रवादको उन्माद बेपत्ता बढ्छ । फेब्रुअरी र मार्च शासन र सत्ताको दुरवस्थाबारे घोत्लिने समय हो । अप्रिल-मेदेखि जुनसम्म प्रजातन्त्रको स्वास्थ्य अवस्था हेरेर दुःखमनाउ गरिन्छ । तदोपरान्त जुलाई-अगस्ट लागेपछि फेरि विकासे बहसमा फर्किएर नयाँ चक्र सुरु हुन्छ । जलवायु परिवर्तनले गर्दा मौसम छ्यासमिस भएजस्तै सार्वजनिक वृत्तका सरोकारहरू पनि केही मिश्रित बन्न पुगेको भने हुन सक्छ ।

भ्रष्टाचारबारे गहिरो चासो र चिन्ता प्रकट गरेर सामाजिक रूपमा सचेत र जागरुक नागरिक हुनुको दृश्य प्रमाण प्रस्तुत गर्ने मेसो हालसालै प्रकाशित ट्रान्सपरेन्सी इन्टरनेसनलको करप्सन परसेप्सनस् इन्डेक्स अर्थात् भ्रष्टाचार धारणा सूचकांक (सीपीआई वा भधासू) प्रतिवेदन, सन् २०२४ ले मिलाइदिएको छ । सार्वजनिक क्षेत्रमा व्याप्त भ्रष्टाचारबारे सर्वेक्षण समूहको धारणा मापन गर्ने ताजा भधासूअनुसार ३४ अंक पाएर नेपाल १८० देशमध्ये १०७ औं स्थानमा छ । भधासू सूचकांकले नाफा क्षेत्रको लगानी तथा गतिविधि सञ्चालनका लागि कायम रहेको सार्वजनिक निकायमा व्याप्त लेनदेनको अवस्थालाई जनाउँछ । नितान्त पश्चिमा अवधारणामा आधारित प्रतिवेदनले कमजोर देशहरूमा व्याप्त प्रजातन्त्रको दुरवस्था, सार्वजनिक शिक्षा र स्वास्थ्य सेवाको अपर्याप्तता, सामाजिक न्याय सुनिश्चित गर्न नसकिने परिस्थिति, रोजगारको अभाव वा आर्थिक असमानताजस्ता कुनै पनि भ्रष्टाचारका स्थानीय कारक तत्त्वहरूलाई केलाउँदैन । उदाहरणका लागि भधासू प्रतिवेदनका रचनाकारहरूलाई सायद नेपालमा व्याप्त चाकरी, चुक्ली र चाप्लुसी (चाचुचा) संस्कारबारे कि त पर्याप्त जानकारी छैन वा तिनले त्यस्ता बाध्यात्मक र प्रवृत्तिजन्य तत्त्वहरूको पूरै बेवास्ता गरेका छन् ।

## काजलको कोठरी

सन् २०२४ को अर्थशास्त्रको नोबेल मेमोरियल पुरस्कारका सहविजेताहरूमध्येका अर्थशास्त्रीद्वय जेम्स रोबिन्सन एवं ड्यारोन एसेमोग्लुले केही राष्ट्रहरू किन समृद्ध हुन्छन् र अरू किन असफल हुन्छन् भन्ने कुरा केलाएर लेखेका र सन् २०१२ मा पहिलो पटक प्रकाशित पुस्तक 'ह्वाई नेसन्स फेल' को सारतत्त्व अधिकांश नेपालीलाई अनुभवजन्य ज्ञानका आधारमा उहिलेदेखि थाहा छ– शोषणकारी राज्यमा शासक सप्रिन्छन्, समावेशी राज्यमा सामान्यजनको जीवनमा सुधार भएर सबैको हित सुनिश्चित हुन्छ । सामाजिक परिवर्तन, सांस्कृतिक उन्नयन एवं राज्यको रूपान्तरणमार्फत आर्थिक उन्नति हासिल गर्नु पीडादायी, सुस्त र लामो प्रक्रिया हो । त्यसैले जुनसुकै वर्ण र वर्गका महत्त्वाकांक्षी व्यक्तिहरू 'शासक समूह' मा सामेल हुन दोयम वा त्यसभन्दा पनि तलको भूमिका स्वीकार गर्न सहर्ष राजी हुन्छन् । समस्या के भइदिन्छ भने, स्थायी सत्ताले नवप्रवेशी संभ्रान्तलाई सहजै स्वीकार गर्दैन । तिनलाई विभिन्न किसिमको आरोप लगाएर गलहत्याउने प्रयत्न सदैव चलिरहन्छ । शासकीय समूहमा स्थान बनाउन लागिपरेकाहरूमाथि लगाइन सक्ने सबभन्दा सहज आक्षेप आर्थिक अपचलनको हो । संभ्रान्त प्रश्रय नपाएका वा चाचुचा कलामा पोख्त नभएमा खाए वा नखाए जस्तोसुकै अवस्थामा आरोपमुक्त कुनै पनि हालतमा रहन नसक्ने परिस्थितिले गर्दा 'तलबाट खाने र माथितिर ख्वाउने' नेपालको सार्वजनिक क्षेत्रको चलनले अधीनस्थ समुदायका केही व्यक्तिलाई पनि प्रशस्त लाभ पुर्‍याइरहेको हुन्छ । त्यसैले 'भ्रष्टाचार विरोध' सत्तासँग जोडिएकाहरूको वैरी साँध्ने वा स्वयंलाई स्वच्छ साबित गर्न सार्वजनिक खपतका लागि उत्पाद गरिएको नारा मात्र रहँदै आएको छ ।

अप्रिल-मेतिर प्रजातन्त्र, लोकतन्त्र र गणतन्त्रको दुरवस्था देखाउँदै नाम मात्रको संघीयता, शासकीय संभ्रान्तको बदनियतले निरस्तजस्तै बनाइएको समावेशिता एवं सनातनि प्रकृतिको तथाकथित धर्मनिरपेक्षताविरुद्ध प्रायोजित कोकोहोलो पुनः सुरु हुनेछ । यो नेपाल न हो, यहाँ हरेक परिवर्तनपछिको राजनीतिक संघर्षबाट दुई-चार प्रतीकात्मक बाहिरियाहरूको सहवरण गर्दै खस-आर्य स्थायी सत्ता झन् बढी प्रभावशाली भएर पुनःस्थापित हुन्छ । यो दुश्चक्र सितिमिति तोडिने सम्भावना कतै देखिँदैन ।

अग्रजहरूबाट सुनेको असंलक्ष्य (अपोक्रिफल) कथ्य भएकाले प्रसंगको प्रामाणिकताबारे ठोकुवा गर्न सकिँदैन, तर सत्तासीनहरूको सांकेतिक मनोवृत्ति देखाउन चन्द्रशमशेरका सुब्बा ताराप्रसाद पन्तको कथा विचारोत्तेजक ठहरिन सक्छ । पहाडको पुर्ख्यौली थलो पाल्पादेखि मधेशको कपिलवस्तु, रूपन्देही र नवलपरासी हुँदै बारा जिल्लासम्म अथाह जग्गाजमिन जोडेका ताराप्रसादको सम्पन्नताबारे भनिन्थ्यो अरे– 'जिल्लामा बारा र सुब्बामा तारा' समृद्ध संभ्रान्तलाई होच्याउने हिम्मत सामान्यजनमा हुँदैन, तिनका खुट्टा तान्ने प्रायशः प्रतिस्पर्धी संभ्रान्त नै हुन्छन् । उनको भव्य हवेली र सानसौकत देखेर कसैले नेपाल दरबारमा कुरा लगाएछन्– 'ताराप्रसादको चुरीफुरी बढ्तै भो महाराज' भन्छन्, त्यसपछि भ्रष्टाचारले डामेर सर्वस्वहरण गरेर देशनिकाला गर्न सहज हुने भएकाले नै पण्डित खानदानका जमिनदारलाई सुब्बा बनाइएको थियो । पश्चिमको प्रतिष्ठित बाहुन घरानाका भएकाले ताराप्रसादका नातेदार वा शुभचिन्तक नेपाल दरबारभित्र पनि थिए होलान् । तिनले बेलैमा उनलाई सचेत गराएछन् । सम्भावित परिणतिबाट जोगिन तत्कालै आफ्नो नियुक्तिका लागि महाराज चन्द्रप्रति कृतज्ञता जनाउँदै पदमा रहँदा जानी-नजानी भएको हुन सक्ने पापको प्रायश्चित यज्ञ र पूजापाठ सक्काएर पण्डित खानदानका सुब्बाले राजीनामा गरेर आफ्नो श्रीसम्पत्ति जोगाएका थिए । प्रसंगवश, पञ्चायतकालका प्रभावशाली अर्थशास्त्री, कूटनीतिकर्मी एवं राजनीतिकर्मी यादवप्रसाद पन्त सुब्बा ताराप्रसादका नाति थिए ।

> भ्रष्टाचारका हानिकारक प्रभाव एवं परिणामहरूबारे लामो र प्रचारात्मक व्याख्यान दिन सजिलो छ तर के समग्र समाज सदाचारका लागि तयार छ ?

चन्द्रशमशेरलाई कसैले 'भ्रष्ट' भन्दैन किनभने उनले राज्य संयन्त्रको दुरुपयोग र जनताको शोषण गर्ने 'अधिकार' सत्तापलटका लागि गोत्रहत्याजस्ता षड्यन्त्रमा सामेल भएर हासिल गरेका थिए । राजा पृथ्वीनारायणले 'घूस लिन्या र दिन्या' कर्मबारे दिएको कथित दिव्योपदेशको खुब चर्चा हुन्छ तर उनले विजित क्षेत्रको जग्गा जमिन त्यहाँका रैथानेहरूबाट खोसेर आफ्ना लडाकुहरूलाई बाँडेको प्रसंग मात्र उपक्याउनेलाई समेत ठाडै देशविरोधी ठहर्‍याइन्छ ।

ट्रान्सपरेन्सी इन्टरनेसनलले नै पनि व्यक्तिगत लाभका लागि सार्वजनिक पद वा अवस्थाले प्राप्त शक्तिको दुरुपयोगलाई भ्रष्टाचार भनेर परिभाषित गरेको छ । भ्रष्टाचारले जनविश्वासलाई घटाउँछ, प्रजातन्त्रलाई कमजोर बनाउँछ, आर्थिक विकासमा बाधा पुर्‍याउँछ र त्यससँगै असमानता, गरिबी, सामाजिक विभाजन र वातावरणीय संकटलाई अझ बढाउँछ भन्ने मान्यताहरू यथार्थपरक छन् । तर स्वपोषित शिष्टाचार रूखजस्तो तलबाट माथि उक्लिने एवं परजीवी भ्रष्टाचारको लहरो माथिबाट तलतिर फैलिने अन्तर्सम्बन्धलाई सम्बोधन नगरेसम्म सार्वजनिक नैतिकताका मूल्य र मान्यतामा भइरहेको निरन्तर पतनलाई सम्बोधन गर्न सकिँदैन । भ्रष्टाचारका हानिकारक प्रभाव एवं परिणामहरूबारे लामो र प्रचारात्मक व्याख्यान दिन सजिलो छ तर के समग्र समाज सदाचारका लागि तयार छ ? प्रश्नहरू असजिला छन्, उत्तर भने नखोजी सुख छैन । निजामती र फौजी तलबजीवी (सैलरीम्यान), सुविधाभोगी निर्वाचित पदाधिकारी एवं लेनदेनका सहजकर्ताहरूको संख्या बढीमा १० लाख जति होला । तीमध्ये लेनदेनमा लाभान्वित हुन सक्ने जमात बढीमा ३ लाख हाराहारी होला कि ? त्यो भनेको कुल जनसंख्याको १ प्रतिशत मात्रै हो । बाँकी ९९ प्रतिशतले नचाहेसम्म भ्रष्टाचार न्यूनीकरणले गति लिने कुनै सम्भावना छैन् ।

छिमेकी भारतका केही पाठहरू सोचनीय देखिन्छन् । प्रधानमन्त्री नरेन्द्र मोदीको 'न खाऊंगा ना खाने दूंगा' नारा बकम्फुसे ठहरिएको छ– उनी सत्तामा आउँदा भधासूमा भारतको स्थान ८५ थियो, १० वर्षभित्र त्यो ११ स्थान खस्केर ९६ मा पुगिसकेको भए तापनि ठूला चन्दादाता र बहुसंख्यक मतदाता उनलाई नै पत्याउँछन् । भारतीय हिन्दुत्ववादी राजनीतिका हर्ताकर्ताहरूले अन्ना हजारे, अरविन्द केजरीवाल र किरण बेदीजस्ता तिनताकाका सामाजिक कार्यकर्ताहरूलाई अगाडि सारेर अपेक्षाकृत सौम्य, सज्जन एवं स्वच्छ छविका प्रधानमन्त्री मनमोहन सिंहका विरुद्ध सन् २०११ मा राजधानी नयाँदिल्ली केन्द्रित 'इन्डिया अगेंस्ट करप्सन' आन्दोलन सुरु गराएका थिए । युद्धकालमा बाहेक मानव इतिहासमा व्यक्तिगत सम्पत्तिमाथि सबभन्दा ठूलो हमलाका रूपमा सन् २०१६ को भारतीय विमुद्रीकरणलाई लिइने गरिन्छ । त्यस्तो भ्रष्ट राजनीतिक आचारका बारे अहिलेसम्म पनि कसैले केही बोलेका छैनन्, त्यो किनभने आफूभन्दा अरूलाई ठूलो आघात परेको हुन सक्ने धारणाले सामान्यजनलाई समेत आश्वस्त तुल्याउने रहेछ । उम्किनै नसकिने भ्रष्टाचारको सार्वजनिक स्वीकार्यताबारे सन् १९७० दशकको लाकहिड विमान खरिद प्रकरणमा जापानका प्रधानमन्त्री तनाका काकुईको एउटा बहुउद्धृत अभिव्यक्ति छ– सरकारी कारोबार भएको छ भने लेनदेन भएकै होला ।

## पारदर्शी पर्खाल

कौटिल्यको उक्ति 'पौडी खेलिरहेको माछाले पानी खाएको पत्ता लगाउन असम्भव भएजस्तै सार्वजनिक पदाधिकारीको हेराफेरी ठम्याउनै सकिन्न' सँग मिल्दोजुल्दो प्रधानमन्त्री तनाकाको टिप्पणीले स्वच्छ कार्य सम्पादनको अभिभारा अनुसन्धान र अभियोजन अधिकारीहरूभन्दा पनि प्रत्यक्ष रूपले जिम्मेवार अधिकारीलाई दिन्छ । भ्रष्टाचार न्यूनीकरण सामाजिक जागरणको राजनीतिक कार्यसूची हो, त्यसलाई अख्तियार दुरुपयोग अनुसन्धान आयोगजस्ता संस्थाहरूको सुदृढीकरणबाट सम्बोधन गर्न सकिन्छ भन्ने आश्वासन बाँड्नेहरूको नियतमा शंका गर्नुपर्ने हुन्छ । कबीरको एउटा दोहा छ–'काजर की कोठरी में केतो ही सयानो जाय, एक लिक काजर की लागि है तै लागि है' अर्थात् काजलको कोठरीमा जति नै सतर्क व्यक्ति छिरे पनि बेदाग निस्किन सक्दैन । आखिर अख्तियार दुरुपयोग आयोगकै पदाधिकारीहरूले गर्न सक्ने सम्भाव्य अधिकार दुरुपयोग रोक्न मंगल ग्रहका प्राणी बोलाउन सकिँदैन । राजनीतिक नेतृत्वको आचरणमा सुधार ल्याउने दबाब सिर्जना गरेर आदर्श निर्माणको प्रयत्न भने गर्न सकिन्छ ।

प्रसंग यो पनि सम्भवतः असंलक्ष्य (अपोक्रिफल) नै हो तर तत्कालीन सोभियत संघका विलासी नेताहरूको खिल्ली उडाउन एउटा दिल्लगी एकताका खुबै प्रचलित थियो । भनिन्छ, सन् १९७० को दशकतिर सोभियत संघका तत्कालीन सर्वेसर्वा लियोनिद इल्लिच ब्रेझनेव बडो गर्वका साथ आफ्नी आमालाई आफ्नो सानदार कार्यालय र झाडफानुस (शैन्डलियर) द्वारा सुसज्जित छुट्टी बिताउने आरामगाह (डैचा) देखाउन लगे अरे । छोराको भव्य जीवनशैली देखेर उनकी आमा प्रसन्न त भइन् तर बडो चिन्तित हुँदै सोधिन्– 'तर लियोनिद, बोल्सी कम्युनिस्ट फर्केर आए भने के गर्ने नि ?' कथा मनगढन्त हुन सक्छ तर रूपकको सान्दर्भिकतामा शंका गर्न सकिँदैन । आफ्ना दलका समाजवादीहरूको जीवनशैली देखेर बीपी कोइरालाको आत्मा धुरुधुरु रुँदो हो । नेपाली साम्यवादी पनि सोभियत संघ, चीन वा उत्तर कोरियामा जस्तै विलासी भएको देख्दा मदन भण्डारीलाई आफ्नो साइकलको सवारी झलझल्ती याद आउँदो हो । समय फेरिएको अवश्य हो तर शाह-राणा संभ्रान्तहरूको सोख पाल्न गणतान्त्रिक राजनीतिकर्मी नहतारिए हुन्थ्यो । आम्दानीको वैध स्रोत र सार्वजनिक रूपमा देख्न सकिने जीवनशैलीका बीच कुनै तालमेल नहुनु सायद भ्रष्टाचारलाई सार्वजनिक स्वीकार्यता प्रदान गर्ने मुख्य तत्त्व हो ।

सहजकर्तामार्फत सेवा शुल्क नबुझाई सार्वजनिक सेवासम्ममा सामान्यजनले पहुँचसमेत पाउँदैनन् । कुनै बेला त्यस्ता काम राजनीतिक महत्त्वाकांक्षा भएका व्यक्तिहरूले स्वयंसेवी भएर गर्ने गर्दथे । आफ्ना प्रश्रयदाताहरूको सहमति नभए पनि सहबेगर ती स्वयंसेवकहरू सहजकर्ताबाट बिचौलियामा रूपान्तरित भएका होइनन् । बाघले मान्छेको रगतको स्वाद पाएर आदमखोर भइसकेपछि त्यसको आदत सुधार्न असम्भव हुन्छ भन्ने भनाइ छ । विचारधारा-मुक्त मात्र नभएर सार्वजनिक नैतिकताका मूल्य र मान्यतालाई तिलाञ्जली दिएर भइरहेको राजनीतिक गतिविधिका लागि उन्मुक्त बजारलाई मात्र दोष दिएर पुग्दैन । हिन्दी कवि अवतार सिंह पाश आदर्शबाट विचलित एवं सामाजिक रूपले लक्ष्यहीन व्यक्ति इंगित गर्दै चेतावनी दिन्छन्– 'सबसे खतरनाक होता है हमारे सपनों का मर जाना' । त्यस्ता व्यक्तिहरूमा संघर्ष गर्ने हौसला बाँकी रहँदैन । त्यसलाई अझ तन्काउँदै बिलौना गर्छन् कवि राजेश जोशी– 'खतरनाक है / सपनो का मर जाना / खतरनाक है / सपनो का बिखर जाना / सब से खतरनाक है / सपनो का बिक जाना /' समृद्धि र स्थायित्वका नाउँमा सामाजिक न्यायका सपना बेच्नेहरूबाट मुक्ति पाउन निरन्तर संघर्षको कुनै विकल्प हुँदैन ।

# सम्पादकलाई चिठी

### गगनले कांग्रेसलाई बौराउन सक्लान् ?

कांग्रेसमा 'स्वतस्फुर्त' कि 'बक्सिसको' नेतृत्व भन्ने आलेखमा लेखकले नेपाली कांग्रेसको आगामी महाधिवेशनमा गगन थापा सभापतिको उम्मेदवार बन्ने र उनी नै सभापति हुने आधारहरू प्रस्तुत गरेका छन् । आलेख सम्पूर्ण रूपमा नै गगन थापाले इतिहासदेखि वर्तमानसम्म हासिल गरेका उपलब्धिहरूको व्याख्याले भरिएको छ । कुनै पनि राजनीतिक पार्टी समान विचार बोक्नेहरूको एउटा समूह हो । सामूहिक उद्देश्य हासिल गर्नका लागि सामूहिक रूपमा काम गर्ने संगठन नै राजनीतिक पार्टी हो । समूहको एउटा सदस्य त्यति नै लायक वा सक्षम हुन्छ, जति उसको समूह हुन्छ । व्यक्तिको केही विशिष्ट भूमिकाले अवश्य फरक पार्छ तर राजनीतिक पार्टीमा समूहको स्वार्थ नै अन्तिममा हाबी हुन्छ । गगन थापा समकालीन नेताभन्दा केही फरक देखिन्छन् तर नेपाली कांग्रेसले आजको दिनमा बोक्ने विचार, पार्टीको केन्द्रदेखि तलसम्मको पार्टी नेतृत्व र तिनका गतिविधि हेर्दा अब यो पार्टीमा कोही व्यक्ति आएर केही गर्दैमा चमत्कार भएर बौरिने अवस्थामा छैन ।

पार्टीका तमाम भ्रातृ संगठन, जिल्ला र पालिका तहका नेताहरू दलाली, कमिसनखोरी र राज्यदोहनमा लिप्त छन्, जुन कुरा केन्द्रबाट हेर्दा नदेखिएला तर स्थानीय स्तरमा हेर्दा स्पष्ट देखिन्छ । गगन सभापति हुने पनि तिनै नेता कार्यकर्ताको मतले नै हो । उनले त्यही काम गर्नेछन्, जसले उनीहरूको स्वार्थमा कुनै असर गर्ने छैन । राजनीतिक पार्टीको एउटा उमेर हुन्छ, व्यक्तिजस्तै पार्टी पनि वयस्क हुँदै वृद्ध हुन्छ । जसरी व्यक्तिको मृत्यु हुन्छ, त्यसरी नै आफ्नो उद्देश्य पूरा भएपछि राजनीतिक पार्टीको पनि अन्त्य जरुरी हुन्छ । अहिलेको कांग्रेस सांगठनिक, वैचारिक, नैतिकलगायत सम्पूर्ण रूपले वृद्ध पार्टी हो, जसको मृत्यु अब जरुरी भइसकेको छ ।

गगन थापाहरूले अब नेपाली जनता र राष्ट्रका निम्ति यदि केही गर्ने उद्देश्य राखेको हो भने यो वृद्ध र जीर्ण पार्टीलाई वैशाखी लगाएर डोर्‍याउन छाड्नुपर्छ । जसरी जंगलमा एउटा भीमकाय जीवको मृत्यु हुन्छ, त्यसको मृत शरीर अरू हजारौं वनस्पतिको जीवनको कारक बन्न पुग्छ । त्यसरी नै एउटा राजनीतिक पार्टीको अवसान नयाँ सोच, विचार र अभियानको प्रस्थानविन्दु बन्न सक्छ । गगन थापाहरूले त्यही नवीन सोच र अभियानको नेतृत्व गर्नु मनासिब हुन्छ, जब राजनीतिक दल वैचारिक, सांगठनिक रूपले थलिन्छ । केही व्यक्तिहरू कुनै अमुक नेताको तिलस्मी अवतारले नै पार्टी बौरिन्छ भन्ने ठान्छन् भने त्यो दिवास्वप्न मात्रै हो ।

– **मनोज लम्साल**, देवचुली-३, नवलपुर

## विदेशमा नेपाली विद्यार्थीको सुरक्षा सवाल

भारतको ओडिसाको कलिंगा इन्स्टिच्युट अफ इन्डस्ट्रियल टेक्नोलोजी (केआईआईटी) विश्वविद्यालयमा अध्ययनरत नेपाली विद्यार्थी प्रकृति लम्सालको शंकास्पद मृत्युपछि भएको घटनाले सबै नेपालीलाई गहिरो गरी सोच्न बाध्य बनाएको छ । एउटा नेपाली विद्यार्थीमाथि भारतीय नागरिकबाट दुर्व्यवहार भयो, उनले न्याय खोजिन् तर उल्टै अन्यायको सिकार हुनुपर्‍यो । यस्तो अवस्थामा विश्वविद्यालय प्रशासनले न्याय दिलाउनुपर्ने हो तर उसले नेपाली विद्यार्थीहरूलाई नै दमन गर्‍यो । सुरक्षाको माग गर्ने नेपाली विद्यार्थीहरूलाई जबरजस्ती होस्टलबाट निकालियो । के यही हो अन्तर्राष्ट्रिय शिक्षण संस्थाको चरित्र ? के विदेशी विद्यार्थीलाई हेर्ने भारतीय दृष्टिकोण यस्तै हो ?

विद्यार्थीहरू पढ्न भारत जान्छन्, परिवारले दुःख गरेर उनीहरूलाई पढाउँछन् तर त्यही ठाउँमा उनीहरूले असुरक्षित महसुस गर्नुपर्ने ? एउटा नेपाली विद्यार्थीको मृत्यु भयो तर हाम्रो सरकारले उचित कूटनीतिक पहल गर्न किन ढिलो गर्‍यो ? के हामी हरेक पटक घटना भएपछि मात्रै बोल्ने ? किन हाम्रो कूटनीति प्रभावहीन देखिन्छ ? भारतीय विश्वविद्यालयमा नेपाली विद्यार्थीहरूले अझै पनि अन्याय सहनुपर्छ भने हाम्रो राज्य संयन्त्रमाथि गम्भीर प्रश्न उठ्छ । विदेशमा अध्ययनरत हाम्रा दाजुभाइ-दिदीबहिनी सुरक्षित छैनन् भने त्यसको जवाफ कसले दिने ? यो घटनाले नेपाली समाजलाई पनि एउटा पाठ सिकाएको छ । हामी केवल सामाजिक सञ्जालमा आक्रोश पोखेर चुप लाग्ने कि दीर्घकालीन समाधान खोज्ने ? के नेपाली विद्यार्थीहरूको सुरक्षाका लागि सरकारले कुनै ठोस नीति बनाउनेछ ? वा, यो घटना पनि केही समयपछि बिर्सिइनेछ ? भारतमा मात्रै होइन, अन्य देशमा पनि नेपाली विद्यार्थीहरूले यस्तो अन्याय भोग्नुपरेको छ । अब त हामीले सोच्नुपर्छ– के नेपाली हुनु कमजोरी हो ?

अब समय आयो कि विदेशमा अध्ययन गर्न जाने हरेक नेपाली विद्यार्थी सुरक्षित रहून् भनेर राज्यले पहल गरोस् ।

– **सन्तोष सिम्खडा**, *टोकियो, जापान*

# 'डिजिटाइजेसन' आर्थिक सुधारको इन्धन

निशान्त खनाल

विश्व अर्थतन्त्र एआई, ब्लकचेन प्रविधिको उछालसँगै चौथो औद्योगिक क्रान्तिको अग्रगति जारी राख्दै गर्दा नेपालको अर्थतन्त्रमा प्रविधितर्फको यात्रा धीमै भए पनि गतिशील छ। तर, विश्व बैंकको २०२४ को प्रतिवेदनले नेपालको डिजिटल अर्थतन्त्रले जीडीपीमा २.८ प्रतिशत मात्र योगदान गरेको देखाएको छ, जुन दक्षिण एसियामा भारत (११.४ प्रतिशत), श्रीलंका (४.३ प्रतिशत) र बंगलादेश (४.५ प्रतिशत) भन्दा न्यून छ। यसले नेपालमा डिजिटल प्रविधि र अर्थतन्त्रमा यसको योगदानको सम्भावनालाई पूर्ण ध्यान दिइएको छैन भन्ने स्पष्ट पारेको छ।

### प्रगति र विरोधाभास

नेपाल दूरसञ्चार प्राधिकरणको तथ्यांकअनुसार देशभरमा मोबाइल प्रयोगकर्ताको संख्या २ करोड ९५ लाख ४५ हजार ७ सय ३० (टेलिफोन सेवाको घनत्व १२५ प्रतिशत) छ। इन्टरनेट प्रयोगकर्ताको संख्या ३ करोड ९० लाख ४१ हजार ६ सय ७ (घनत्व १५० प्रतिशत) पुगेको छ। डिजिटल भुक्तानी क्षेत्रमा नेपाल राष्ट्र बैंकको तथ्यांकअनुसार मोबाइल बैंकिङ प्रयोगकर्ताको संख्या २ करोड ६३ लाख नाघेको छ। डिजिटल वालेटको प्रयोगकर्ता संख्या २ करोड ५५ लाख छ। क्यूआर कोडमार्फत भुक्तानी संख्या औसतमा प्रतिमहिना ९० लाख पुगेको छ, जुन २०२० को तुलनामा ३० गुणा बढी हो।

यो वृद्धिले डिजिटल भुक्तानी, ई-कमर्स र सरकारी सेवाको विस्तारमा सकारात्मक प्रभाव पारेको छ। तर भौगोलिक र लैंगिक असमानताजस्ता विषय अझै सान्दर्भिक र पेचिलो देखिएको छ। कर्णाली प्रदेशमा इन्टरनेट पहुँच २५ प्रतिशत मात्र छ। बागमतीमा यो ८५ प्रतिशत छ। महिलाको डिजिटल साक्षरता पुरुषभन्दा ३० प्रतिशतले कम रहेको युनेस्कोको अध्ययनले देखाएको छ। यो अन्तर केवल प्रविधिको पहुँचमा मात्र होइन, नीतिगत अक्षमता, संरचनात्मक असमानता र सामाजिक-आर्थिक अवस्थाको प्रतिबिम्बसमेत हो। नेपालले प्रविधिको यो द्रुत विकासलाई आर्थिक कायाकल्पको अवसरका रूपमा हेर्न आवश्यक छ।

डिजिटल बैंकिङ र प्रविधिको यो द्रुत विकासले ग्रामीण क्षेत्रमा वित्तीय समावेशीकरण बढाउन मद्दत गरेको छ। तर ग्रामीण महिलाहरूमा मोबाइल बैंकिङ पहुँच २० प्रतिशत मात्र रहेको विश्व बैंकको एक अध्ययनले देखाएको छ। ई-कमर्स क्षेत्रमा २०२३ मा ३० अर्ब रुपैयाँ कारोबार भएको छ। जुन २०२२ को तुलनामा एक सय प्रतिशतले बढी हो। हाल सात सयभन्दा बढी इ-कमर्स कम्पनी दर्ता भइसकेका छन्। तर नीतिगत अस्पष्टता, डिजिटल पूर्वाधारप्रतिको अविश्वास, सेवाको गुणस्तर र विश्वसनीयताको कारणले यसको पूर्ण सम्भावना साकार हुन सकेको छैन।

सरकारी सेवाको डिजिटाइजेसनमा 'डिजिटल नेपाल फ्रेमवर्क' अन्तर्गत ४५ प्रतिशत सेवा अनलाइन सारिएका छन्। ई-भिसा प्रणालीले पर्यटन आय २५ प्रतिशतले बढाएको छ। तर ८० प्रतिशत सरकारी प्रक्रिया अझै पनि कागजातमा निर्भर छन्। कर राजस्वमा डिजिटल लेनदेन बढेपछि २२ प्रतिशतले वृद्धि भएको छ। अनौपचारिक अर्थतन्त्रले जीडीपीको ४३ प्रतिशतले ओगटेको अवस्थामा यो प्रगति अपर्याप्त छ।

### आर्थिक गतिशीलता

डिजिटाइजेसनले उत्पादकत्व वृद्धि, अर्थतन्त्रको औपचारिकीकरण, र नवप्रवर्तनमार्फत आर्थिक परिवर्तन गर्ने क्षमता राख्छ, भारत यसको सबैभन्दा राम्रो उदाहरण हो। नेपालको सन्दर्भमा यी तीनै क्षेत्रमा ठूलो सम्भावना र चुनौती पनि रहेको छ। डिजिटल साक्षरताको अभाव (ग्रामीण क्षेत्रमा ६० प्रतिशत जनता अझै डिजिटल साधन प्रयोग गर्न सक्दैनन्), साइबर सुरक्षाको जोखिम (गत आर्थिक वर्षमा १९,००० हजारभन्दा बढी साइबर अपराध दर्ता), पुँजी अभाव (भेन्चर क्यापिटल जीडीपीको ०.०२ प्रतिशत मात्र) र युवाहरूको पलायन (५५ प्रतिशत आईटी स्नातक विदेश पलायन) उल्लेखनीय छन्। यसको समाधानका लागि ठोस नीतिगत कदम चाल्नु आवश्यक छ।

नेपालको डिजिटल रूपान्तरणले अर्थतन्त्रलाई तीन प्रमुख आयाममा सशक्त बनाउने क्षमता राख्छ- उत्पादकत्व वृद्धि, संस्थागत दक्षता र विश्वबजारमा एकीकरण। डिजिटल प्रविधिले कृषि र साना तथा मझौला उद्योगजस्ता पारम्परिक क्षेत्रहरूलाई तथ्यांक-आधारित निर्णय, स्मार्ट सप्लाई चेन र ई-कमर्समार्फत उत्पादनशीलतामा क्रान्ति ल्याएर जीडीपी वृद्धिलाई टिकाउँछ। यसले अनौपचारिक अर्थतन्त्रलाई औपचारिक बनाउँदै कर राजस्व बढाउँछ। जसले सरकारलाई स्वास्थ्य, शिक्षा र पूर्वाधारमा लगानी गर्न सक्षम बनाउँछ। साथै, डिजिटल स्टार्टअप र 'गिग इकोनोमी' ले युवाहरूको रोजगारी र उद्यमशीलतालाई प्रोत्साहन दिई जनसांख्यिकीय लाभांशको सदुपयोग गर्छ। विश्व बजारमा प्रतिस्पर्धामा अग्रसर हुन्। डिजिटल पूर्वाधारले नेपाली उत्पादनहरूलाई अन्तर्राष्ट्रिय गुणस्तर र मूल्य शृंखलासँग जोड्छ, जसले निर्यात बढाउँछ र व्यापार घाटा घटाउँछ। दिगोपनका दृष्टिले डिजिटाइजेसनले हरित प्रविधि र रिमोट कार्यलाई बढावा दिई कार्बन उत्सर्जन घटाउँदै मानव तथा अन्य संसाधनको दक्ष उपयोग सुनिश्चित गर्छ। त्यसैले पनि डिजिटाइजेसन नेपालको आर्थिक विकासलाई मात्र होइन, समावेशिता र पर्यावरणीय सन्तुलनलाई पनि अग्रसर बनाउने एक सामरिक औजार हो।

डिजिटाइजेसन नेपालको आर्थिक विकासलाई मात्र होइन, समावेशिता र पर्यावरणीय सन्तुलनलाई पनि अग्रसर बनाउने एक सामरिक औजार हो

### कृषि र लघु उद्यममा सुधार

नेपालको कृषि क्षेत्रले जीडीपीको २५ प्रतिशत योगदान गर्छ। तर यसको उत्पादकत्व विश्वस्तरमा न्यून छ। परम्परागत खेतीपाती, सीमित बजार पहुँच र प्रविधिको अभावले यसलाई पछि पारेको छ। यस समस्याको समाधानका लागि डिजिटल प्रविधिमा सहयोगी हुन सक्छ। भारतको 'किसान एप' ले कृषकहरूलाई मौसम पूर्वानुमान, बजार मूल्य र सिँचाइ प्रविधिको जानकारी दिएर उत्पादनमा २० प्रतिशत वृद्धि गरेको छ। नेपालमा पनि यस प्रकारको एकीकृत सेवा प्रदान गर्न सक्ने किसानमुखी प्रविधि लागू गर्ने अवसर रहेको छ। तर, ग्रामीण इन्टरनेट पहुँच र डिजिटल साक्षरताको अभावजस्ता बाधाहरूलाई सम्बोधन गर्न जरुरी छ। साना र मझौला उद्यमहरू पनि डिजिटल प्लाटफर्महरूको अभावमा संघर्षरत छन्। २०२४ मा नेपाली ई-कमर्सले १५ अर्ब रुपैयाँभन्दा बढी कारोबार गरेका छन्। नेपालमा हाल सञ्चालित ई-कमर्सले साना र घरेलु उद्यमलाई राष्ट्रिय बजारमा पुग्न मद्दत त गरेका छन् तर यिनको विश्वसनीयता, मूल्य शृंखला र लजिस्टिक समस्याले गर्दा ई-कमर्स व्यवसाय फस्टाउन सकेको छैन। सहरी क्षेत्रमा ई-कमर्स प्लाटफर्मभन्दा सामाजिक सञ्जालमार्फत हुने व्यापार धेरै बढेको छ। यसले क्रेता र बिक्रेतालाई सजिलो बनाए पनि यसमा साइबर सुरक्षाका चुनौतीहरू धेरै देखिएको छ। यसर्थ ई-कमर्स अथवा तुरुन्तै समान खरिदबिक्री गर्न सकिने क्विक कमर्समै जोड दिँदा अर्थतन्त्र डिजिटल हुनुका साथै कृषि र अन्य साना मझौला उद्यमीलाई व्यापार प्रवर्द्धनमा सहज हुन्छ। यसको समाधानका लागि सरकारले ग्रामीण इन्टरनेट प्राथमिकता दिनुपर्छ र साना तथा मझौला उद्यमलाई डिजिटल प्रशिक्षण कार्यक्रम सञ्चालन गर्नुपर्छ।

### वित्तीय समावेशीकरण

नेपालको अर्थतन्त्रको ४५ प्रतिशत अनौपचारिक छ। जसले राज्यलाई कर राजस्वबाट वञ्चित गरेको छ। अनौपचारिक अर्थतन्त्रका कारण सरकारले करको दायरा बढाउन सकेको छैन, डिजिटाइजेसन यसलाई औपचारिक बनाउने माध्यम हो। ई-भ्याट प्रणाली सुरु भएपछि राजस्व संकलन २० प्रतिशतले बढेको छ। तर, ८० प्रतिशत सरकारी सेवा अझै पनि कागजातमा आधारित छन्। भारतले जीएसटी नेटवर्कमार्फत कर राजस्व ५० प्रतिशतले बढाएर वार्षिक १.५ लाख करोड भारु थप संकलन गरेको छ। केन्याको एम पेसाले ग्रामीण वित्तीय समावेशीकरण बढाएर गरिबी दर २ प्रतिशतले घटाएको छ। नेपालमा मोबाइल बैंकिङले २ करोड प्रयोगकर्ता जोडेको छ तर कर प्रणालीमा यसको प्रभाव नगन्य देखिएको छ। नेपालको कर प्रणाली सुधार गर्दै नागरिक एप, राष्ट्रिय परिचय पत्र र व्यक्तिगत लेखा प्रणाली सबैको एकीकृत प्रणाली लागू गर्न सकिएको खण्डमा अर्थतन्त्रको ठूलो हिस्सा स्वतः औपचारिक हुन्छ। यसका लागि सरकारले आफ्नो लगानी बढाउन अति आवश्यक छ। सरकारी प्रविधिहरूको अपग्रेड गर्नु पनि जरुरी छ।

### स्टार्टअप र गिग इकोनोमी

नेपालमा ३५० भन्दा बढी स्टार्टअपले १ लाख भन्दा बढी युवालाई रोजगारी दिएका छन्। डिजिटल वालेट, राइड सेयरिङ, सहरी कुरियर, खाना एवं उपहार डेलिभरीलगायत साना-ठूला कम्पनीहरूले डिजिटल इकोसिस्टमलाई गतिशील बनाएका छन्। युवा फ्रिलान्सरहरूले मात्रै विदेशी प्लाटफर्मबाट वार्षिक ५० मिलियन डलर कमाइ गर्छन्। तर, ८० प्रतिशत फ्रिलान्सर अनौपचारिक रूपमा काम गर्छन्, जसले उनीहरूको सामाजिक सुरक्षा र कर योगदानलाई सीमित बनाउँछ। फिलिपिन्सले 'फ्रिलान्सर प्रोटेक्सन एक्ट' लागू गरेर गिग कामदारहरूलाई न्यूनतम पारिश्रमिक र स्वास्थ्य बिमा सुनिश्चित गरेको छ। नेपालले यस्तै नीति अवलम्बन गर्न सक्छ। नेपालमा हाल आईटी सेवामा मात्रै ६० हजार बढी युवाहरू रोजगारीमा छन्। यसमा करिब १५ हजार युवाहरू फ्रिलान्सरका रूपमा काम गर्ने गरेका छन्।

### रणनीतिक सुधार

नेपालको डिजिटल परिवर्तन केवल प्राविधिक मुद्दा होइन, यो राष्ट्रिय प्राथमिकताको विषय पनि हो। यसले उत्पादकत्व बढाउने, रोजगारी सिर्जना गर्ने र राज्यलाई सुदृढ बनाउने क्षमता राख्छ। तर, यसका लागि सरकार, निजी क्षेत्र, नागरिक समाज र अन्तर्राष्ट्रिय साझेदारहरूको प्रयास आवश्यक छ। नीतिगत सुधार, संरचनात्मक लगानी र सामाजिक समावेशीकरणबिना नेपालले डिजिटल युगमा पछि रहन सक्छ। चौथो औद्योगिक क्रान्तिको यो अवसरलाई नेपालले गुमाउनु हुँदैन। समय अहिले नै हो–रणनीतिक सोच, साहसिक निर्णय र जनसहभागिताबाट नेपालले आफ्नो डिजिटल भविष्य निर्माण गर्न सक्छ।

नेसनल ब्रोडब्यान्ड नेटवर्कलाई २०२६ सम्म सबै ७५४ स्थानीय तहमा विस्तार गर्ने, डिजिटल साक्षरता अभियानलाई प्राथमिक शिक्षाको अनिवार्य अंग बनाउने र डाटा संरक्षण ऐन लागू गर्नेजस्ता कदमहरूले डिजिटल प्रविधिप्रतिको विश्वास कायम गर्न मद्दत गर्छ। स्टार्टअपहरूका लागि सोभरिन टेक फन्डमार्फत प्रतिवर्ष ५ अर्ब रुपैयाँ लगानी गर्ने र विदेशी लगानी स्वीकृतिलाई ७ दिनमा सीमित गर्ने नीतिले नवप्रवर्तनलाई प्रोत्साहन दिन सक्छ।

सरकारले २०७६ मा 'डिजिटल नेपाल फ्रेमवर्क' घोषणा गरेको थियो तर चार वर्षमा यसको ३० प्रतिशत मात्र कार्यान्वयन भएको छ। यसको प्रमुख कारण मन्त्रालयहरूबीच समन्वयको अभाव हो। कानुनी ढाँचाको अभावले पनि समस्या बढेको छ। डाटा संरक्षण ऐन र साइबर सुरक्षा नीतिको सुधार जरुरी देखिन्छ।

अर्थतन्त्र डिजिटल बनाउँदै गर्दा सरकारी सेवाहरूको पूर्ण डिजिटाइजेसन गर्ने लक्ष्य राख्नुपर्छ। भारतको जीएसटी नेटवर्कजस्तो एकीकृत कर प्रणाली लागू गरी कर अनुपालनलाई डिजिटल बनाउनुपर्छ। ई-भ्याटलाई सबै व्यवसायहरूमा अनिवार्य बनाएर कर चुहावट घटाउन सकिन्छ। साथै, डिजिटल लेनदेनलाई प्रोत्साहन दिन कर छुटजस्ता योजना लागू गर्नुपर्छ। स्टार्टअपहरूका लागि सोभरिन टेक फन्ड स्थापना गर्ने, जसले प्रविधि आधारित उद्यमहरूलाई पुँजी र प्रशिक्षण प्रदान गर्छ। भियतनामको 'वन-विन्डो' प्रणालीजस्तो गरी विदेशी लगानी स्वीकृतिलाई १५ दिनमा सीमित गर्न सकिन्छ। नेपाली डायस्पोरालाई कर प्रोत्साहन दिई देशमा लगानी गर्न आकर्षित गर्न सकिन्छ।

निजी क्षेत्रलाई अनिवार्य साइबर सुरक्षा प्रमाणीकरण लिन बाध्य बनाउन सकिन्छ। यी सुधारहरू गर्न सकियो भने आगामी दशकमा नेपालको अर्थतन्त्र डिजिटल हुनुका साथै आकार पनि बढ्नेछ, यसले अझै सम्भावनाका ढोकाहरू खोल्दै लानेछ।

# उम्मेदवारीमा समानता

तुलसा मल्ल

रुकुमपश्चिम बाफीकोट गाउँपालिका वडा-३ दहमा ३५ वर्षअघि मेरो जन्म भएको हो। २०५७ मा रुकुम पश्चिमको स्यार्पुताल प्राविमा कक्षा ५ मा पढ्दै गर्दा अनेरास्ववियुको कोषाध्यक्ष भएँ। बैठकमा प्रतिव्यक्ति ५ रुपैयाँ लेबी उठाउँथ्यौं। कक्षा ६ पढ्न बाफीकोट गएँ। जिल्ला कमिटीमा आबद्ध भएँ। एक किसिमले राजनीतिको नसा लाग्यो।

अनेरास्ववियु नै मेरो राजनीतिको मूल ढोका थियो। २०६२ मा एसएलसी दिएँ। त्यतिबेलासम्म अनेरास्ववियुमा सक्रिय भएँ। २०६३ मा अखिल नेपाल महिला संघको जिल्ला सदस्य भएँ। त्यतिबेला पत्रपत्रिकामा लेख लेख्थें। त्यतिबेला जन्तीधारा साप्ताहिक पत्रिका निस्कन्थ्यो। पत्रिकामा नाम आएपछि खुसी लाग्थ्यो। आफन्तलाई देखाउँथें। सिस्ने एफएममा समाचार लेख्थें। जिविसमा धेरै कार्यक्रम हुन्थे। कार्यक्रमको रिपोर्टिङ गरेर एफएममा समाचार दिन्थें।

अनेमसंघमा एक कार्यकाल बिताएँ। प्रेस चौतारी हुँदै नेपाल पत्रकार महासंघमा पनि प्रतिनिधि भएँ। पत्रकारिता गर्दै स्वास्थ्य विषयमा स्नातकोत्तर पनि गरें। पढ्दापढ्दै तीन वर्षसम्म स्थानीय शासन तथा सामुदायिक विकास कार्यक्रमको सामाजिक परिचालक पनि भएँ। आर्थिक अभावपछि बिदेसिने मोडमा थिएँ। बुवालाई अपांगता भएकाले हेरचाह गर्नुपर्ने भयो। अनि विदेश जाने सोचबाट हच्किएँ।

बुवा दत्तबहादुर मल्ल एमालेको सक्रिय राजनीतिमा लागेकाले म पनि एमालेमै आकर्षित भएँ। बेला-बेलामा पहुँच स्थान नभएको सोचले मनोबल कमजोर हुन्थ्यो। तर शुद्ध मनले कर्म गर्दा फल प्राप्त हुँदो रहेछ। त्यो मैले बुझें। महिलालाई राजनीति गर्न निकै चुनौती रहेछ। अस्तित्वका कुरा पनि आउने रहेछन्। हाम्रो सफलतामा अस्तित्वको चर्चा हुने रहेछ।

अब बाँकी जीवन एमालेमै समर्पित गर्ने हो। एमालेबाट प्रत्यक्ष निर्वाचन लड्ने धोको छ। २०७९ मा कर्णाली प्रदेशसभामा समानुपातिकतर्फ खसआर्य महिला सूचीबाट प्रदेश सांसद भएँ। बन्द सूचीका लागि नाम पठाए पनि सांसद हुन्छु भन्ने लागेको थिएन। समानुपातिकका लागि नाम पठाइसकेपछि कतिपय नेताले मेरो नाम काटिदिएका थिए। ६ जना महिलाको नामसँगै मेरो नाम पठाउन नेताहरू हच्किए। मेरो नाम अन्तिम नम्बरमा थियो। मैले जिल्लामा सहमतिमा आएको नामसमेत काटियो भनेर गुनासो गरें।

जिल्लामा जे विवाद भएको त्यो कुरा पार्टी अध्यक्ष केपी शर्मा ओलीसम्म पुगेछ। उहाँबाट माननीय हुनुभयो भनेर फोन आयो। त्यतिबेला खुसीले रोएँ। बुवाको स्वास्थ्य सोध्नुभयो। बुवा बिरामी हुनुहुन्छ भन्ने थाहा थियो। अहिले पनि भेटिँदा बुवाको स्वास्थ्य सोध्नुहुन्छ।

महिला भएकै कारण मैले धेरै पीडा भोगें। ३३ वर्षको उमेरमा सांसद बन्न सफल भएँ। मैले इमानदार भएर काम गरेको देखेर पार्टीले पनि धेरै जिम्मेवारी दियो। २०७७ सालमा राष्ट्रिय भूमि आयोगको विज्ञ सदस्य भएँ। भूमिहीन सुकुम्बासीहरूका पक्षमा काम गर्ने अवसर पाउँदा एकदम खुसी लाग्यो।

समानुपातिक सांसद भनेको विधायन मात्र बनाउने रहेछ भन्ने बुझाइ छ। यो मात्र सही होइन, विधायनदेखि जनताका समस्या मुखरित गर्ने, विकास निर्माणमा सहजीकरण गर्ने काम पनि हो। तर हामीकहाँ विकास निर्माणको पहल गर्ने काम प्रत्यक्ष निर्वाचित सांसदको हो भन्ने बुझाइ छ, वास्तवमा यो गलत हो। विकासको पहल हामी समानुपातिकले पनि गर्न सक्छौं।

प्रदेशसभामा महिलाका विषयमा धेरै कुरा उठाएको छु। प्रदेशसभामा बोल्न त पाइन्छ तर कार्यान्वयन नहुने रहेछन्। यसमा धेरै चरण पार गर्नुपर्ने रहेछ। नीतिगत रूपमा जानुपर्छ। बोल्नबित्तिकै हुँदैन, कानुन बनाउनुपर्छ। सातवटा विधेयक पास गरेका छौं। त्यो काम गर्न पनि प्रक्रिया लाग्छ।

आफूले दुःख पाएको कारण मैले त प्रदेशसभामा महिलाका कुरा मात्र जोड दिएको छु। सक्षम हुनुपर्छ नभए धेरै दुःख पाइन्छ भन्ने थाहा भएको छ। महिलालाई धेरै चुनौती छ। घरपरिवारदेखि सबै धान्नुपर्छ। पुरुषसँग जोडेर टीकाटिप्पणी गर्ने गर्छन्। क्षमताको कुरा हुँदैन।

दुई वर्षको कार्यकाल सन्तोषजनक रूपले बित्यो। मलाई समानुपातिक पदले पुगेको छैन। प्रत्यक्ष चुनाव लड्ने हो। महिलालाई राजनीतिमा निकै गाह्रो हुने रहेछ। घरदेखि सदनसम्मका धेरै भोगाइ छन् मेरा। निकै पीडा छन्। जति सक्षम भए पनि महिला हो भन्छन्। समानुपातिक पद त हामीलाई बाध्यकारी जस्तो हो।

हामीसँग कति क्षमता छ भन्ने कुरा पुरुषले मापन गर्न नै सक्दैनन्। समानुपातिक र प्रत्यक्ष भनेर विभेद गरिएको छ। त्यस्तो विभेद हटाउन हामीले प्रदेशसभाभित्रै संघर्ष गर्नुपरेको छ। समानुपातिकमा मात्रै महिलालाई लडाउने होइन, प्रत्यक्षमा पनि लड्न पाउनुपर्छ। हामी महिला प्रत्यक्ष चुनाव पनि लड्न सक्षम छौं।

समाजको परिवर्तन राजनीतिबाटै हुने गर्छ। राजनीतिमा धेरै अवसर पनि छन्। राजनीतिमा आफन्तवाद हाबी छ, त्यसको अन्त्य हुनुपर्छ। सक्षम र योग्यलाई हेर्नुपर्छ। राजनीतिमा भएका विकृतिलाई सुधार गर्नुपर्छ। सकारात्मक कुरा ल्याउनुपर्छ। राजनीतिमा लागेका सबै राम्रो हुन्छन् भन्ने छैनन्। कमजोरीलाई हटाएर सकारात्मक कुरा अवलम्बन गर्नुपर्छ। वितृष्णाका कारण सबै विदेश गएका छन्। नेता र जनप्रतिनिधिले बिगारे भन्ने भाष्य छ। हामीले सोचविचार गरेर काम गर्नुपर्नेछ।

राजनीति गर्दा आर्थिक समस्या उत्तिकै हुन्छ। उचित मूल्यांकन हुन्न। निरन्तरता पनि आवश्यक पर्छ। कुनै पनि पेसा क्षेत्रमा सफा मनले निरन्तरता दिएपछि अवसरचाहिँ खोज्दै आउने रहेछन् भन्ने महसुस भएको छ।

*- मल्ल कर्णाली प्रदेश सांसद हुन्।*

# विद्यार्थीलाई खोइ संस्कार र सीप ?

रबिना महर्जन

मनमैजू माध्यमिक विद्यालय काठमाडौंको प्रधानाध्यापकमा ४ वर्षदेखि कार्यरत छु। विद्यालयमा पढ्ने ९ सय बालबालिकामध्ये ९० प्रतिशत काठमाडौंबाहिर विकट गाउँमा ज्याला मजदुरी गर्ने अभिभावकका सन्तान हुन्। उनीहरूलाई गरिखाने शिक्षा दिनु हाम्रो ध्येय हो।

नेपालको शिक्षा प्रणालीले सीपयुक्त, व्यावहारिक, संस्कारमूलक माटो चिनाउने ज्ञान दिन सकेको छैन। हामीले केही प्रयास भने गर्दै आएका छौं।

हाम्रो शिक्षा ज्ञानमा मात्रै केन्द्रित छ। पढाउने तरिका, परीक्षा र मूल्यांकन गर्ने तरिका पनि ज्ञानमा केन्द्रित छ। विद्यार्थीको रुचि, क्षमताअनुसार संस्कार, व्यवहार र सीपसहितको शिक्षा दिन सकेका छैनौं। विज्ञान, व्यवस्थापन, शिक्षा, इन्जिनियरिङ विषयमा मास्टर्स हुन्छ भने सिलाइकटाइ, प्लम्बिङ वा कपाल काट्नेलगायत घरेलु काम र सीपमा किन मास्टर्स प्रोग्राम चलाउन सकिँदैन ?

पाठ्क्रममा सैद्धान्तिक रूपमा भएका कुरालाई पनि सीपसँग जोडेर सिकाउन सकिन्छ। विद्यालयले पनि अतिरिक्त कक्षाको नीति बनाएर यस्ता सीप, व्यवहार र संस्कार सिकाउन सक्छन्। हाम्रो विद्यालय दैनिक १२ घण्टा खुल्छ। बिहान ६ देखि बेलुकी ६ बजेसम्म नियमित कक्षासाथै अतिरिक्त कक्षा हुन्छन्। बाल क्लब र बालिका सञ्जालबाट समस्या मात्रै प्रस्फुटन हुँदैन। नेतृत्व विकासको अभ्यास पनि गराइन्छ। विद्यालयमा हुने हरेक औपचारिक कार्यक्रमको नेतृत्व विद्यार्थीले गर्छन्। विद्यार्थीलाई सजाय होइन, काउन्सिलिङ गरिन्छ। त्यसका लागि काउन्सिलिङ कमिटी नै गठन गरिएको छ। दिवा खाजा कार्यक्रमको आमा समूहले अनुगमन गर्छन्। विद्यालयको मर्मतसम्भार, रंगरोगनमा पहिलो प्राथमिकता अभिभावकले पाउँछन्। अतिरिक्त क्रियाकलाप सञ्चालन गर्न विभिन्न क्षेत्रमा छरिएका पूर्वविद्यार्थीलाई विद्यार्थीसँग जोडिएको छ। बजेटबिनै पनि यी ससाना काम गर्दै आएका छौं। स्थानीय सरकारले पनि सघाउँछ।

सरकारले भवन निर्माण, भौतिक पूर्वाधार र शिक्षक तलबका लागि मात्रभन्दा पनि विद्यालयको आवश्यकताअनुसार बजेट विनियोजन गर्नुपर्छ। विद्यार्थी फेल भए भनेर बर्सेनि ठूलै हल्लाखल्ला हुन्छ तर राज्यले फेल भएका विद्यार्थीलाई पास गराउन उपचारात्मक कक्षा सञ्चालन गर्न सहयोग गरेको छैन। विद्यार्थीलाई सीप, व्यवहार, संस्कार सिकाउने अतिरिक्त क्रियाकलाप गर्न, खेलकुद, संगीत, कम्प्युटरलगायत विद्यार्थीको इच्छा चाहनाअनुसार पढ्न व्यवस्था मिलाउन चासो देखाएको देखिँदैन। यो देशभरका २८ हजार सामुदायिक विद्यालयको साझा समस्या पनि हो।

विद्यार्थीको पढाइ सुधार गर्न पालिकापिच्छे शिक्षक बैंकको आवश्यकता देख्छु। महिला शिक्षक प्रसूति हुँदा बिदामा बस्छन्। किरिया बिदा हुन्छ। शिक्षक बिरामी परेर बिदामा बस्लान्। त्यो बेला कसले पढाउने ? पूर्वशिक्षक र पढ्दै गरेका विद्यार्थीको बैंक बनायो भने बालबालिका पढाइबाट वञ्चित हुनु पर्दैन। दलीय राजनीतिलाई विद्यालय परिसरबाट पर नै राख्यो भने पनि सामुदायिक विद्यालयमा सुधार सम्भव हुन्छ। विद्यार्थी, अभिभावक, शिक्षक, व्यवस्थापन समिति र सरकारबीच टिम वर्क हुन सके अब्बल सामुदायिक विद्यालय बनाउन सकिन्छ। विद्यालयहरूमा टिमभन्दा पनि आआफ्नो समूह छन्। राजनीतिक विचार ज्ञान र चेतना हुनुपर्छ।

हाम्रा विद्यालयका ९५ प्रतिशत छात्रछात्राले पनि भविष्यमा विदेश जाने सुनाउँछन्। विदेश जाने लर्कोमा विद्यालय पनि जिम्मेवार छन्। पाठ्यक्रममा देश र स्थानीय सम्पदा, संस्कृति इतिहासका विषयवस्तुभन्दा पनि ज्यादा विदेशका कुरा समेटिएका छन्। विद्यालयमा अंग्रेजी माध्यमप्रतिको मोह पनि आवश्यकभन्दा बढी छ। नेपाल मात्रै यस्तो देश हो जहाँ राष्ट्रभाषा बोल्दा विद्यार्थीलाई विद्यालयमा जरिवाना गरिन्छ। विद्यार्थीलाई स्वदेशमै सम्भावना देखाउँदै त्यहीअनुसारको ज्ञान, सीप दिनेतर्फ ध्यान दिनुपर्छ।

हाम्रो विद्यालयमा भूकम्पका बेला ५ सयको हाराहारीमा झरेको विद्यार्थी संख्या अहिले बढेर ९ सय पुगेको छ। गत सालको एसईईमा ९१ प्रतिशत विद्यार्थीले सफलता प्राप्त गरे। जबकि देशभरको औसत ४८ प्रतिशत मात्र थियो। तारकेश्वर नगरपालिकाभित्र कक्षा ८ र १० को नतिजाका आधारमा हाम्रो विद्यालय दोस्रो स्थानमा पुगेको छ।

विज्ञान, व्यवस्थापन, शिक्षा, इन्जिनियरिङमा मास्टर्स हुन्छ भने सिलाइकटाइ, प्लम्बिङ, कपाल काट्नेलगायत घरेलु काम र सीपमा किन हुँदैन ?

२०७६ मा शिक्षक सेवा आयोगबाट मावि शिक्षकमा स्थायी नियुक्ति पाएकी थिएँ। त्यसको ६ महिनामा सहायक प्रधानाध्यापक र २०७७ साउनदेखि प्रअको भूमिकामा छु। व्यवस्थापन पढेर शिक्षण पेसामा आइपुग्दासम्मको यात्रा संघर्षपूर्ण छ। एसएलसी पास नगर्दै ज्ञानोदय मावि सीतापाइलामा अध्यापन गराउन थालेकी थिएँ। त्यो रहरभन्दा पनि बाध्यता थियो। त्यसअघि टोलकै बालबालिकालाई जम्मा गरेर ट्युसन पढाउँथें।

७१ प्रतिशत अंकसहित २०६४ मा एसएलसी पास गरेपछि सोही विद्यालयमा मासिक २७ सयमा निजी स्रोत शिक्षकको जागिर पाएँ। काठमाडौं महानगरको कोर नेवारबस्तीमा जन्मेहुर्के पनि गरिबी थियो। करातेको खेलाडी बन्ने, साइन्स पढ्ने रहरलाई आर्थिक विपन्नताले रोकिदियो। साइन्स पढ्न नसक्ने भएपछि धेरै अंक ल्याउनेले व्यवस्थापन पढ्ने भन्ने सुनेकी थिएँ। परिवारमा सल्लाह दिने साक्षर सदस्य थिएनन्। सहुलियतमा व्यवस्थापन पढ्न अवसर भेटेपछि त्यतै भर्ना भएँ।

महेन्द्ररत्न ताहचल क्याम्पसमा भर्ना भएर एकवर्षे बीएड गरें। पहिलो पटक २०७४ मा निमावि गणित शिक्षकमा नाम निस्कियो। खुला,महिला र जनजाति ३ वटै समूहबाट आवेदन दिएकी थिएँ। खुलातर्फ छनोट हुने एक्ली महिला थिएँ। महिला र जनजातिमा पनि स्वतः नाम आयो। स्थायी शिक्षकको जागिरका लागि काठमाडौंको ज्ञानोदय छाडेर नुवाकोट जानुपर्ने भयो। तर परिवारले अनुमति दिएन। त्यतिबेलासम्म काठमाडौं बाहिरको नेपाल कस्तो छ मलाई थाहा थिएन। घरपरिवारमा सबैले छोरी भएर गाउँ डुलेर हिँड्न हुँदैन भन्थे। नेवारकी छोरी काठमाडौं छाडेर जान हुँदैन भन्नुहुन्थ्यो।

ज्ञानोदय स्कुलका त्यति बेलाका प्रधानाध्यापक नातिकाजी महर्जनले नुवाकोटमा हाजिर भएर काम गरेको केही समयपछि सरुवा गरेर काठमाडौं फर्काउने आश्वासन दिए। त्यही आसमा पहिलो पटक उपत्यका छाडेर नुवाकोटको च्वाडी पब्लिक मावि माझीटार पुगें। स्कुलमा हाजिर भएको दिन कुन पार्टीको शिक्षक संगठनमा आबद्ध हुनुहुन्छ भनेर सहकर्मी शिक्षकहरूले सोधे। मैले गर्मीमा रूख पनि चाहिन्छ, जाडोमा सूर्य पनि चाहिन्छ, हँसिया र हतौडा पनि काम लाग्छ, गाई पनि दूध खान काम लाग्छ भनें। उहाँहरूले बढी बोल्नुहुँदो रहेछ भनेर जवाफ फर्काउनुभयो। राजनीतिक रूपमा शिक्षकहरू विभाजित भएको मलाई कत्ति पनि मन पर्दैन।

*- महर्जन काठमाडौंको मनमैजू माविकी प्रधानाध्यापक हुन्।*

# अवतरणका क्रममा पल्टियो डेल्टा एयरको हवाई जहाज

सीबीसी

एजेन्सी (टोरन्टो)- क्यानडाको टोरन्टोस्थित पियर्सन अन्तर्राष्ट्रिय विमानस्थलमा अवतरणका क्रममा एक हवाईजहाज पल्टिएको छ। स्थानीय समयअनुसार सोमबार दिउँसो डेल्टा एयरलाइन्सको जहाज अवतरणका क्रममा विमानस्थलमा पल्टिएको हो।

क्यानेडेली सञ्चारमाध्यम सीबीसीका अनुसार दुर्घटनामा परी १८ जना यात्रु घाइते भएका छन्। तीमध्ये तीन जनाको अवस्था गम्भीर रहेको छ। जहाजमा चालक दलका ४ सदस्य र ७६ यात्रु रहेको सीबीसीले जनाएको छ। अमेरिकाको मिनेसोटाबाट उडान भरेको उक्त जहाज अवतरणका क्रममा पल्टिएको हो। के कारणले दुर्घटना भयो भन्नेबारे अहिलेसम्म केही नखुलेकोसमेत समाचारमा जनाइएको छ।

**चालक दलका ४ सहित ८० यात्रु रहेको जहाज दुर्घटना हुँदा १८ जना घाइते, ३ को अवस्था गम्भीर**

जहाजमा रहेका यात्रुहरूले अचानक अवतरण गरिएको बताएका छन्। पल्टिएपछि जहाजको केही भागमा आगोसमेत लागेको थियो। तर तत्काल आगो निभाइएको स्थानीय अधिकारीहरूले जनाएका छन्। जहाजबाट निस्कँदै गरेको भिडियो सामाजिक सञ्जालमा भाइरल भइरहेको छ।

पियर्सन विमानस्थलका हवाई यातायात नियन्त्रण टावरको अडियो रेकर्डअनुसार डेल्टा एयरलाइन्सलाई दिउँसो २ बजे अवतरणका लागि अनुमति दिइएको थियो। क्यानेडियन प्रेसको एक रिपोर्टअनुसार टावरले पाइलटहरूलाई जहाजको 'ग्लाइड पाथ' मा सम्भावित वायु प्रवाहको 'टक्कर' का बारेमा चेतावनी दिएको थियो। त्यसपछि टावर र पाइलटहरूबीच कुराकानी नभएको पनि सीबीसीले जनाएको छ।

दुर्घटनामा परेको डेल्टा एयरलाइन्सको जहाज बमबार्डियर इंकले बनाएको हो। मित्सुबिसी सीआरजे-९०० एलआर जहाजको यात्रु क्षमता ८५ जना हो।



# युक्रेन युद्धबारे अमेरिका र रुसबीच साउदीमा वार्ता

**चीनले भने साउदीमा जारी वार्तामा सबै पक्ष सहभागी हुने आशा व्यक्त गरेको छ, चिनियाँ विदेश मन्त्रालयका प्रवक्ताले 'शान्तिका लागि भएका प्रयासले खुसी भएको' बताउँदै उचित समयमा सबै पक्षहरू शान्ति वार्तामा सहभागी हुन सक्ने' बताएका हुन्**

**कान्तिपुर संवाददाता** (काठमाडौं)

एपी

रुस र युक्रेनबीच तीन वर्षदेखि जारी युद्ध अन्त्य गर्न अमेरिका र रुस उच्चस्तरीय टोली गठन गर्न सहमत भएका छन्। रुस र अमेरिकाबीच साउदी अरबमा मंगलबार भएको वार्तापछि अमेरिकी विदेश मन्त्रालयले उच्चस्तरीय वार्ता गर्ने सहमति भएको जनाएको छ।

दुई देशका प्रतिनिधिबीच साउदी अरबमा मंगलबार वार्ता सुरु भएको हो। वार्ताको नेतृत्व दुवै देशका विदेशमन्त्रीले गरेका हुन्। वार्तामा रुसका तर्फबाट विदेशमन्त्री सर्गेई लाभरोभ र युरी उसाकोभ सहभागी भएका हुन्। उसाकोभ रुसी राष्ट्रपति भ्लादिमिर पुटिनका विदेश नीति सल्लाहकार हुन्। अमेरिकी टोलीमा विदेशमन्त्री मार्को रुबियो, राष्ट्रिय सुरक्षा सल्लाहकार माइक वाल्ट्ज र मध्यपूर्वका लागि अमेरिकी विशेषदूत स्टिभ विटकफ सहभागी थिए।

त्यस्तै, वार्तामा साउदी अरबका राजकुमार तथा विदेशमन्त्री फैसल बिन फर्हान अल-साउद र राष्ट्रिय सुरक्षा सल्लाहकार मुसइद बिन मोहम्मद अल-ऐवान सहभागी थिए। अमेरिकाले आजको वार्ता युद्ध अन्त्यका लागि रुस गम्भीर भए/नभएको विषय निर्धारण गर्ने पहिलो कदम भएको बताएको छ। रुसले भने अमेरिकासँगको सम्बन्धलाई सामान्य बनाउने आशा राखेको देखिन्छ।

वार्तामा युक्रेनी पक्षलाई भने सहभागी गराइएको थिएन। तर वार्तापछि पत्रकार सम्मेलनमा अमेरिकी विदेशमन्त्री मार्को रुबियोले कसैलाई पनि किनारा नलगाइएको बताएका छन्। 'यी वार्ताहरूबाट अमेरिका, युरोप, युक्रेन र समग्र विश्वबाट केही सकारात्मक कुरा निस्कन सक्छन्,' उनले भनेका छन्, 'तर पहिला यो द्वन्द्वको अन्त्यबाट सुरु हुन्छ।' युक्रेनको सहभागिताबिना हुने कुनै पनि वार्ता अमान्य हुने युक्रेनी राष्ट्रपति भ्लोदिमिर जेलेन्स्कीको भनाइलाई लक्षित गर्दै रुबियोले यस्तो बताएका हुन्। यसअघि जेलेन्स्कीले 'युक्रेनको संलग्नताबिना गरिएका सम्झौता युक्रेनले कहिल्यै पनि स्वीकार नगर्ने' बताएका थिए।

रुसी विदेशमन्त्री सर्गेई लाभरोभले वार्तामा दुवै देशले राजदूतहरू नियुक्त गर्ने विषयमा सहमति भएको जनाएका छन्। 'पहिले अमेरिकाले प्रतिनिधि नियुक्त गर्नेछ। त्यसपछि हामीले नियुक्त गर्नेछौं,' लाभरोभले बीबीसीसँग भने, 'यो निकै उपयोगी कुराकानी थियो, हामीले एकअर्काको कुरा सुन्यौं।' साउदीमा वार्ता चलिरहेका बेला युक्रेनी राष्ट्रपति जेलेन्स्की भने टर्कीको राजधानी अंकारा पुगेका छन्। उनले टर्कीका राष्ट्रपति रेसेप तैयप इर्दोगानसँग भेटवार्ता गरेका छन्।

रुसले युक्रेनमाथि आक्रमण गरेयता जेलेन्स्की तेस्रोपल्ट टर्की पुगेका हुन्। त्यसक्रममा जेलेन्स्की पत्नी ओलेना जेलेन्स्कासँगै युक्रेनी दूतावास भवनको उद्घाटन समारोहमा पनि सहभागी भएको बीबीसीले जनाएको छ। चीनले भने साउदीमा जारी वार्तामा सबै पक्ष सहभागी हुने आशा व्यक्त गरेको छ। चिनियाँ विदेश मन्त्रालयका प्रवक्ताले 'शान्तिका लागि भएका प्रयासले खुसी भएको' बताउँदै उचित समयमा सबै पक्षहरू शान्ति वार्तामा सहभागी हुन सक्ने' बताएका हुन्।

यसअघि युक्रेनी राष्ट्रपति जेलेन्स्कीले 'युरोपको सेना' निर्माण गर्नुपर्ने बताउँदै आएका छन्। गत शनिबार म्युनिख सुरक्षा सम्मेलनमा बोल्दै उनले अमेरिकी उपराष्ट्रपति जेडी भान्सको भाषणले युरोप र अमेरिकाबीचको पुरानो सम्बन्ध समाप्त भइरहेको र युरोपले समयमै त्यसलाई बुझ्न आवश्यक भएको बताएका थिए। म्युनिख सुरक्षा सम्मेलनका क्रममा अमेरिका र युरोपेली नेताहरूबीच चर्को मतभेद भएको थियो। सम्मेलनमा अमेरिकी उपराष्ट्रपति भान्सले युरोपेली लोकतन्त्रको कडा आलोचना गरेका थिए। उनले ट्रम्प प्रशासनको भनाइ दोहोऱ्याउँदै 'आफ्नो रक्षाका लागि युरोपले कदम चाल्नुपर्ने' बताएका थिए। सम्मेलनको साइडलाइन वार्तामा जेलेन्स्कीले शुक्रबार भान्स र रुबियोसँग भेटवार्ता गरेका थिए।

अमेरिका र रुसले वार्ता गरेसँगै युक्रेनको प्रतिरक्षामा एकजुट भएका युरोपेली नेताहरूले सोमबार फ्रान्सको पेरिसमा आपत्कालीन शिखर सम्मेलन गरेका छन्। उनीहरूले युक्रेनबिना वा युरोपको संलग्नताबिना कुनै पनि शान्ति वार्ता नहुने बताएका हुन्। सम्मेलनमा फ्रान्स, बेलायत, जर्मनी, पोल्यान्ड, इटाली, स्पेन र डेनमार्कका नेताहरू सहभागी भएका थिए।

**किन भयो साउदीमा वार्ता ?**

पछिल्लो समय साउदी अरबले विश्व समुदायमा आफ्नो प्रभाव र नेतृत्वदायी भूमिका बढाउँदै गएको छ। खासगरी खेलकुद र मनोरञ्जन क्षेत्रमा साउदी अरबले विश्व मञ्चमा प्रमुख खेलाडी बन्ने आफ्नो महत्त्वाकांक्षालाई अगाडि बढाउन ठूलो मात्रामा पैसा खर्च गरेको छ। त्यसका साथै साउदी नेतृत्वले कूटनीतिक रूपमा पनि आफ्नो भूमिका बढाउँदै गएको छ। पूर्वअमेरिकी राष्ट्रपति जो बाइडेन प्रशासनमा भने साउदी अरब आफ्नो प्रमुख अन्तर्राष्ट्रिय सहयोगीका रूपमा अमेरिकी निर्भरताबाट केही टाढियो। त्यसका साथै साउदीले रुस र चीन जस्ता अमेरिकाका प्रमुख प्रतिद्वन्द्वी देशहरूसँग घनिष्ट सम्बन्ध स्थापित गर्दै आफ्नो हितलाई पहिलो र प्रमुख मुद्दाका रूपमा अघि बढायो।

तर अमेरिकी राष्ट्रपतिमा डोनाल्ड ट्रम्पको पुनरागमनसँगै भने साउदीको अमेरिका नीतिमा परिवर्तन आउने देखिएको छ। तर अझै पनि साउदीको मानवअधिकार रेकर्डलाई लिएर अन्तर्राष्ट्रिय मञ्चहरूमा कहिलेकाहीं विवाद र आलोचना हुने गरेको छ। तर पनि विश्वव्यापी कूटनीतिमा एक अब्बल खेलाडी बन्ने आफ्नो महत्त्वाकांक्षामा भने साउदीले लगाम लगाउने कुनै छनक देखिँदैन।

## जेलेन्स्कीसँग वार्ता गर्न पुटिन तयार

युक्रेन युद्धबारे रुस र अमेरिकी प्रतिनिधिबीच साउदी अरबमा वार्ता सुरु भएसँगै रुसले आवश्यक परेको खण्डमा राष्ट्रपति भ्लादिमिर पुटिनले युक्रेनी समकक्षी भ्लोदिमिर जेलेन्स्कीसँग वार्ता गर्न तयार रहेको जनाएको छ।

रुसी राष्ट्रपति कार्यालय क्रेमलिनका प्रवक्ता दिमित्री पेस्कोभले आवश्यक पऱ्यो भने पुटिनले नै युक्रेनी राष्ट्रपति जेलेन्स्कीसँग वार्ता गर्न तयार रहेको बताएका हुन्। 'तर जेलेन्स्कीको वैधानिकतामा प्रश्न उठाउन सक्ने वास्तविकतालाई ध्यानमा राख्दै सम्झौताहरूको कानुनी आधारमा छलफल आवश्यक छ,' उनले भनेका छन्। तीन वर्षदेखि युक्रेनसँग जारी युद्ध अन्त्य गर्ने विषयमा रुसले अमेरिकी प्रतिनिधिहरूसँग मंगलबार वार्ता सुरु गरेको हो।

क्रेमलिन प्रवक्ता पेस्कोभले पत्रकारहरूसँगको कुराकानीमा युरोपेली संघमा आबद्ध हुने विषय रुस-युक्रेनको निर्णय भएको र यसले रुसको सुरक्षामा कुनै खतरा उत्पन्न नहुने बताएका छन्। 'यो कुनै पनि देशको सार्वभौम अधिकार हो। कुनै पनि देशले अर्को देशलाई केही गर्न सक्दैन। हामीले त्यसो गर्न खोजेको पनि होइन,' उनले भने। तर सुरक्षा, रक्षा वा सैन्य गठबन्धनको विषयमा भने रुसले कुनै सम्झौता नगर्ने उनको भनाइ छ। 'यस मामिलामा हाम्रो अडान पूर्णतया फरक छ। त्यहाँ अर्को मुद्दा छ र यो सबैलाई थाहा छ,' पेस्कोभले भने। अमेरिकी राष्ट्रपति डोनाल्ड ट्रम्पसँग रुसी राष्ट्रपति पुटिनको भेटबारे थप प्रगति नभएको उनको भनाइ छ।

# बेलायती सांसदको वार्षिक तलब ९४ हजार पाउन्ड पुऱ्याउन प्रस्ताव

लन्डन (कास)- बेलायती सांसदहरूको आधारभूत तलब आगामी अप्रिलदेखि वृद्धि हुने भएको छ। हालको तलबमा २ दशमलव ८ प्रतिशत वृद्धिसहित सांसदको वार्षिक तलब ९३ हजार ९ सय ४ पाउन्ड पुऱ्याउन लागिएको हो। सांसदको तलब वृद्धिसम्बन्धी प्रस्ताव हाल परामर्शको चरणमा छ। आगामी मार्च मध्यतिर यसबारे अन्तिम निर्णय लिइने जनाइएको छ।

संसद्को खर्चसम्बन्धी वाचडग निकाय 'इन्डिपेन्डेन्ट पार्लियामेन्ट्री स्ट्यान्डर्ड अथोरिटी' (इप्सा) ले सार्वजनिक क्षेत्रमा कार्यरत कर्मचारीहरूसँग सन्तुलन कायम गर्ने उद्देश्यले सांसद तलब बढाउन सिफारिस गरिएको बीबीसीले जनाएको छ। विगतमा सांसदको तलब निर्धारण गर्ने अधिकार संसद्मै रहेकामा सन् २००९ मा भएको सांसदहरूको खर्चसम्बन्धी 'स्क्यान्डल' पछि भने यो प्रक्रिया थप पारदर्शी र स्वतन्त्र बनाउन 'इप्सा' स्थापना गरिएको हो।

सांसदको तलब वृद्धिका लागि गरिएको प्रस्तावमा विभिन्न संसदीय समितिका प्रमुख रहेबापत उपलब्ध हुने अतिरिक्त भत्ता पनि सोही दरमा बढाउन सुझाव दिइएको छ। संसदीय समितिहरूको नेतृत्व गर्ने सांसदहरूलाई आधारभूत तलबबाहेक १८ हजार ३ सय ९ पाउन्ड वार्षिक मिल्ने गरेको छ। केही महिनापछि बेलायती सांसदहरूको तलबबारे फेरि व्यापक समीक्षा गर्ने तयारी छ। जसबाट उनीहरूलाई अप्रिल २०२६ देखि दिइने तलब निर्धारण गरिनेछ।

बेलायती सांसदहरूको तलब समीक्षाका क्रममा विभिन्न आधारहरूको विश्लेषण गर्ने गरिन्छ। अन्तर्राष्ट्रिय रूपमा निर्वाचित राजनीतिज्ञहरूले पाउने तलबसँग समेत तुलना गरेर बेलायती सांसदहरूलाई तलब निर्धारण हुने गरेको छ।

**विदेशी मुद्रा**

| | |
|---|---|
| अमेरिकी डलर | १३९.३१ |
| युरो | १४६.०३ |
| पाउन्ड स्टर्लिङ | १७५.५१ |
| अस्ट्रेलियन डलर | ८८.६२ |
| कतारी रियाल | ३८.२२ |

राष्ट्र बैंकको आधारमा

**सुन** रू. १,६९,४००

**चाँदी** रू. १,९७०

# आगामी वर्षको बजेट सिलिङ १९ खर्ब

- राजस्व संकलन १० प्रतिशत, आर्थिक वृद्धिदर ६.६ प्रतिशत र मुद्रास्फीति ६ प्रतिशतको लक्ष्य
- ३ करोडभन्दा कम लागतका आयोजना समावेश नगर्ने नीति लागू गर्न सुझाव

**यज्ञ बञ्जाडे** (काठमाडौं)

आगामी आर्थिक वर्ष २०८२/८३ को बजेट सिलिङ करिब १९ खर्ब रुपैयाँ तोकिएको छ। राष्ट्रिय योजना आयोगका उपाध्यक्ष नेतृत्वको राष्ट्रिय स्रोत अनुमान समितिले बजेट सिलिङ तोकेको हो।

आयोगले मंगलबार अर्थ मन्त्रालयमा पेस गरेको 'राष्ट्रिय स्रोत अनुमान तथा खर्च सीमा निर्धारणसम्बन्धी प्रतिवेदन २०८१' मा उक्त सिलिङ तोकिएको छ। समितिले मार्गदर्शन गरेको बजेटको सिलिङ चालु आर्थिक वर्षको भन्दा करिब साढे ४० अर्ब अथवा १२ प्रतिशतले बढी हो। उल्लिखित सिलिङको बजेटमा स्रोत जुटाउन करिब १० प्रतिशतले राजस्व वृद्धि गर्ने लक्ष्य राखिएको छ। यसअनुसार आगामी वर्षका लागि करिब साढे १२ खर्ब राजस्व संकलनको लक्ष्य रहनेछ।

यस्तै, वैदेशिक सहायता २८ प्रतिशतले बढाएर पौने ३ खर्ब पुर्‍याउन आयोगले सुझाएको छ। आगामी बजेटका लागि वैदेशिक अनुदान २२ प्रतिशत, वैदेशिक ऋण ३० प्रतिशत र आन्तरिक ऋण ८ प्रतिशतले बढाउन समितिले भनेको छ।

यस वर्ष कुल विनियोजित बजेटको करिब ३९ प्रतिशत चालु खर्चका लागि विनियोजन गरिएको छ। तर, आगामी वर्षका लागि कुल बजेटमा चालु खर्चको हिस्सा घटाएर करिब ३८ प्रतिशत बनाउन समितिले भनेको छ। आगामी वर्षका लागि कुल बजेटको २० प्रतिशत पुँजीगत खर्च, १९ प्रतिशत वित्तीय व्यवस्था र २२ प्रतिशत वित्तीय हस्तान्तरणका लागि विनियोजन गर्न निर्देश गरिएको स्रोतले बताएको छ।

यस वर्ष सरकारले सुरुमा १८ खर्ब ६० अर्ब ४० करोड रुपैयाँको बजेट घोषणा गरेकामा अर्धवार्षिक समीक्षामार्फत १६ खर्ब ९२ अर्ब ७३ करोड रुपैयाँ कायम गरिएको छ। सुरुमा मनपरी योजना समावेश गरेर ठूलो आकारको बजेट ल्याउने अनि अर्धवार्षिक समीक्षामार्फत भारी कटौती गर्ने विकृति पछिल्ला वर्षमा मौलाउँदै गएको छ। जसअनुसार गत आर्थिक वर्षमा तत्कालीन अर्थमन्त्री प्रकाशशरण महतले समीक्षामार्फत २ खर्ब २१ अर्ब रुपैयाँ बजेट घटाएका थिए। यस्तै, आर्थिक वर्ष ०७९/८० मा तत्कालीन अर्थमन्त्री विष्णु पौडेलले पनि समीक्षामार्फत सुरु विनियोजित बजेट १४ प्रतिशत (२ खर्ब ४४ अर्ब) ले घटाएका थिए।

यद्यपि आगामी वर्षको बजेट यथार्थपरक, स्रोत सुनिश्चितता भएको र नतिजामुखी हुने राष्ट्रिय योजना आयोगका उपाध्यक्ष शिवराज अधिकारीले बताए। जसमा स्रोत जुटाउने विभिन्न उपायमध्ये अहिले उचित विनियोजन र प्राथमिकीकरणमा जोड दिइएको उनको दाबी छ। 'विगतमा सबै परियोजनामा बजेट छरिएको थियो। अहिले परियोजनाको प्राथमिकीकरणमार्फत स्रोत बचाउने र उक्त स्रोतले आयोजनामा बजेट सिलिङ बढाउने काम गरेका छौं,' उनले भने, 'परियोजना प्राथमिकीकरणका लागि प्रतिफल सुनिश्चित हुनुपर्ने, कम पैसा राखेर छिटो सम्पन्न हुन लागेका, अत्यावश्यकबाहेक नयाँभन्दा पुराना आयोजनालाई प्राथमिकतालगायत विशेषता राखिएको छ।'

आगामी आर्थिक वर्षका लागि ६.६ प्रतिशतको आर्थिक वृद्धि र ६ प्रतिशत मुद्रास्फीतिको लक्ष्य राख्न पनि सुझाइएको छ। यस वर्ष सरकारले ६ प्रतिशत आर्थिक वृद्धिको लक्ष्य राखे पनि त्यो प्राप्ति हुने सम्भावना छैन। यद्यपि आगामी बजेटमा पुराना आयोजनालाई प्राथमिकता दिँदा एकातिर परियोजना सम्पन्न हुने र अर्कोतिर स्रोत अपुग आयोजनाको भीड पनि नहुने आयोगले बताएको छ।

आगामी आर्थिक वर्षको बजेटमा ३ करोडभन्दा कम लागतका आयोजना समावेश नगर्ने नीति कडाइका साथ लागू गर्न आयोगले सुझाएको छ। 'परियोजना बैंकमा ३ करोडभन्दा कम लागतका आयोजना संघको बजेटमा समावेश नगर्ने व्यवस्था यस वर्ष पूर्ण रूपमा कार्यान्वयनमा आउनेछ,' स्रोतले भन्यो, 'वातावरणीय प्रभाव मूल्यांकन र विस्तृत आयोजना प्रतिवेदन तयार भएको, काम सुरु गर्ने अवस्थामा रहेको परियोजना मात्र बैंकमा राखिएको छ।'

आगामी आर्थिक वर्षको बजेट मार्गदर्शन तयार गर्दा पहिलो पटक 'म्याक्रो फिसकल मोडेल' प्रयोग गरिएको जनाइएको छ। यो समग्र अर्थतन्त्र र वित्तीय अर्थतन्त्रलाई जोड्ने एक प्रकारको अर्थशास्त्रीय विधि हो। योजना आयोगले आर्थिक वर्ष २०८२/८३ को आयोजना तथा कार्यक्रम प्रस्ताव गर्नेसम्बन्धी मार्गदर्शन पनि अर्थ मन्त्रालयमा पेस गरेको छ।

यस्तै, आम्दानी र खर्चको लक्ष्य नभेटिने निश्चित भएपछि सरकारले चालु आर्थिक वर्षको बजेट १ खर्ब ६७ अर्बले घटाएको छ। १८ खर्ब ६० अर्बको बजेट विनियोजन गरिएकामा अर्धवार्षिक समीक्षापछि १६ खर्ब ९२ अर्ब कायम गरिएको छ। तत्कालीन अर्थमन्त्री वर्षमान पुनले प्रस्तुत गरेको बजेटमा स्रोत सुनिश्चित नभएका धेरै कार्यक्रम राखिएको, हचुवाका भरमा आयोजना छनोट गरिएको, हजारका आयोजना पनि केन्द्रमा राखिएको लगायत कारण देखाउँदै अर्थमन्त्री विष्णु पौडेलले बजेटलाई संशोधन गरेका हुन्। अब कायम भएको बजेट सुरुमा विनियोजित कुल रकमको तुलनामा ९०.९९ प्रतिशत मात्र हो।

सरकारको काम र खर्चको प्रवृत्ति हेर्दा घटाइएको बजेट पनि खर्च नहुने अनुमान अर्थविद्को छ। आकार घटाएसँगै अब चालु खर्च १० खर्ब २९ अर्ब ३० करोड (सुरु विनियोजनको ९०.२४ प्रतिशत) र पुँजीगत खर्च २ खर्ब ९९ अर्ब ५० करोड ९ लाख (सुरु विनियोजनको ८५ प्रतिशत) कायम भएको छ। गत जेठमा अघिल्लो सरकारले चालु खर्च ११ खर्ब ४० अर्ब ६६ करोड ४५ लाख र पुँजीगत खर्च ३ खर्ब ५२ अर्ब ३६ करोड ४० लाख विनियोजन गरेको थियो।

> विगतमा सबै परियोजनामा बजेट छरिएको थियो। अहिले परियोजनाको प्राथमिकीकरणमार्फत स्रोत बचाउने र उक्त स्रोतले आयोजनामा बजेट सिलिङ बढाउने काम गरेका छौं
>
> **शिवराज अधिकारी**
> उपाध्यक्ष, राष्ट्रिय योजना आयोग

# सरकारी संयन्त्रबाट इजरायल जान थाले केयरगिभर

### पहिलो चरणमा छानिएका एक हजारमध्ये १३ जना इजरायल प्रस्थान

तस्बिर : अंगद ढकाल/कान्तिपुर

**इजरायल जान लागेका नेपाली केयरगिभरलाई मंगलबार त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा बिदाइ गर्दै नेपालका लागि इजरायली राजदूत श्मुलिक आरी बास।**

**होम कार्की** (काठमाडौं)

इजरायलको दीर्घकालीन स्याहार केन्द्रमा सहायक श्रमिक (केयरगिभर) मा पहिलो चरणमा छानिएका एक हजार जनालाई पठाउन सुरु भएको छ। सोमबार २ पुरुष र ११ महिला गरी १३ जना इजरायल उडेका छन्।

प्यालेस्टिनी समूह हमाससँग इजरायको द्वन्द्व सुरु भएपछि रोकिएको केयरगिभर जानेक्रम फेरि सुरु भएको हो। इजरायलका लागि योग्यता पुगेर छानिएका ३ हजार ४ सय ६१ जनाको सूचीबाट लक्की ड्रका आधारमा २ हजार १ सय १२ जना छानिएका थिए। त्यसमध्ये पहिलो चरणमा एक हजार जनालाई पठाउन सुरु गरिएको हो।

सोमबार जानेहरूमा शान्ति कार्की, दीपा रिजाल, वेनिमा प्रसाईं, मनीषा थेबे, कुमार राई, प्रेमबहादुर मगर, सपना अधिकारी, सिर्जना खड्का, प्रर्लिना ओली रावत, निशा भुजेल, अनु बरुवल, प्रतीक्षा घिमिरे र सिर्जना सापकोटा छन्। बाँकेकी सपना अधिकारीले इजरायल जाने प्रक्रिया सुरु गरेको सात महिनापछि उड्न पाएको बताइन्। 'हामीले साउनदेखि नै प्रक्रिया अगाडि बढाएका थियौं। यो हाम्रा लागि सुनौलो मौका हो,' अधिकारीले भनिन्।

वैदेशिक रोजगार विभागका महानिर्देशक सूर्यबहादुर खत्रीले सरकारी संयन्त्रमार्फत श्रमिक पठाइएको बताए। 'जीटूजीमार्फत श्रमिक पठाइरहेका छौं। यसलाई आकर्षक गन्तव्यका रूपमा लिइएको छ। यो राम्रो अवसर हो', पहिलो समूहलाई बिदाइ गर्न त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल पुगेका महानिर्देशक खत्रीले भने, 'तपाईंहरूले नेपालको इज्जत र प्रतिष्ठाको ख्याल राख्नुहोला। इमानपूर्वक काम गर्नुहोला। तपाईंहरूको कामले अरू दाजुभाइ, दिदीबहिनीले धेरै अवसर प्राप्त गर्नेछन्।'

नेपालका लागि इजरायली राजदूत श्मुलिक आरी बासले इजरायलमा नेपालीले सम्मानजनक व्यवहार पाउने बताए। 'यो भर्ना प्रक्रियालाई सफल बनाउन इजरायल र नेपालले धेरै मिहिनेत गरेका छन्। साहसी नेपालीलाई इजरायलले स्वागत गर्नेछ,' उनले भने, 'निर्धक्कका साथ काम गर्ने वातावरण हुन्छ।'

उदयपुरका प्रेमबहादुर मगरले सरकारी प्रक्रियामार्फत जाँदा धेरै सहज भएको बताए। 'अहिले दलालको बिगबिगी छ। सरकारबाट जाँदा कतै पैसा बुझाउनु परेन। **बाँकी पृष्ठ ८**

# जापानदेखि अमेरिकासम्म कर्णालीको मह

### यस वर्ष ३ सय ९१ टन उत्पादन

तस्बिर : कान्तिपुर

**जाजरकोटको नलगाड–१ कल्पतका किसानले घरमा राखेका मौरीघार।**

**कृष्णप्रसाद गौतम** (सुर्खेत)

गत वर्ष चार क्विन्टल मह बिक्री गरेका जाजरकोटको नलगाड नगरपालिका–४ सिलालका पहलसिंह रावलले यसपालि साढे ४ क्विन्टल मह निकालिसके। भूकम्पले घर भत्किएर टहरामा बस्दै आएका उनले मह उत्पादनबाट बर्सेनि आम्दानी बढाइरहेका छन्। बारीमा उनले १ सय हाराहारी मौरीघार पालेका छन्।

'माग र भाउ बर्सेनि बढिरहेको छ, अरू व्यवसाय जस्तो मौरीपालनमा खासै दुःख छैन,' उनले भने, 'महबाट आएको आम्दानीले भूकम्पको पीडा भुलाउन मद्दत गरेको छ, खर्च कटाएर पनि कम्तीमा ३ लाख रुपैयाँ सिजनमा बचत हुन्छ।' छिमेकी धनबहादुर रावलले पनि नेपालगन्ज, सुर्खेत, दाङ, काठमाडौंलगायत ठूला सहरहरूमा पठाइरहेका छन्। घरमा झन्डै ६५ वटा मौरीघार राखेका उनले यो वर्ष साढे ३ क्विन्टल मह उत्पादनबाट ३ लाख ५० हजार रुपैयाँको कारोबार गरेका छन्।

जाजरकोटस्थित नलगाड नगरपालिकाको कल्पत, पाली, चिउरी, डाँडागाउँ, लहँ, खगेनकोट गाउँ मह उत्पादनका पकेट क्षेत्र मानिन्छन्। यहाँका धेरैजसो किसान मौरीपालनबाटै आत्मनिर्भर बनेका छन्। व्यापारी मह खरिद गर्न गाउँमै आउने गरेको स्थानीय किसान रामप्रसाद घर्तीले बताए। कल्पतमा महको मूल्य प्रतिकिलो १ हजारदेखि १ हजार ५ सय रुपैयाँ छ। जाजरकोटको महको माग विदेशसम्म बढेपछि किसान मौरीपालनमा हौसिएको उनले जनाए।

चार वर्षदेखि मौरीविज्ञ बेलायती नागरिक रुडी रेप्का र उनकी पत्नी लिडिया अनियला रेप्काले कल्पतमा उत्पादन भएको महलाई बेलायत पुर्‍याइरहेका छन्। रेप्का दम्पतीले कल्पतमै आएर झन्डै एक महिना बसेर किसानलाई मौरीपालनका विभिन्न उपाय र सीप सिकाएका थिए। उनीहरूकै प्रेरणाले आफूले मौरीपालन व्यवसाय बढाएर अहिले १ सय ३५ मौरीघारमा मह उत्पादन गरिरहेको नलगाड नगरपालिका–४ सिलालका धर्मराज रावलले बताए। यस वर्ष उनको मौरीपालन फार्मबाट ४ सय ५० किलो मह उत्पादन भएको थियो।

धर्मराजका भाइ हरिबहादुर सञ्चालक रहेको काठमाडौंको कीर्तिपुरस्थित कर्णाली एग्रो स्टेसनले पनि जाजरकोटमा उत्पादित मह अमेरिका, जापान, बेलायतलगायत देशमा पठाइरहेको छ। 'जाजरकोटको महलाई प्याकेजिङ, ब्रान्डिङ र लेभलिङ गरेर बाहिर पठाइरहेका छौं,' हरिबहादुरले भने, 'अहिले त माग धान्नै मुस्किल भइसक्यो।' **बाँकी पृष्ठ ८**

# बाढीले क्षतिग्रस्त सडक बनाउन १९ अर्बको स्रोत सहमति

### चालु आर्थिक वर्षमा १ अर्ब ८८ करोड रकम निकासा दिने निर्णय

**विमल खतिवडा** (काठमाडौं)

गत असोजमा आएको बाढीपहिरोले क्षति पुर्‍याएका सडक पूर्वाधार निर्माणका लागि अर्थ मन्त्रालयले स्रोत सहमति दिएको छ। उपप्रधान एवं अर्थमन्त्री विष्णुप्रसाद पौडेलले मंगलबार स्रोत सहमति प्रदान गर्ने निर्णय गरेका हुन्।

सडक विभागले पुनर्निर्माणका लागि १८ अर्ब ८८ करोड २० लाख रुपैयाँ लाग्ने अनुमानसहित अर्थसँग स्रोत सहमति माग गरेको थियो। अर्थको निर्णयसँगै सडक र पुलको स्थायी निर्माणका लागि बाटो खुलेको सडक विभागले जनायो। चालु आर्थिक वर्षका लागि १ अर्ब ८८ करोड रकम निकासा दिने निर्णय भएको विभागका महानिर्देशक रामहरि पोखरेलले बताए।

'स्रोत सहमतिभन्दा बहुवर्षीयको कुरा आउँछ,' उनले भने, 'भत्किएका सडक र पुल बनाउन अर्थबाट पुनर्निर्माणको अनुमति पाएका छौं।' अनुमतिसँगै रकम निकासा गर्ने निर्णय भएको उनले जानकारी दिए। अहिले सबैभन्दा बढी समस्या बीपी राजमार्गमा छ, जुन राजमार्गमा अस्थायी रूपमा खोला तर्काएर सवारी साधन सञ्चालन गरिएको छ। बर्खा नजिकिँदै जाँदा अहिलेसम्म स्थायी निर्माण सुरु हुन सकेको छैन। अस्थायी मर्मत भने सुरु गरिएको महानिर्देशक पोखरेलको भनाइ छ।

भौतिक पूर्वाधार मन्त्रालयले १० राजमार्ग, १३ पुल र ३ सडकको स्थायी निर्माण र मर्मतसम्भारका लागि भन्दै रकम माग गरेको थियो। राजमार्गतर्फ १५ अर्ब ८३ करोड १० लाख, पुलतर्फ १ अर्ब ९० करोड १० लाख र वैकल्पिक सडकतर्फ १ अर्ब १५ करोड रुपैयाँ माग गरिएको थियो। 'अर्थबाट अहिले राम्रो समन्वय भएको छ,' पोखरेलले भने, 'त्यहीअनुसार ठेक्का प्रक्रिया छोटो बनाएर काम थाल्ने गरी मन्त्रिपरिषद्बाट निर्णय गराउन पनि अर्थसँगै आग्रह गरेका छौं।'

सबैभन्दा बढी बीपी राजमार्गका लागि ८ अर्ब ५० करोड रुपैयाँ माग गरिएको हो। उक्त राजमार्ग स्थायी रूपमा निर्माण र मर्मत गर्नलाई सडक डिभिजन भक्तपुर र खुर्कोटमार्फत रकम माग गरिएको थियो। जसअनुसार भक्तपुर खण्डमा ७ अर्ब ५० करोड र खुर्कोट खण्डलाई १ अर्ब रुपैयाँ माग गरिएको छ।

काभ्रे भन्ज्याङ-नेपालथोक खण्डको १२ किलोमिटर सडकमा बाढीपहिरोले क्षति गरेको छ। यसको ८.७ किमि सडक खण्ड रोशी खोलाले बगाएको छ। काभ्रेको चौकी डाँडादेखि मुल्कोटसम्मको सडकमा समस्या छ। त्यसमा पनि बढी समस्या चौकी डाँडादेखि नेपाल थोक खण्डमा छ। बाढीले सिन्धुली खण्डमा कम र काभ्रे खण्डमा बढी क्षति पुर्‍याएको छ। **बाँकी पृष्ठ ८**

> अर्थबाट आउने रकमले भत्किएका पुल, सडक सबै बनाइनेछ, ठेक्का छिटो प्रक्रियाबाट गर्न पाए बर्खाअघि नै काम थाल्न सकिन्थ्यो
>
> **रामहरि पोखरेल**
> महानिर्देशक, सडक विभाग

## अर्थ संक्षेप

### बजारमा बजाज एन २५० मोटरसाइकल

काठमाडौं (कास)- बजाजको आधिकारिक वितरक हंसराज हुलासचन्द एन्ड कम्पनीले नेपालमा बजाज एन २५० सार्वजनिक गरेको छ। कम्पनीले बालुवाटारमा शनिबार बाइक उत्सव स्पिड फेस्ट २०२५ कार्यक्रम आयोजनाका क्रममा एन २५० सार्वजनिक गरेको हो। मोटरसाइकलमा पावर, आधुनिक प्रविधि र परिस्कृत डिजाइनको उत्कृष्ट संयोजन छ। बजाज एन २५० मा २४.५ पीएस पावर दिने २४९ सीसी सिंगल-सिलिन्डर, फ्युल-इन्जेक्टेड, आयल-कुल्ड इन्जिनलगायत विशेषता छ। यसमा डुअल च्यानल एबीएस, सुधारिएको चेसिस, एलईडी हेडलाइट, डिजिटल इन्स्ट्रुमेन्ट क्लस्टर र अपग्रेडेड एग्जस्ट सिस्टम रहेको कम्पनीले जनाएको छ। उक्त फेस्टमा ७० भन्दा बढी सुपरबाइक प्रदर्शनी, ग्रान्ड बाइक र्‍याली, टेस्ट राइड सेसनलगायत कार्यक्रम थिए।

### ब्रान्ड म्याक्स बासले ल्यायो वायरलेस इयर बड्स

काठमाडौं (कास)- बजारमा म्याक्स बासको वायरलेस इयर बड्स आएको छ। नेपाली अडियो ब्रान्ड म्याक्स बासले वायरलेस इयरबड्स बजारमा ल्याएको हो। उक्त उत्पादन पहिलो रहेकोसमेत कम्पनीको दाबी छ। यसमा बाहिरको आवाजलाई कम गर्न ४० डीबी एक्टिभ नोइज क्यान्सेलिङ, चार वटा माइक्रोफोन र एआई कल नोइज क्यान्सलिङ फिचर रहेको कम्पनीले जनाएको छ। स्पष्ट आवाजका लागि १३ एमएम डायनामिक ड्राइभर पनि छ। उक्त एयर बड्स एक पटक चार्ज गरेपछि ६-७ घण्टासम्म प्रयोग गर्न सकिने र चार्जिङ केसले ४८ घण्टासम्म ब्याट्री ब्याकअप दिने कम्पनीको भनाइ छ। नेपाली बजारमा यो ३५ सय रहे पनि हाल ग्राहकले अफर मूल्य १ हजार ९ सय ९९ रुपैयाँमा खरिद गर्न सक्छन्। यसमा कम्पनीले ६ महिनाको वारेन्टी, चार्जिङ केबल, इयर टिप्स र म्यानुअल उपलब्ध गराउने जनाइएको छ।

### राष्ट्रिय वाणिज्य बैंकको गण्डकी प्रादेशिक कार्यालय उद्घाटन

काठमाडौं (कास)- राष्ट्रिय वाणिज्य बैंकको पोखरामा गण्डकी प्रादेशिक कार्यालय र पृथ्वीचोकको नवनिर्मित भवन उद्घाटन भएको छ। फागुन ३ मा एक समारोहबीच उपप्रधानमन्त्री तथा अर्थमन्त्री विष्णुप्रसाद पौडेलले नवनिर्मित भवन उद्घाटन गरे। उक्त अवसरमा अर्थमन्त्री पौडेलले मुलुकलाई निराशाबाट बाहिर निकाल्न सरकारले सार्थक पहल गरिरहेको बताए। शिथिल अर्थतन्त्रलाई चलायमान बनाउन बैंकले आधार दरमा थोरै मात्र प्रिमियम जोडेर एकल अंकमा ब्याजदर कायम गरेको बैंकका प्रमुख कार्यकारी अधिकृत देवेन्द्ररमण खनालले जनाए। उक्त अवसरमा गण्डकी प्रदेश सरकारका उद्योग तथा पर्यटनमन्त्री मित्रलाल बस्याल, प्रमुख जिल्ला अधिकारी भरतमणि पाण्डे, नेपाल राष्ट्र बैंक पोखराका प्रमुख दीपकराज लामिछाने, बैंक सञ्चालक समिति सदस्यरामप्रसाद ज्ञवाली, पोखरा उद्योग वाणिज्य संघका अध्यक्ष गोकर्ण कार्कीले शुभकामना व्यक्त गरेका थिए।

### देवयानी इन्टरनेसनलद्वारा शैक्षिक सामग्री वितरण

काठमाडौं (कास)- नेपालमा अन्तर्राष्ट्रिय फुड चेन ब्रान्ड केएफसी तथा पिज्जा हट सञ्चालन गर्दै आएको कम्पनी देवयानी इन्टरनेसनल नेपाल प्रालिले शैक्षिक सामग्री वितरण गरेको छ। कम्पनीले सामाजिक उत्तरदायित्वअन्तर्गत पोखरा-२६ स्थित सिर्जना बहिरा आवासीय माध्यमिक विद्यालयमा अध्ययनरत २१० जना फरक क्षमता भएका विद्यार्थी र दारुवालियुम आवासीय विद्यालयमा अध्ययनरत ८२ विद्यार्थीलाई शैक्षिक सामग्री वितरण गरेको हो। शैक्षिक सामग्रीमा एक थान झोला, ६ थान कपी र ६ थान डटपेन रहेको कम्पनीले जनाएको छ।

### जेसीबी एनएक्सटी सिरिजका एक्स्काभेटर सार्वजनिक

काठमाडौं (कास)- एमएडब्लू अर्थमुभर्स प्रालिले जेसीबी इन्डियासँगको सहकार्यमा जेसीबी एनएक्सटी सिरिजका एक्स्काभेटरहरू सार्वजनिक गरेको छ। कम्पनीले जेसीबी एनएक्सटी २२१ एलसी फ्युल मास्टर र जेसीबी एनएक्सटी २२५ एलसीएम एक्स्काभेटर सार्वजनिक गरेको हो। ललितपुरको झम्सिखेलस्थित द प्लाजामा मंगलबार आयोजित कार्यक्रममा सरकारी प्रतिनिधि, निर्माण उद्योगका अग्रणी, डिलर तथा ग्राहकलगायत ७ सय सरोकारवालाको सहभागिता थियो। जेसीबी एक्स्काभेटर खरिद गर्ने ११ ग्राहकलाई साँचो हस्तान्तरण र मेसिनहरूको विशेष प्रस्तुतीकरण गरिएको थियो। कार्यक्रममा जेसीबी इन्डियाका सीईओ तथा एमडी दीपक शेट्टी र एमएडब्लू अर्थमुभर्स प्रालिका अध्यक्ष विष्णु अग्रवाल सहभागी थिए। जेसीबी एनएक्सटी २२१ एलसी फ्युल मास्टरले उच्चतम ऊर्जा दक्षता प्रदान गर्दै जटिल उत्खनन कार्यमा प्रभावकारी कार्य गर्ने तथा जेसीबी एनएक्सटी २२५ एलसीएम ट्र्याक्ड एक्स्काभेटरले उत्पादकत्व वृद्धिका लागि असाधारण हाइड्रोलिक सुविधा दिने कम्पनीको दाबी छ।

# हुर्किएन हिउँदे मकै

## किसानले तीन महिनादेखि मल नपाउँदा उब्जनीमा समस्या

तस्बिर : लक्ष्मी/कान्तिपुर

बाराको सिम्रौनगढ नगरपालिका-११ भगवानपुरमा मल नपाएर हुर्किन नसकेको मकै।

**लक्ष्मी साह** (बारा)

किसानले डीएपी र पोटास हाल्न नपाएपछि हिउँदे मकै बाली सप्रिन सकेको छैन। डीएपी र पोटास नपाउने समस्या तीन महिनादेखि छ।

किसानले धानबाली भित्र्याएपछि मकै लगाएका हुन्। किसानले सुरुमा बीउको अभाव झेल्दै सीमापारिबाट जसोतसो ल्याइएका मकै कात्तिकदेखि मंसिरसम्म छरेका थिए।

बारामा हिउँदे सिजनमा ६ हजार हेक्टर क्षेत्रफलमा मकै खेती गरिएको कृषि ज्ञान केन्द्रका कृषि अर्थविज्ञ गणेश महराले जनाए। सबभन्दा बढी उत्पादकत्व हिउँदे मकैको हुने गरे पनि त्यसैका लागि मल नपाइएको किसानको गुनासो छ।

हिउँदे मकैको उत्पादकत्व प्रतिहेक्टर ६ दशमलव ४ टनका दरले हुने गरेको छ, जुन बसन्ते र बर्खे सिजनभन्दा बढी रहेको महराको भनाइ छ। भारतमा यसपालि मकै उत्पादन कम भएपछि नेपालमा हिउँदे सिजनमा बीउ आयात हुन सकेको थिएन। त्यसको विकल्पमा सीमा आसपासका किसानले भारतीय बजारबाट पाइएको जसोतसो मकै लगाएका हुन्। तर हुर्किने बेलामा अहिले चाहिने मल नपाएर बोट सप्रिन नसकेको सिम्रौनगढ नगरपालिका-८ कचोर्वाका किसान कमलेशप्रसाद यादव बताउँछन्।

'स-साना बोटको जरामा राख्न वा खेतैभरि छर्न चाहिने उक्त मल नपाएर मकै सप्रिन सकेको छैन,' उनले भने। नेपाली अनुदानको मल नपाएर भारतबाट अवैध तरिकाले चोर बाटोबाट आयात हुने मल किन्दा महँगो पर्ने र अनुदानको मल जति गुणस्तरको नहुने किसानको भनाइ छ। 'भारतीय मलकै भर पर्नुपर्ने अवस्था छ,' कमलेशले भने, 'त्यो पनि महँगो। अनुदानको मल भने चाहे जति पाइएको छैन।'

> अनुदानको मल कृषि सामग्री संस्थानबाट कोटा प्रणालीले डिलरमा थोरै आउँछ, त्यसमा पनि साना किसानले पाउँदैनन्, सबै पहुँच भएका टाठाबाठाले लिने गरेका छन्
>
> ● **अशोकप्रसाद जैसवाल**, किसान

मकैमा प्रतिकट्ठा तीन केजीका दरले डीएपी र पोटास आवश्यक हुने यादवले जनाए। 'एक हेक्टर अर्थात् डेढ बिघामा यी दुवै मल ९० केजी आवश्यक पर्छ,' उनले भने। मकै लगाएको तीन महिना भए पनि एक बिघामा मल नपाएर बोट हुर्किन नसकेको सिम्रौनगढ नगरपालिका-११ भगवानपुरका अशोकप्रसाद जैसवालले बताए। 'मकै ६ महिनामा भित्र्याउन लायक हुन्छ, जसमा आधा समय बितिसक्यो,' उनले भने।

नेपाली अनुदानको मल प्रतिबोरा (५० केजी) २ हजार २ सय ५० रुपैयाँमा पाइन्छ। भारतीय मल भने एक बोरा (४५ केजी) ३ हजारसम्म पर्छ। 'अनुदानको मल कृषि सामग्री संस्थानबाट कोटा प्रणालीले डिलरमा थोरै आउँछ, त्यसमा पनि साना किसानले पाउँदैनन्। सबै पहुँच भएका टाठाबाठाले लिने गरेका छन्,' जैसवालले भने, 'स्थानीय तहले तोकेको सहकारी (बिक्रेता) बाट अनुदानको मल पाइन्छ।'

जिल्लाको कलैयामा एकमात्र कृषि सामग्री कम्पनीको कार्यालय छ। संस्थानमा मल गोदाम गरी राखिएको भए पनि स्थानीय तहबाट सिफारिस नआउँदा डिलरलाई डीएपी मल दिन नसकिएको कम्पनीका कार्यालय प्रमुख रविकुमार केसरीले बताए। १६ वटा पालिकाका २ सय ४६ सहकारी (बिक्रेता) लाई डिलर तोकेर मल वितरण गरिँदै आएको उनको भनाइ छ। 'मल लग्न पालिकामा पत्राचार गरिएको छ, तर कुनै पालिकाबाट कोटाअनुसारको लान डिलरलाई सिफारिस गरेर दिइएको छैन,' उनले भने, 'पालिकाबाट डिलरमार्फत सिफारिस आउनुपर्ने हो।'

पालिकाको सिफारिसका आधारमा कोटा प्रणालीले मल दिने गरिएको केसरीले जनाए। अहिलेको 'लट' मा ६ सय ६७ टन (१३ हजार ३ सय ४० बोरा) डीएपी र ४ सय बोरा पोटास मल गोदाम गरी राखिएको छ। सरकारले टेन्डरमार्फत मल किनेर साल्ट ट्रेडिङ र कृषि सामग्री कम्पनीबाट उपलब्ध गराउने गरेको छ।

## जापानदेखि अमेरिकासम्म...

यस वर्ष करिब ३५ क्विन्टल मह विदेश पठाएको उनले जनाए। नहकुली अर्गानिक हर्बल एग्रो प्रालिले २०७५ देखि बर्सेनि ४० क्विन्टलसम्म मह अस्ट्रेलिया, अमेरिका, दुबई र कोरिया पठाइरहेको सञ्चालक हरिबहादुर बुढाले बताए। पालिकामा मात्रै झन्डै एक सयभन्दा बढी मौरीघार भएका दुई सय ५० जना व्यावसायिक मौरीपालक किसान रहेको नलगाड नगरपालिकाका कृषि अधिकृत अमृत अधिकारीको भनाइ छ। नलगाडमा मात्रै यो वर्ष २८ टन मह उत्पादन भएको छ।

सल्यानको कालीमाटी गाउँपालिका पनि मह उत्पादनका लागि पकेट क्षेत्र मानिन्छ। कालीमाटीस्थित झिगानेका वेदबहादुर ओलीले आफ्नो बारीमा ५१ वटा मौरीघार राखेका छन्। यो वर्ष उनले करिब ४० क्विन्टल मह उत्पादन गरे। प्रतिकिलो एक हजार रुपैयाँमा मह बेच्दा झन्डै ४ लाख रुपैयाँ आम्दानी भएको र खर्च कटाएर ३ लाख रुपैयाँ बचत भएको ओलीको भनाइ छ। मौरीपालनमा घार खरिद र मह निकाल्दा चाहिने उपकरणमा मात्र खर्च हुन्छ भने बेलाबेला कृषि प्राविधिकको सहयोग चाहिन्छ। मौरीका लागि चिउरीको फूल उत्तम आहारा मानिन्छ। 'मौरीलाई चरन क्षेत्रको अभाव नभए मौरीपालनबाट सोचेजस्तो आम्दानी लिन सकिन्छ,' झिगानेका अर्का किसान रामबहादुर ओलीले भने, 'महको माग देशविदेशमा बढिरहेको छ, मूल्य पनि उच्च छ, त्यसैले घरमै बसीबसी राम्रो आम्दानी गरिरहेका छौं।' गाउँमा एक सय ५० किसानले व्यावसायिक मौरीपालन गरिरहेको उनले जनाए।

कर्णालीमा ३० हजार ५ सय ४६ हेक्टर क्षेत्रफलमा मह उत्पादन हुन्छ। प्रदेशभरि यो वर्ष ३ सय ९१ टन मह उत्पादन भएको कर्णाली प्रदेश सरकारको भूमि व्यवस्था, कृषि तथा सहकारी मन्त्रालयको तथ्यांक छ। त्यसमध्ये जाजरकोटमा ११ सय ८५ हेक्टरमा मौरीपालन गरिएकामा ३५ टन, ७ हजार ७ सय २५ हेक्टरमा मौरीपालन गरिएको सल्यानमा ३८ टन र २ हजार ६ सय ४० हेक्टरमा मौरीपालन गरिएको हुम्लामा २१ मेट्रिक टन मह उत्पादन भएको छ।

त्यसमध्ये उत्पादनको झन्डै आधा मह विभिन्न संस्था, फार्म र सहकारीमार्फत भारत, बेलायत, जापान, अमेरिकालगायत देश गइरहेको मन्त्रालयका प्रवक्ता धनबहादुर कठायतले बताए। गत वर्षको तुलनामा यो वर्ष २५ प्रतिशतले मह उत्पादनमा वृद्धि भएको उनको भनाइ छ।

मन्त्रालयले सात वर्षमा मौरीपालनको विस्तार र बजारीकरणमा ७ करोड रुपैयाँ खर्च गरिसकेको छ। यो वर्ष मौरीपालन व्यवसाय प्रवर्द्धनका लागि करिब डेढ करोड रुपैयाँ विनियोजन गरिएको उनले जनाए। वन विनाश, अतिक्रमण, जलवायु परिवर्तन, चरण क्षेत्रको अभाव, समयमा चिउरी नफुल्नुलगायत कारण मह उत्पादनमा चुनौती रहेको उनले बताए।

## बाढीले क्षतिग्रस्त...

अरनिको राजमार्ग, मेची राजमार्ग, बिब्ल्याटे-माइपोखरी-सन्दकपुर सडक, कान्ति राजमार्ग, चरिकोट-सिंगटी सडक, सिद्धार्थ राजमार्ग, खुर्कोट-मिल्टी र तामाकोशी-मिल्टी सडक स्थायी रूपमा निर्माण गर्न बजेट माग गरिएको हो। त्यहीअनुसार बजेट दिने निर्णय भइसकेको विभागले जनायो। वैकल्पिक सडकतर्फ काभ्रेको भकुन्डेबेसी-तिमाल-सिन्दुरेटार, दोलखाको किर्नेटार-जाफे र थानकोट-चित्लाङ सडक रहेका छन्। यो सडकका लागि १ अर्ब १५ करोड माग गरिएको हो।

'अर्थबाट आउने रकमले भत्किएका पुल, सडक सबै बनाइनेछ, बीपी राजमार्गको अस्थायी मर्मतको काम थालिसकिएको छ,' पोखरेलले भने, 'ठेक्का छिटो प्रक्रियाबाट गर्न पाए बर्खाअघि नै काम थाल्न सकिन्थ्यो।' नत्र ठेक्का गर्दैमा हिउँद सकिने उनको भनाइ छ। यसको अध्ययन सकिसकेको छ। अब ठेक्का प्रक्रिया अघि बढाउँदा समस्या नहुने विभागको भनाइ छ।

बाढीबाट क्षति पुगेका सडकको स्थायी निर्माणका लागि बजेटको अवरोध हटेको सडक विभागका उपमहानिर्देशक एवं प्रवक्ता अर्जुनप्रसाद अर्यालले बताए। 'अब क्षति पुगेका सडकको पुनर्निर्माण थालिनेछ,' उनले भने। जापान अन्तर्राष्ट्रिय सहयोग नियोग (जाइका) ले पनि निर्माणमा सहयोग गर्न चाहेकाले कुनै एउटा खण्ड उपलब्ध गराउन सकिने महानिर्देशक पोखरेलले बताए। 'यसबारे अहिलेसम्म जाइकाबाट केही निर्णय भइसकेको छैन,' उनले भने।

## सरकारी संयन्त्रबाट...

कोही दलाल खोज्नु परेन,' उनले भने, 'हामी जस्तो निम्न वर्गका लागि धेरै राम्रो प्रक्रिया हो। बिनालगानी क्षमताअनुसार रोजगारी पायौं।' उनले इजरायल जाँदा हवाई टिकटसहित १ लाख ७० हजार खर्च भएको बताए। 'सबैभन्दा बढी टिकटमा १ लाख ४८ हजार ९ सय रुपैयाँ पर्‍यो। त्यसपछि मेडिकल, ब्रिटिस काउन्सिलको परीक्षा, श्रम स्वीकृति, बिमा, सामाजिक सुरक्षा कोषमा गरी २० हजार रुपैयाँ खर्च भयो,' उनले भने।

दीर्घकालीन स्याहार केन्द्रमा सबैभन्दा बढी नेपाली १३ सय ४५ जना कार्यरत छन्। उनीहरूले आफूहरू सुरक्षित रहेको बताउँदै आएका छन्। केयरगिभरमा काम गर्ने नेपालीको मासिक तलब ५८ सय ८० इजरायली मुद्रा (करिब दुई लाख २० हजार रुपैयाँ) तोकिएको छ। यसको करार अवधि सुरुमा एक वर्षको हुनेछ। त्यसपछि अधिकतम ५ वर्षसम्म हुनेछ। इजरायलमा करिब १४ हजार दीर्घकालीन स्याहार केन्द्र छन्। गत भदौमा इजरायलले भारतबाट पाँच हजार केयरगिभरसहित १५ हजार श्रमिक लैजाने प्रक्रिया अगाडि बढाएको थियो।

### अधिकृत वारेसनामा बदर गरिएको सम्बन्धमा

उपर्युक्त सम्बन्धमा म धीरेन्द्र कुमार मेहताले मेरो नाममा दर्ता रहेको जिल्ला सुनसरी बसन्तपुर गाविस वडा नं. ४, कित्ता नं. १०४, ५७६, ५७८ ऐ वडा नं. ६ क कित्ता नं. २४ तथा ऐ वडा नं. ३ कित्ता नं. ३९६ को जगाहरू बिक्री गर्न म विदेश जानुपर्ने भई नफर्किने भएकाले जिल्ला सुनसरी इनरुवा नपा वडा नं. ७, हाल ऐ वडा नं. २ बस्ने वर्ष ४६ ना.प्र.नं. १४०३८/१६०३८ मिति २०४९/०१/२४ मा जिल्ला प्रशासन कार्यालय सुनसरीबाट नागरिकता लिएका आनन्द कुमार यादवलाई मिति २०८०/०८/२० गते काठमाडौं जिल्ला अदालतबाट अधिकृत वारेसनामा दिएकोमा हाल म आफै विदेशबाट आएकाले उक्त अधिकृत वारेसनामा यो सूचना प्रकाशित भएको मितिबाटै लागू हुने गरी बदर गरेको छु।

उक्त अधिकृत वारेसनामाबाट अब कसैले कारोबार नगर्न, गरे स्वयं जवाफदेही हुनुपर्ने भनी मुलुकी देवानी संहिता, २०७४ को दफा १५५ को उपदफा १ ग को प्रयोजनका लागि यो सूचना प्रकाशित गरेको छु।

**अधिकृत वारेसनामा बदर गर्ने**
**जिल्ला सुनसरी हरिनगर गाउँपालिका वडा नं. ५**
**हाल काठमाडौं जिल्ला काठमाडौं महानगरपालिका वडा नं. ३२ का**
**वर्ष ४१ का धीरेन्द्र कुमार मेहता**

# नेपाली युवाका सपना...

खड्काका अनुसार अहिले नेपालमा क्रिकेटर बन्न चाहनेका लागि उत्कृष्ट समय हो। उनले भने, 'यो लयलाई जोगाउनु भने आवश्यक छ।'

यही बीचमा भएका फुटबल लिग, भलिबल प्रतियोगिता, महिला फुटबल र क्रिकेट टिमको आशालाग्दो प्रदर्शनले पनि नेपाली खेलकुदमा अवसर र सम्भावना थपेको क्यानका सचिव पारस खड्काको विश्लेषण छ। 'एउटा खेलले राम्रो गर्‍यो भने अन्य खेल क्षेत्रमा पनि सुधार हुन्छ,' उनले भने, 'खेलकुद क्षेत्रमा खेलहरूबीच प्रतिस्पर्धा हुँदैन।'

केही वर्षमा नेपालमा उल्लेख्य रूपमा विस्तार भएको अर्को क्षेत्र, सूचना प्रविधि (आईटी) हो। नेपालको सबैभन्दा ठूलो निर्यात नै आईटी सेवा भएको तथ्यांक छ। नेपाल राष्ट्र बैंकले गएको कात्तिकमा सार्वजनिक गरेको प्रतिवेदनले चालु आर्थिक वर्षका पहिलो दुई महिनामै यस्तो निर्यातबाट नेपालले ३ अर्ब ७ करोड रुपैयाँ प्राप्त गरेको देखाएको छ। आईटी सेवा निर्यातबाट भित्रिएको यो रकम गत वर्षको त्यही अवधिको भन्दा ५६ करोड ८४ लाख रुपैयाँ बढी हो।

पछिल्ला वर्षमा आईटी क्षेत्रले मुलुकलाई राम्रो लाभ दिइरहेको विभिन्न अध्ययनले देखाएका छन्। झन्डै ६६ हजार नेपाली युवा आईटी क्षेत्रमा संलग्न छन्। नेपाल सरकारले हालै नेपाली आईटी कम्पनीले विदेशमा शाखा खोल्न पाउनेलगायतका सुविधा थप गरी यस क्षेत्रको विस्तारमा सघाउने संकेत गरेको छ। विद्युतीय व्यापारलाई नियमन गर्ने गरी कानुन निर्माण अघि बढेको छ। नेपाली आईटी उद्यमीहरू नयाँ पुस्ताले नेपाली आईटी उत्पादनलाई विश्वव्यापी बनाउँदै लगेको बताउँछन्।

ठमेल डटकममार्फत नेपालमा अनलाइन सपिङ भित्र्याउनेमध्येका एक बालकृष्ण जोशी कुल गार्हस्थ्य उत्पादनको झन्डै २५ प्रतिशत रेमिट्यान्सबाट आउने मुलुक आईटीको नयाँ हब बन्दै जानु सकारात्मक पक्ष भएको बताउँछन्। 'नयाँ पुस्ताले नेपालको आईटी सेवालाई ग्लोबल बनाउन थालेका छन्,' उनले भने, 'अमेरिकामा पढेका युवा नेपाल आएर आईटी बिजनेस थालेका छन्।'

जोशीले जलवायु वित्त (क्लाइमेट फाइनान्स) र क्रिप्टो माइनिङ नेपालका लागि नयाँ सम्भावना रहेको उल्लेख गरे। 'विदेशी मुद्रा सञ्चिति र अर्थतन्त्र हेर्दा नेपालले क्रिप्टोलाई खुला गर्न गाह्रो छ, गर्नँ पनि हुँदैन तर माइनिङ खुला गर्न सकिन्छ,' उनको धारणा छ, 'क्रिप्टोवालालाई नेपालमा सर्भर राख्न दियो भने खर्बौं डलरको बिजनेस हासिल गर्न सकिन्छ।' ग्लोबलाइजेसन ४.० मा नेपाललाई 'इन्नोभेसन हब' का रूपमा प्रचार गर्न सकिने र यसको आधार वैदेशिक रोजगारी र बसाइँसराइका कारण अन्तरआबद्ध ग्लोबल इकोनमी, एआई, क्लाइमेट फाइनान्स र भर्चुअल करेन्सी भएको उनको धारणा छ।

डिजिटल अर्थतन्त्र र खेलकुद क्षेत्रमा नेपाली युवाले नयाँ र रोचक क्षेत्रलाई करिअर बनाउन थालेका छन्। सामाजिक सञ्जालमा कन्टेन्ट क्रिएटर वा इन्फ्लुएन्सर बनेर राम्रो कमाइ गर्नेदेखि स्ट्रिमिङ प्लाटफर्म प्रयोग गरी उल्लेख्य आम्दानी गर्नेको संख्या बढेको छ। पब्जी, डोटा टुजस्ता अनलाइन गेमको आकर्षण सोखसँगै पेसा र प्रतिष्ठाको विषय बन्न थालेको छ। केही समयअघिसम्म युवाले इन्टरनेट चलाउँदा बिग्रेको वा समय खेर फालेको भन्नेहरू नै सूचना प्रविधिमा पछिल्लो पुस्ताको सफलता देखेर चकित पर्न थालेका छन्।

गत मंसिरमा भएको कीर्तिपुर नगरपालिकाको उपनिर्वाचनका बेला कांग्रेस महामन्त्री गगन थापाको एउटा अभिव्यक्ति सामाजिक सञ्जालको भाषामा 'भाइरल' मात्रै होइन, ट्रोल, मिम र गम्भीर बहसको हिस्सा बन्न पुग्यो। कतार, इजरायललगायत मुलुक गएका युवा नेताले भाषण गर्दैमा वा मुठी कस्दैमा फिर्ता नआउने बरु नेपालमा आकर्षक अवसर सिर्जना गर्नुपर्ने थापाको अभिव्यक्तिको आशय थियो। तर भाषणको एक हिस्सा मात्रै चर्चित बन्दा थापा भाइरल बन्न पुगे। त्यो थियो, 'युवालाई कीर्तिपुरको डाँडामा बसेर ल्यापटप चलाएरै महिनामा ३/४ लाख कमाउन सकिने बनाउनुपर्छ।'

थापाको विचारलाई कतिपयले 'प्रधानमन्त्री केपी शर्मा ओलीको संगतले हावा कुरा गर्न सिकेको' वा 'गगनले पनि अरू नेताजस्तै आधारहीन कुरा गर्न थालेको' भन्दै आलोचना गरे। तर के गगनको अभिव्यक्ति पूर्णतया असम्भव वा असान्दर्भिक थियो त ? थापा भने सो अभिव्यक्तिलगत्तै आईटी क्षेत्रका प्रतिनिधिहरू उत्साहित भएर आफूलाई भेट्न आएको सम्झन्छन्।

कीर्तिपुर डाँडाको प्रसंगमा भएको घोचपेच नबिर्सेका थापा हाँस्दै भन्छन्, 'हाम्रो स्थानीय सरकारले विकास भनेको सडक निर्माण हो भन्ने बुझेर आफूसँग भएको सीमित स्रोत पनि त्यसमै खर्च गरेका छन्। दक्ष जनशक्ति निर्माणमा लगानी गर्ने हो भने युवाले नै विकासमा योगदान पुर्‍याउँछन्।' नेपाललाई 'नलेज इकोनमी' को केन्द्र बनाउन सकिने र त्यसका लागि युवा जनशक्तिलाई सक्षम बनाउने विषयमा पर्याप्त लगानी गरिनुपर्ने थापाको भनाइ छ।

'नेपालको भविष्य नलेज इकोनमी हो, यसले संसारभरि नयाँ अवसर सिर्जना गरेको छ। यस अवसरलाई उपयोग गर्न सकेनौं भने पछि पर्छौं,' उनले भने, 'अबको २०/२५ वर्ष हामीसँग युवाशक्ति छ, विद्यालय र पूर्वाधार बनेका छन्। हामीले शिक्षा, प्रारम्भिक बाल विकास, पोषण र सूचना प्रविधिका अत्यावश्क जनशक्तिमा लगानी गरे हामीले चाहेको विकास देख्न सकिन्छ।' थापाका अनुसार विज्ञान, गणित, इन्जिनियरिङ, प्रविधि शिक्षामा सुधार ल्याउन सके आईटीको विश्वव्यापी अवसरलाई नेपालमै बसेर सदुपयोग गर्न सकिन्छ।

फिच रेटिङको राम्रो मूल्यांकन, विश्व बैंक र अन्तर्राष्ट्रिय मुद्राकोषका सकारात्मक तथ्यांकसँगै सूचना प्रविधि, सिनेमा, संगीत र खेलकुदमा व्यावसायिक अभिवृद्धि नेपालमा लागि आशाजनक संकेत हुन्। यिनमा युवाको सक्रियताले उत्साह थपेको छ। तर आर्थिक, राजनीतिक, सामाजिक क्षेत्रमा युवाको बढ्दो चासोसँगै अबको बाटो के हो त भन्ने प्रश्न पनि टड्कारो बनेको छ। यो प्रश्न नौ वर्षअघि संविधान जारी गर्दा जति टड्कारो थियो, अहिले पनि उत्तिकै पेचिलो बनेको देखिन्छ।

अमेरिकाको म्यासाचुसेट्सस्थित 'एमआईटी' मा अध्ययन गरेर नेपाल फर्किएकी सुमना श्रेष्ठ राजनीतिमा लाग्नुअघि र सांसद बनिसकेपछि पनि युवाका सरोकार प्रस्ट रूपमा उठाउने युवा नेताका रूपमा चिनिन्छिन्। संसद्मा समेत तयारीका साथ धारणा राख्ने पूर्वमन्त्री श्रेष्ठ नेपालका युवामा अपार सम्भावना रहेको तर उनीहरूको प्रतिभा उजागर गर्न पर्याप्त अवसर नदिइएको बताउँछिन्। उनका अनुसार इन्टरनेटको पहुँचले युवापुस्तालाई स्मार्ट र खोजमूलक बनाएको छ तर समाजले उनीहरूको वास्तविक क्षमतालाई अझै राम्ररी उपयोग गर्न सकेको छैन।

'हाम्रा युवा धेरै स्मार्ट छन्, के चाहिन्छ भन्नेबारे उनीहरू प्रस्ट छन्, उनीहरूसँग संलग्न भएर काम गरियो भने वास्तविक सम्भावना थाहा हुन्छ,' श्रेष्ठले भनिन्। खेलकुद, गणित, विज्ञान जस्ता विभिन्न क्षेत्रमा युवालाई चम्किलो तारा बनाउन अवसर नदिइएको उनले उल्लेख गरिन्। 'युवालाई आफ्नै पहलमा अघि बढ्न अलपत्र छोडिएको छ, यसमा हामीले सुधार गर्न आवश्यक छ,' उनले जोड दिइन्।

नेपालमा फिनटेक, हेल्थ-टेकलगायत क्षेत्रमा इन्नोभेसनको ठूलो सम्भावना रहेको सांसद श्रेष्ठ बताउँछिन्। 'हामीकहाँ क्रिएटिभ उद्यमशीलतालाई समर्थन गर्ने प्रणाली छैन,' उनले भनिन्, 'मैले भन्दै आएको कुरा नै नेपालमा कम्प्यासनेट आन्टरप्रेनरसिपको अवधारणा अपनाएर, इन्नोभेसनलाई वित्तीय रूपमा व्यावहारिक बनाउँदै युवालाई उद्यमशीलतामा प्रेरित गर्न सकिन्छ,' उनले भनिन्। विदेश जाने विषय नेपाली युवाको बाध्यता नभई छनोटको विकल्प हुने वातावरण बनाउने आफ्नो आकांक्षा रहेको उनले सुनाइन्।

कम उमेरमै रास्वपाबाट शिक्षामन्त्रीसमेत बनेर चर्चा पाएकी श्रेष्ठ राजनीतिमा युवाको बढ्दो सहभागिताको उदाहरण मात्रै हुन्। २०७९ मा सम्पन्न स्थानीय तह निर्वाचनबाट जितेकामध्ये झन्डै ४० प्रतिशत ४० वर्षमुनिका हुनुले साना पदमा भए पनि युवाको उल्लेख्य सहभागिता र चासो प्रतिबिम्बित गर्छ। नेपाली राजनीतिमा सधैं चर्चाको विषय बन्ने काठमाडौं महानगरपालिकाको निर्वाचनमा आफूभन्दा निकै वरिष्ठ र ठूला दलका उम्मेदवारलाई पछि पार्दै मेयर बनेका बालेन्द्र शाहले त्यसयता ठूला दल र नेतालाई विभिन्न विषयमा निरन्तर चुनौती दिँदै आएका छन्।

२९ वर्षमै पर्साको कालिकामाई गाउँपालिकाको अध्यक्ष बनेका जनता समाजवादी पार्टीका वशिष्ट कुमार हुन् वा २१ वर्षमै वडाध्यक्ष बनेका धनुषाको कमल नगरपालिकाका रणवीरसिंह मण्डल र बझाङको जयपृथ्वी नगरपालिकाका सर्जनबहादुर थापा, स्थानीय राजनीतिमा होमिने युवाका पछिल्ला उदाहरण हुन्। यो सबैलाई नजिकबाट नियालेका निर्वाचन आयोगका प्रमुख आयुक्त दिनेशकुमार थपलिया भन्छन्, 'नेपाली राजनीतिमा अहिले भइरहेको युवाको दुरुपयोग कम गर्न सक्ने हो भने युवा सहभागिता अझै बढ्ने सम्भावना छ।'

राष्ट्रिय सभामा पुग्न ३५ वर्षको हुनैपर्ने, प्रतिनिधिसभाको उम्मेदवार छनोटमा युवालाई दिइने कम प्राथमिकता र सीमित संख्यामा मात्रै कार्यकारी पदमा पुग्ने अवसरजस्ता कारणले युवा साना पद र वडाध्यक्षमै सीमित हुनुपरेको थपलियाको विश्लेषण छ। उमेर पुगेका सबैले निर्वाचनमा मत दिनैपर्ने व्यवस्था गर्नुपर्ने र लोकतन्त्रमा युवाको सहभागिता बढाउन हरेक विद्यालयसम्म पुग्नुपर्ने उनको सुझाव छ। 'राजनीतिक दलहरूमा २०४८ सालको चुनावमा २५ वर्ष पुगेर उम्मेदवार भएका व्यक्ति २०८४ सालमा पनि उम्मेदवार बन्न तयार भएर बसेका छन्,' उनले भने, 'यस्तो प्रवृत्तिले नयाँ युवालाई राजनीतिमा लाग्न कसरी प्रेरित गर्ला र ?'

उच्च पदस्थ व्यक्तिहरूले आफ्ना सन्तान विदेश पठाएर अरूलाई देशमा रोक्ने कुरा गर्नु असुहाउँदो भएको थपलिया बताउँछन्। 'जसले यस देशमा भविष्य छ भनेर प्रमाणित गर्नुपर्थ्यो, त्यस्ता (मलगायत) अधिकांशका छोराछोरी नै विदेशमा भएपछि कसरी हुन्छ ?' उनको भनाइ छ, 'सन्तान देशमा नराख्नेले देश कसरी बनाउँछ भन्ने प्रश्न छ।'

विदेशमा नेपालीको संख्या बढ्दै जाँदा गएका केही वर्षमा नेपाली फिल्मले आफ्नो विश्वव्यापी उपस्थिति र कमाइको दायरा बढाउँदै लगेको छ। यसै वर्ष प्रदर्शनमा आएको फिल्म 'पूर्णबहादुरको सारंगी' ले झन्डै ८० करोड रुपैयाँ कमाइ गर्‍यो त्यसमध्ये ३५ करोड रुपैयाँ विदेशबाट आएको निर्माता विनोद पौडेलको दाबी छ। यो फिल्म १ करोड ३० लाख रुपैयाँमा निर्माण भएको थियो। यही वर्ष रिलिज भएका '१२ गाउँ', 'छक्का पन्जा ५' जस्ता फिल्मले ३० करोडभन्दा बढी आम्दानी गरेका थिए।

नेपाली फिल्मले विदेशमा पनि उच्च माग पाउन थालेका छन्। निर्देशक मीनबहादुर भामको 'शाम्बाला' ले बलिउडदेखि अन्तर्राष्ट्रिय सिनेमामा समेत चर्चा बटुल्यो। फिल्मको प्रिमियरमा भारतीय अभिनेता नवाजुद्दिन सिद्दिकी र निर्देशक अनुराग कश्यपजस्ता चर्चित फिल्मकर्मी आएका थिए। 'मनसरा', 'गाउँ आएको बाटो', 'पुजार सार्की', 'घरज्वाइँ' र 'बेहुली फ्रम मेघौली' जस्ता फिल्मले पनि राम्रो व्यवसाय र चर्चा बटुले। फिल्म निर्माण होस् वा दर्शकका रूपमा नेपाली युवाको बढ्दो उपस्थितिले पछिल्लो सफलता सम्भव भएको फिल्म निर्माताको भनाइ छ।

नेपाल सरकारको १६ औं योजनाले युवालाई केन्द्रमा राखेर रोजगारी, उत्पादकत्व र प्रविधिमा जोड दिएको छ। योजना आयोगका उपाध्यक्ष शिवराज अधिकारीका अनुसार देशमा स्रोतसाधन पर्याप्त भए पनि मानव संसाधनको उचित परिचालन हुन नसक्दा आर्थिक वृद्धि अपेक्षाअनुसार हुन सकेको छैन। रोजगारीलाई मर्यादित र उत्पादक बनाउन नीति निर्माण गरिएको उनले बताए। 'देशभित्रै रोजगारीको अवसर उपलब्ध गराउन जब सेन्टर स्थापना र श्रमशक्तिको रेकर्ड राख्ने व्यवस्था गरिँदै छ,' उनले भने।

अधिकारीका अनुसार स्टार्टअप, व्यावसायिक तालिम तथा आईटी शिक्षालाई प्रोत्साहन गर्दै इन्क्युबेसन सेन्टरहरूलाई बलियो बनाउने योजनामा सरकार केन्द्रित रहेको छ। 'युवालाई सीप दिएर त्यसलाई प्रयोग गर्ने उचित वातावरण बनाउनु हाम्रो प्राथमिकता हो,' उनले भने।

आफ्नो पुस्तक 'ह्वाइ नेसन्स फेल' मा चर्चित अर्थशास्त्रीहरू ड्यारन आजेमोलु र जेम्स रबिन्सनले दिएका सुझावलाई सापटी लिने हो भने देशमा युवालाई रोक्न वा फर्काउनका लागि संस्थागत र पूर्वाधार विकास अपरिहार्य हुन्छ। दोहनकारी नभएर समावेशी संस्थाको निर्माणसँगै गुणस्तरीय शिक्षाको प्रवर्द्धनले युवालाई गतिशील र इन्नोभेटिभ बन्न सघाउने उनीहरूको निष्कर्ष नेपालमा उपयोगी हुन सक्छ। नेपाल खत्तम भइसक्यो र यहाँ केही सम्भव छैन भन्ने कथ्य निर्माणमा आफूसमेत धेरै जानी-नजानी सहभागी भएको स्वीकार गर्दै कांग्रेस नेता थापा भन्छन्, 'यो कथ्य बदल्ने समय आएको छ। हामीले बिगारेको चीज हामीले नै सपार्ने हो।'

# स्वर्णिम तथ्यांक पछ्याउँदै एन्जिला

**नेपाली महिला फुटबलले अन्तर्राष्ट्रिय सहभागिता जनाउन थालेको ४० वर्ष छुन लाग्दा ११ खेलाडीले नेतृत्व गर्ने अवसर पाएका छन्**

**हिमेश** (काठमाडौं)

नेपाली महिला फुटबल अहिले त्यो मोडमा पुगेको छ, जहाँ तथ्यांकसँग खेलेर धेरैथोक भन्न सकिन्छ। सबैभन्दा पहिले कप्तान एन्जिला तुम्बापो सुब्बाकै कुरा। दुई वर्षजति अगाडि काठमाडौंमै ओलम्पिक छनोट खेल भएको थियो, भियतनामविरुद्ध। त्यसमा नेपाल दुवै खेल हारेको थियो र टिममै एन्जिलाको स्थिति लिएर प्रश्न गरिएको थियो। यसबारे पत्रकारको उत्तर दिँदा एन्जिला खुबै भावनात्मक भएकी थिइन्, आफूलाई रुनबाट रोक्नै सकिनन्।

तिनै एन्जिलाको नेतृत्वमा नेपालले फोर नेसन्स कपको आफ्नो पहिलो खेल किर्गिस्तानविरुद्ध खेलेको थियो। व्यक्तिगत उपलब्धिको रूपमा यो उनका लागि विशेष रह्यो। नेपाली महिला फुटबलले अन्तर्राष्ट्रिय सहभागिता जनाउन थालेको ४० वर्ष छुन लाग्दा अहिलेसम्म ११ खेलाडीले टिमको नेतृत्व गर्ने अवसर पाएका छन्। देशका लागि खेल्नु नै ठूलो मानिन्छ। अझ कप्तानीको उपलब्धिकति ठूलो हुन्छ, सजिलै अनुमान गर्न सकिन्छ।

यही पृष्ठभूमिमा एन्जिला सबैभन्दा बढी खेलमा कप्तान हुने नेपाली खेलाडी बनेकी छन्। किर्गिस्तानविरुद्धको खेल उनको नेतृत्वमा खेलेको २० औं खेल हो। उनले यसक्रममा निरु थापालाई उछिनेकी हुन्। निरुले १९ खेलमा नेपालको कप्तानी गरिन्। अब एन्जिलाले नेतृत्व गरेको खेलसंख्या २० पुगेको छ। यसैक्रममा उनले एउटा अर्को तथ्यांकमा पनि निरुलाई उछिनकी छन्। निरुको कप्तानीमा खेलिएका १९ खेलमा ९ जित हात परेको थियो।

किर्गिस्तानविरुद्धको जित भने एन्जिलाको नेतृत्वमा प्राप्त नेपालको दसौं जित भयो। कप्तानका रूपमा सबैभन्दा बढी खेल जित्ने होडमा भने उनी दोस्रो स्थानमा छन्। उनले भन्दा बढी जमुना गुरुङले १३ जित आत्मसात् गरेकी छन्, कप्तानका रूपमा। अझै एन्जिलाले कप्तानका रूपमा नेपालका लागि खेल्ने क्रम रोकिने छैन। यस्तोमा उनको नाममा धेरै कीर्तिमान जोडिनेछ। सायद आफूविरुद्धको आलोचनाले एन्जिलालाई अझ बलियो बनाएको हुनुपर्छ।

उनी पनि युरोपमा खेल्ने भइसकिन्। उनकै भाषामा आत्मविश्वास अझ बढ्दो छ। अझै पनि एन्जिलाका खेलमा केही कमजोरी छन्। तिनमा सुधार हुनैपर्छ। कमजोरी नै नहुने खेलाडी को होला र ? प्रश्न के मात्रै भने उनीमाथि गरिएका आलोचना आफैंमा कति ठीक थिए भन्ने मात्रै हो। किर्गिस्तानविरुद्धको खेल सावित्रा भण्डारीका लागि पनि विशेष रह्यो। उनका लागि फोर नेसन्स कपको त्यो खेल ५० औं 'क्याप' रह्यो।

महिला खेलाडीका रूपमा नेपाली राष्ट्रिय टिमका लागि यो आँकडा छुने धेरै कम खेलाडीमात्र छन्। त्यसमा उनी पनि जोडिएकी छन्। सावित्रा युरोपमा खेल्छिन् र उनका सामु पनि अझै सम्भावना जीवन्त छ। चोट र बिरामीले दुःख नदिएको भए सावित्राको नाममा अझ बढी खेल हुन्थ्यो। बढी खेलकै कुरा गर्दा नेपाली महिला फुटबलमा नेपालका लागि सबैभन्दा बढी खेल खेल्ने खेलाडी को हो त ? यसको उत्तर यही किर्गिस्तानविरुद्धको खेलमा रहेको थियो।

त्यो खेलमा एन्जिलाले सुरुदेखि खेलिन्। अनि सब्टिच्युट खेलाडीका रूपमा दोस्रो हाफमा अनिता बस्नेत र अमृता जैसी छिरिन्। संयोग कस्तो भने यी तीनै खेलाडीले नेपालका लागि यसै खेलमा आ-आफ्नो ५५ औं खेल जिते र उनीहरू नै नेपालका लागि संयुक्त रूपमा सर्वाधिक खेल खेल्ने खेलाडी हुन्। नेपालका लागि एउटा अर्को खेलाडीले पनि यत्तिकै खेल खेलेकी छिन्। उनी हुन् हीराकुमारी भुजेल। उनले साफ च्याम्पियनसिपमै भुटानविरुद्ध ५५ औं खेल खेलेकी थिइन्।

त्यति बेलासम्म उनी नै नेपालका लागि सबैभन्दा बढी खेल खेल्ने खेलाडी थिइन्। दुर्भाग्यले उनी त्यही खेलमा घाइते भइन्। अहिले निको हुने क्रममा छिन्। यसरी नेपालका लागि चार खेलाडीले ५५ पल्ट खेलेको छ। जतिबेला नेपालले लेवनानविरुद्ध खेल्नेछ, त्यतिबेला नेपालका लागि सबैभन्दा बढी खेल्ने खेलाडी को भन्ने कीर्तिमानले नयाँ मोड पाउने छ। कुरा यही त हो, जति बढी खेल हुन्छ, तथ्यांक उत्तिकै बन्दै जान्छन् अनि ती तथ्यांकले खेल अझ रोमाञ्चक बनाउँछन्।

हेमन्त श्रेष्ठ

इटहरी गोल्डकप

# साबिक विजेता चर्च ब्वाइज पराजित

**अर्जुन सुवेदी** (सुनसरी)

डिफेन्डिङ च्याम्पियन चर्च ब्याइज युनाइटेड १५ औं अन्तर्राष्ट्रिय आमन्त्रण कन्ट्रोल इटहरी गोल्डकप फुटबल प्रतियोगिताको पहिलो चरणबाटै बाहिरिएको छ।

इटहरी रंगशालामा मंगलबार अन्तिम क्वाटरफाइनलमा चर्च ब्वाइजले धरान फुटबल क्लबसँग २-१ को पराजय भोगेको थियो। मोफसलका प्रायः सबै गोल्डकपमा सहभागिता जनाउँदै आएको चर्च ब्वाइज अघिल्लो दिन बागमती गोल्डकप खेलेर २४ घण्टा नबित्दै इटहरी आएका अधिकांश खेलाडीले उत्कृष्ट प्रदर्शन गर्न सकेनन्। एन्फाले एकपछि अर्को प्रतियोगिता जुधाएकै कारण सोमबार बागमती गोल्डकपमा विभागीय टिम त्रिभुवन आर्मीलाई पराजित गरेर इटहरी पुगेका चर्च ब्वाइजका खेलाडी निकै थकित देखिन्थे।

यसको फाइदा उठाउँदै धरानले दबाब बढायो र खेलको ४५ औं मिनेटमा दोर्जे तामाङले गोल गरेका थिए। विवेक राईले दिएको बल चर्चका दुई डिफेन्डरलाई बिट गर्दै दोर्जेले उत्कृष्ट फिनिसिङ दिए। पहिलो हाफमा १-० ले पछि परेको चर्च ब्वाइजले दोस्रो हाफमा पनि उत्कृष्ट प्रदर्शन गर्न सकेन। एकपछि अर्को दबाब बढाएको धरानले ५७ औं मिनेटमा दोस्रो गोल थप्यो। मिलन लिम्बूले गोलकिपर कृषल मोक्तानलाई बिट गर्दै दिएको पासमा विवेक राईले आकर्षक गोल गर्दै टिमको अग्रता दोब्बर बनाए।

खेलको अन्तिम १० मिनेट चर्चले धरानमाथि दबाब बढाए पनि रक्षापंक्ति बाधक बन्यो। खेलको ८४ औं मिनेटमा चर्च ब्वाईजका अनन्त तामाङले हेडमार्फत गोल गर्दै दबाव केही घटाउने प्रयास गरे। त्योभन्दा अगाडि अनन्तको दुई पटकको आकर्षक हेडमा धरानका गोलकिपर प्रवीण लिम्बू बाधक बने पनि तेस्रो प्रयासमा अनन्त गोल गर्न सफल भए पनि त्यो जितलाई पर्याप्त हुन सकेन। म्यान अफ द म्याच धरानका दोर्जे तामाङ भए। उनले १० हजार रुपैयाँ पाए।

बुधबार पहिलो सेमिफाइनलमा युनाइटेड खर्साङ फुटबल क्लब (यूकेएफसी) र मछिन्द्र एफसीबीच प्रतिस्पर्धा हुने आयोजक राष्ट्रिय जागृति क्लबले जनाएको छ।



तस्बिर : अर्जुन/कान्तिपुर

**इटहरी गोल्डकपमा मंगलबार बल नियन्त्रणमा लिन खोज्दै चर्च ब्वाइजका समीर तामाङ (सेतो) र धरानमा विवेक राई।**

# थ्रीस्टार सेमिफाइनलमा

सुवास बिडारी

**कान्तिपुर संवाददाता** (मकवानपुर)

थ्रीस्टार क्लबले सातौं बागमती गोल्डकप राष्ट्रिय फुटबल प्रतियोगितामा सेमिफाइनल पुगेको छ। बागमती-४ स्थित सहिद स्मृति रंगशालामा मंगलबार दोस्रो क्वाटरफाइनलमा हिमालयन शेर्पा क्लबलाई ४-० गोलले हराएर थ्रीस्टार अन्तिम चारमा पुग्यो।

थ्रीस्टारको जितमा सुशील राईले तेस्रो मिनेट, नवीन लामाले १७ औं मिनेट र विदेशी खेलाडी फोफानाले २४ औं मिनेटमा गोल गरेका थिए। म्यान अफ द म्याच नवीन लामा घोषित भए। उनले १० हजार रुपैयाँ प्राप्त गरे।

पहिलो हाफ आफूलाई सम्हाल्न नसक्दा चार गोल खाएको हिमालयन शेर्पा प्रतियोगिताबाट बाहिरिएको छ। थ्रीस्टार चौथो संस्करणको विजेता हो। हिमालयन तेस्रो संस्करण उपविजेता हो। चौथो संस्करणमा विदेशी टोली अफ्रिकन रुट्स एसोसिएसनलाई हराएर थ्रीस्टारले उपाधि जितेको थियो। हिमालयन शेर्पा भने जावलाखेल युवा क्लबसँग पराजित भएको थियो।

# सम्झना कप टेबलटेनिस हुने

काठमाडौं (कास)- ललितपुर टेबलटेनिस क्लबले सातौं सम्झना कप अन्तर्राष्ट्रिय टेबलटेनिस प्रतियोगिता फागुन १२ देखि गर्ने भएको छ। कन्सेप्ट मेकर्जको व्यवस्थापनमा हुने प्रतियोगितालाई क्लबले पूर्णशंकर श्रेष्ठ, नेपाली घर र सांग्रिला विकास बैंकसँग प्रायोजनसम्बन्धी सम्झौता गरेको छ। नेपाली भान्सा घरका अपरेसन म्यानेजर सुजन तण्डुकार, पूर्णशंकर श्रेष्ठ र आयोजक क्लबका उपाध्यक्ष नीरज जोशीले सम्झौतापत्रमा हस्ताक्षर गरे। नेपाल र भारतका गरी ४ सय २ खेलाडीले ९ स्पर्धामा प्रतिस्पर्धा गर्नेछन्।

# पोखराको मार्कीमा समीर

काठमाडौं (कास)- पोखरा थन्डर्सले तेस्रो नेपाल सुपर लिग (एनएसएल) का लागि समीर तामाङलाई 'मार्की' खेलाडी बनाएको छ। उनलाई पोखराका मुख्य प्रशिक्षक सुमन श्रेष्ठले मार्कीको जिम्मेवारी सुम्पेका हुन्। समीर एनएसएलमा पहिलो पटक मार्की खेलाडी बने। उनले भनेका छन्, 'पोखराले मलाई मार्कीको जिम्मेवारी दिएको छ, धेरै खुसी छु।' कप्तानमा आयुष घलान छन्।

# अभिलाषा र सुनीरा फाइनलमा

**दीपेन्द्र बडुवाल** (बुटवल)

रूपन्देहीमा भइरहेको तेस्रो मेयर कप तथा बुटवल खुला लन टेनिसको महिला एकलतर्फ अभिलाषा विष्ट र सुनीरा थापा फाइनल पुगेका छन्। गत वर्षकी च्याम्पियन अभिषालाले बुटवल-११ स्थित लनटेनिस भिलेजमा आइसा डोल्कर गुरुङलाई ६-१, ६-० को सोझो सेटमा पराजित गरिन्। उत्कृष्ट प्रदर्शनलाई निरन्तरता दिँदै उपाधि होड कायम राख्न अभिलाषाले खासै कडा चुनौती बेहोर्नुपरेन। बुटवलको कोर्ट चिरपरिचित भएकाले अभिलाषाले दर्शकको समर्थन पाएकी थिइन्।

अर्को सेमिफाइनलमा सुनीरा थापाले भगवती बिकलाई हराएर फाइनलमा स्थान पक्का गरिन्। सुनीराले पहिलो सेट ६-० ले आफ्नो पक्षमा पारिन्। दोस्रो सेटमा भगवती रिटायर्ड हर्ट भएसँगै सुनीरा फाइनल पुगिन्।

पुरुष एकलतर्फ साबिक विजेता प्रदीप खड्कासँगै निहालजंग थापा, निशान श्रेष्ठ र रितिक राना सेमिफाइनल पुगेका छन। प्रदीपले गोविन्द नेपालीलाई ६-४, ६-४ को सोझो सेटमा हराए। निहालले सक्षमविक्रम शाहलाई ६-३, ६-१ ले, निशानले आयुषमान घलेलाई ६-१, ७-६, ९-७ ले, रितिकले देवाशिष रेउलालाई ६-२, ६-२ को सेटमा हराए। गत वर्ष पोखराका प्रदीप र रूपन्देहीका रितिकबीच उपाधि भिडन्त भएको थियो।

३५ वर्षमाथि पुरुष एकलतर्फ सन्तोष खत्रीले विश्वास श्रीसलाई ६-१, ६-१ ले, दीप राणाले सुमन पौडेललाई ६-०, ६-१ ले, राजन पौडेलले सबर मियालाई ६-०, ६-० को सेटमा, सोम राना भने वाकओभर पाउदै क्वार्टरफाइनलमा प्रवेश गरेका छन। यसैगरि ४५ प्लस सिगलमा कमल भण्डारीले मनोज नेपाललाई ६-०, ६-१ ले, माधव भण्डारीले गोपाल ज्ञवालीलाई ६-०, ६-१ ले, राज गुरुङले सम्दुप के लामालाई २-६, ६-१, १०-८ ले र देव क्षेत्रीले रामु बिकलाई ६-२, ६-१ को सेटमा हराए।

३५ वर्षमाथि डबल्समा जितेन्द्र परियार र समीर श्रेष्ठको जोडीले अभिषेक पी र सागर थापाको जोडीलाई ६-०, ६-० ले हरायो। राजन पी र चोम वीएसको जोडी वाकओभर पायो। ४५ वर्षमाथि डबल्समा रोहित सुनुवार र हिमाल शाहको जोडीले अर्जुन गुरुङ र मनोज नेपालको जोडीलाई ६-१, ६-३ को सेटमा हरायो। बुटवल उपमहानगरको सहयोगमा रूपन्देही टेनिस संघले आयोजना गरेको प्रतियोगितामा एक सय बढी खेलाडी प्रतिस्पर्धी छन्।

# महिला क्रिकेट टोली युगान्डा जाने

काठमाडौं (कास)- नेपाली महिला राष्ट्रिय क्रिकेट टोलीले युगान्डा भ्रमण गर्ने भएको छ। पहिलो पटक गर्न लागिएको अफ्रिका भ्रमण मार्च ६ देखि १७ सम्म हुनेछ। नेपाल क्रिकेट संघ (क्यान) ले युगान्डा भ्रमणमा कति खेल खेल्नेबारे निर्णय हुन बाँकी रहेको जनाएको छ।

क्यानका प्रवक्ता छुम्बी लामाले नेपालले भ्रमणमा ५ खेल खेल्ने सम्भावना रहेको जनाए। इन्दु बर्माको कप्तानीमा क्यानले मंगलबार युगान्डा भ्रमणलाई १८ सदस्यीय प्रारम्भिक टोली घोषणा गरेको छ। भेट्रान अलराउन्डर सीता रानामगरलाई टोलीमा राखिएको छैन। चोटका कारण उनलाई नराखिएको लामाले बताए।

टोलीका खेलाडीमा रुबिना क्षेत्री, विन्दु रावल, एलिसा यादव, सना प्रवीण, राजमति ऐरी, रोमा थापा, ममता चौधरी, ईश्वरी विष्ट, पूजा महतो, कविता जोशी, मनीषा उपाध्याय, सवनम राई, सिमाना केसी, रचना चौधरी, शोभा रोकाया, रिया शर्मा र सम्झना खड्का छन्। महिला ट्वान्टी-२० अन्तर्राष्ट्रिय वरीयतामा युगान्डा १८ र नेपाल २० औं स्थानमा छ।



कान्तिपुर पब्लिकेशन्स् लिमिटेडद्वारा प्रकाशित तथा मुद्रित, कार्यालय : सेन्ट्रल बिजनेस पार्क, थापाथली, पो.ब.नं. ८५५९, काठमाडौं, नेपाल, फोन नं. ५१३५०००, फ्याक्स: ९७७-१-५१३५००१, email : kanti@kmg.com.np, द.नं. ३१/०४९-५०, अध्यक्ष : कैलाश सिरोहिया, प्रबन्ध निर्देशक : सम्भव सिरोहिया, प्रधान सम्पादक : उमेश चौहान

# Discover the Pure Essence of Herbs.
# Rooted in Nature, Refined by Science






## CASTOR CONDITIONING OIL

**सामग्रीहरू : कास्टर तेल, रोजमेरी तेल, अदुवा तेल, भिटामिनहरू, एक्स्ट्रा भर्जिन ओलिभ तले, र अन्य क्यारियर तेलहरू ।**

वेदान्त कास्टर हेयर आयल कास्टर, रोजमेरी र अदुवा, एक्स्ट्रा भर्जिन ओलिभ आयलका साथै भिटामिनहरू र अन्य क्यारीअर आयलहरूको शक्तिशाली मिश्रणले समृद्ध छ । टाउकाको छाला मोइस्चराइज गर्ने, रक्तसञ्चारमा सुधार ल्याउने तथा कपाल पलाउन प्रवर्द्धन गर्ने उद्देश्यले तयार पारिएको पोषणयुक्त यो सूत्रले कपाल स्वस्थ, बलियो र चम्किलो हुन्छ ।

**१०० मि.लि. मा पनि उपलब्ध छ**



## APRICOT OIL




**सामग्रीहरू: पाकेका एप्रिकट बीउबाट एप्रिकट कर्नेल तेल, जोजोबा तेल, सिक्चालेन तेल, एभोकाडो तेल, भिटामिन, क्यारियर तेल र अन्य आवश्यक तेलहरू ।**

वेदान्त एप्रिकट डेली मोइश्चराइजिङ तेल एक बडी मोइश्चराइजिङ तेल हो । विशेष रूपमा तपाईंको छालालाई पुनर्जीवित गर्न बनाइएको यो तेलले तपाई सुतेको समयमा काम गर्छ । पाकेका एप्रिकट बीउबाट प्राप्त एप्रिकट कर्नेल तेलबाट प्राकृतिक एप्रिकटको महत्त्वपूर्ण तत्वहरूको लाभ लिन सकिन्छ । आवश्यक फ्याटी एसिड र भिटामिन 'ए' र 'ई' ले भरिपूर्ण तेलले गहिरो पोषण र हाइड्रेशन प्रदान गर्दछ । प्राकृतिक सामग्रीहरूको संयोजन रहेको यो आयुर्वेदिक मिश्रणले तपाईंको छाला नरम, लचिलो र उज्यालो बनाउँछ ।

**१०० मि.लि. मा पनि उपलब्ध छ**






## PURE CASTOR OIL

**सामग्रीहरू: हेक्सेन फ्रि कोल्ड प्रेस शत प्रतिशत कास्टर तेल ।**

वेदान्त क्लासिक पियोर क्यास्टर तेल कपाल र छालाका लागि बहुउपयोगी र प्राकृतिक समाधान हो । कोल्ड प्रेस विधिले निकालिएको र हेक्सेनमुक्त शत प्रतिशत शुद्ध क्यास्टर तेल ओमेगास र रीसिनोलिक फ्याटी एसिडसयुक्त तेलले कपाल र छालाका लागि निकै फाइदाजनक छ । कास्टर बिरूवाबाट निकालिएको यो तेलले हाइड्रेशन र पोषण प्रदान गर्दछ । यसले कपाल र छालालाई प्राकृतिक रूपमा उज्यालो बनाउँछ ।

**१०० मि.लि. मा पनि उपलब्ध छ**



## VALERIAN BETTER SLEEP




**सामग्रीहरू : भलेरियन रूट तेल, लेभेन्डर तेल, चमेली तेल, क्यामोमाइल तेल, र अन्य आवश्यक तेल**

वेदान्ताको भलेरियन बेटर स्लिप तपाईंले आरामदायी निद्राका लागि प्रयोग गर्न सक्नुहुन्छ । यो आयुर्वेदिक मिश्रण भलेरियनका प्राकृतिक गुणहरूको प्रयोग गरी तयार पारिएको हो । यसले अनिद्रा वा बेचैनीबाट पीडित व्यक्तिहरूका प्रभावकारी समाधान प्रदान गर्दछ । शान्ति कायम गर्ने भलेरियन बिरुवा भलेपोट्रिएट्स र भलेरेनिक एसिड जस्ता तत्वहरूले आराम प्रदान गर्नुका साथै र चिन्ता कम गर्न मद्दत पुर्‍याउँछ ।

**१० मि.लि. मा उपलब्ध छ**

## प्राकृतिक र जडीबुटीयुक्त

प्राकृतिक र जडीबुटीको उत्पादनमा समर्पित वेदान्त हर्बल्स्ले कपाल र शरीरको हेरचाहका लागि प्रयोग हुने गुणस्तरीय सामग्रीहरू उत्पादन गर्छ । त्यस्तै हाम्रा उत्पादनहरूले शरीरका जोर्नी तथा मांसपेशीको दुखाई कम गर्ने र तनाव कम गर्ने लगायतका तेल पनि छन् । हामीले हाम्रा उत्पादनमा गुणस्तर र शुद्धतामा विशेष ध्यान दिनुका साथै उत्कृष्ट सामग्रीहरू प्रयोग गर्छौं । यी सामग्री उत्पादनमा पारम्परिक विधिहरूको प्रयोग गर्नुका साथै गुणस्तर नियन्त्रण मापदण्डहरू पालना गर्छौं । नवीनतम र उच्चगुणस्तरीय प्राकृतिक हेरचाहका लागि वेदान्त हर्बल्स्लाई विश्वास गर्नुहोस् ।

नेपालभरका **भाटभटेनी र सेल्सबेरी सुपरमार्केटमा** उपलब्ध छ ।
अनलाइनमा दराज, जीभी र फरएभरयोङबाट पनि खरीद गर्न सकिन्छ ।
**वा हामीलाई सिधै इन्स्टाग्राममा @Vedantaherbal**

SINCE 1991
VEDANTA
HERBALS

HIMALAYAN ESSENCE



KANTIPUR DAY
32 ANNIVERSARY
FALGUN 7TH

ekantipur.com
नयाँ पुस्ता
सपना र सम्भावना

३२ औं
वार्षिकोत्सव

Wednesday, 19 February, 2025

बुधबार, ७ फागुन २०८१



नयाँ पुस्ता

## सपना र सम्भावना बोकेका युवालाई साथ र साहस

नेपालमा जनसंख्याको ४२.५६ प्रतिशत जनशक्ति युवा (१६ देखि ४० वर्ष) छ। अझ, उत्पादनशील उमेर समूह (१५ देखि ६४ वर्ष) को जनशक्तिको संख्या करिब ६५ प्रतिशत पुगेको छ। जनसांख्यिक लाभ भनिने यस्तो क्षण हरेक देशलाई आउँछ, तर यो दीर्घकाल रहँदैन। त्यसैले दुर्लभ अवसरको अधिकतम उपयोग गर्नैपर्ने दबाबमा हामी छौं।

नेपाली युवा क्षमता उपयोगको तीव्र पर्खाइमा छन्, त्यसैले अवसर खोज्दै विदेश पनि धाइरहेका छन्। विदेश गएकाले इलम र अध्ययन गरेका छन्, विदेशबाट फर्किएका र नेपालमै बसेकाले पनि उद्यम तथा व्यापारमा नयाँ-नयाँ प्रयोग गरिरहेका छन्। कृषिमा नवप्रवर्तन, उद्योगमा लगानी र व्यवसायमा नयाँ जोखिम लिँदै युवाले आफूलाई सावित गर्ने प्रयास गरिरहेका छन्। पुराना घरानाको नेतृत्व लिएको नयाँ पुस्ताले पनि व्यावसायिक शैलीलाई आर्थिक तथा प्राविधिक रूपमा रूपान्तरण गरिरहेको छ।

युवा पुस्ताकै सिर्जनशीलताबाट प्रविधिले फड्को मारेको छ। सूचना प्रविधि सेवा निर्यातबाट नेपालमा विदेशी मुद्रा भित्रिने क्रम बढ्दै छ। नयाँ पुस्ताको प्रतिभाले नै आर्टिफिसियल इन्टेलिजेन्स (एआई) को अनुसन्धान, विकास, प्रयोग, आम्दानी र रोजगारी सिर्जनामा देशलाई नयाँ युगमा डोऱ्याउँदै छ।

कला र खेलकुदमा पनि युवा पुस्ताले कीर्तिमान बनाउँदै छ। नेपालीले सिर्जना गरेका चलचित्रले विश्व रंगमञ्चमा स्थान पाउन थालेका छन् भने खेलकुदका क्षेत्रीय र अन्तर्राष्ट्रिय स्पर्धामा नेपालीको प्रदर्शन अब्बल हुँदै गएको छ।

हरेक क्षेत्रलाई संरक्षण र प्रवर्द्धन गर्ने मूल नीति भने राजनीति नै हो। हाम्रो राजनीतिप्रति समाज निराश छ तर राजनीतिमा पनि युवा पुस्ताको सरोकार र सहभागिता बादलमा चाँदीको घेरा हो भन्न संकोच मान्नुपर्दैन। संघीय र प्रादेशिक संसद्मा युवा पुस्ताको संख्या उल्लेख्य बढेको छ भने स्थानीय तहका ४२ प्रतिशत पदमा नयाँ पुस्ता छन्। संसारले जस्तै नेपाली समाजले पनि युवा पुस्ताप्रति आशा र भरोसा बढाउँदै लगेको छ। त्यसैले अत्यासलाग्दो वर्तमान चिर्न नयाँ पुस्ताले सार्थक हस्तक्षेप गर्नेछ भन्नेमा विश्वास बढेको छ। राजनीति, अर्थतन्त्र, सूचना प्रविधि, कला र खेलकुदमा सपना र सम्भावना बोकेका युवालाई साथ, साहस र हौसला प्रदान गर्ने पहल हो कान्तिपुर पब्लिकेशन्स्को ३२ औं वार्षिकोत्सव विशेषांक- नयाँ पुस्ता।

# लोक सेवा तयारी गर्दागर्दै सांसद बनें

**युवा सांसदमा केही गरौं भन्ने हुटहुटी छ, जुनसुकै दलका भए पनि पुरानो तरिकाले काम हुँदैन भन्ने समान मत देखिन्छ, तर यहाँ दलको निर्णयअनुसार चल्नुपर्ने बाध्यता छ, पाका नेताको कुरा मान्नैपर्ने अवस्था छ, युवा सांसदका कुरा कमै सुनिन्छ, मुख्य नेताकै निर्णय लागू हुन्छ**



**अनिशा नेपाली**
प्रतिनिधिसभा सदस्य, राप्रपा



राजनीतिमा आउनुअघि स्वास्थ्य क्षेत्रमा काम गर्ने चाहना थियो। संयोगवश राजनीतिक दलको प्रतिनिधित्व गर्ने अवस्था आयो। मैले अहेब पढाइ सकेर अस्पतालमा काम गरिरहेका बेलामा राष्ट्रिय प्रजातन्त्र पार्टीमा विधिवत् रूपमा २०७३ माघमा जोडिन पुगें। २०७४ को निर्वाचन आइरहेको थियो। समानुपातिक वा प्रत्यक्ष निर्वाचनको उम्मेदवार हुने सोचेको पनि थिइनँ। त्यसबेला मैले सल्यान राप्रपा अध्यक्षलाई भनेको थिएँ, म पार्टीको उम्मेदवार हुन्नँ। अरू साथीलाई बनाउँदा राम्रो हुन्छ। त्यसबेला म लोक सेवाको तयारी गरिरहेको थिएँ। स्वास्थ्य सहायक (अहेब) को पढाइ सकेर अस्पतालमा काम गरिरहेका बेला मलाई राप्रपाले समानुपातिक उम्मेदवार बनायो। पार्टीभित्र उम्मेदवार बन्ने अरू धेरैको चाहना थियो। समानुपातिक सूचीमा खसआर्यको तर्फबाट उम्मेदवार हुने चाहना धेरैको थियो। तर पार्टीले दलित क्लस्टरबाट मलाई उम्मेदवार बनायो। त्यसपछि म समानुपातिक सूचीबाट प्रतिनिधिसभाको सदस्यमा निर्वाचित भएँ।

सांसद हुनुभन्दा पहिले संसदीय प्रक्रियाबारे खासै थाहा थिएन। शपथ खाएर संसद्मा प्रवेश भइसकेपछि मात्र थाहा भयो, यो त अर्कै ठाउँ रहेछ। हामीले बाहिरबाट सोचेजस्तो त्यहाँ गएर जनताको पक्षमा काम गर्न सक्ने अवस्था गाह्रो रहेछ। सांसदमा निर्वाचित भएसकेपछि यो गर्थ्यौं, त्यो गर्थ्यौं होला भनेर जे सोचिन्थ्यो, ममाथि जुन जोस थियो, सांसद भएपछि बिस्तारै खुम्चिँदै गयो।

संसद्भित्र व्याप्त दलीयकरण छ। सत्तापक्ष र प्रतिपक्षबीच चर्को द्वन्द्व छ। सरकारमा भएको दलका सांसदलाई काम गर्न अलि सजिलो छ। तर प्रतिपक्षमा रहेका, अझ साना दलका सांसदको कुरा सुनिँदैन। जनताको काम गर्न गाह्रो रहेछ। केही काम लिएर मन्त्रालय गयो भने पार्टी हेरिन्छ। कर्मचारीतन्त्रले सत्तापक्षको हो कि होइन वा प्रतिपक्ष भए पनि ठूलो दलको हो कि होइन भनेर हेरेको देखिन्छ। संसद्मा सांसद दलको निर्णयअनुसार चल्नुपर्ने हुन्छ। दलले जे निर्णय लिन्छ, त्यही अनुसार चल्नुपर्ने हुन्छ। आफूलाई गलत लागेको कुरा पनि बोल्न पाइँदैन। किनभने दलको निर्णयअनुसार संसद्मा प्रस्तुत हुनुपर्छ।

हाम्रो दलमा युवालाई प्रोत्साहन गर्ने नीति छ। त्यसैले मैले ३० वर्षको उमेरमा सांसद हुने अवसर पाएँ। अध्यक्ष राजेन्द्र लिङ्देनले ४० वर्षमुनिका व्यक्तिलाई अवसर दिनुपर्छ भनेर महाधिवेशनमा खुला आह्वान गर्नुभएको थियो। त्यही अनुसार केन्द्रीय समिति चयन गर्न लिखित र मौखिक अन्तर्वार्ता लिइएको थियो। हामी त्यसरी केन्द्रीय सदस्य भएका थियौं। हाम्रो विगतको काम, शैक्षिक अवस्था, चेतना स्तरका आधारमा हामीलाई केन्द्रीय सदस्य चयन गरिएको थियो। त्यसरी केन्द्रीय सदस्य हुनेमा कोही इन्जिनियर, वकिल, स्वास्थ्य क्षेत्रको अध्ययन गरेका व्यक्ति थिए।

युवा सांसदमा केही गरौं भन्ने हुटहुटी छ। जुनसुकै दलका भए पनि युवा सांसदमा पुरानो तरिकाले काम हुँदैन भन्ने समान मत देखिन्छ। तर यहाँ दलको सीमारेखाले सबै युवा सांसदले संयुक्त रूपमा काम गर्न मिल्दैन। दलको निर्णयअनुसार चल्नुपर्ने बाध्यता छ। संसद्मा पाका नेताको कुरा मान्नैपर्ने अवस्था छ। युवा सांसदका कुरा कमै सुनिन्छ। मुख्य नेताकै निर्णय लागू हुन्छ। सबै दलको अवस्था यही हो।

पुराना नेताले वर्षौंदेखि गर्दै आएको राजनीति र युवा पुस्ताले सोच्ने गरेको राजनीति फरक छ। युवा सांसदकै कुरा गर्ने हो भने उनीहरूले युवा पुस्ताका लागि सोचेर धारणा बनाउँछन् भने पाका सांसदमा परम्परागत सोच देखिन्छ। पाका सांसदले कतिपय विषयमा बुझ पचाएर कामकुरा गरेको देखिन्छ। सायद युवा सांसदमा त्यो छैन। जिम्मेवारी पाउने हो भने युवा सांसदले नयाँ ढंगले काम गर्न सक्छन्। **बाँकी पृष्ठ १०**

# समय आएको छ– युवा उठ्न र नेतृत्व गर्न

**मेरो अनुहार जलाएर मलाई तर्साउने सोच राख्नेलाई भन्न चाहन्छु– म आगोमा बलें तर खरानी भइनँ, संसद्सम्म आइपुगें, मलाई लाग्छ, मजस्तै हजारौं युवाले आफूलाई अब्बल बनाउने मौका पाउनुपर्छ**



**बिन्दवासिनी कंसकार**
प्रतिनिधिसभा सदस्य, रास्वपा, तेजाब आक्रमणपीडित एवं युवा अधिकारकर्मी

म एक सांसद मात्र होइन, तेजाब आक्रमणपीडित पनि हुँ। जीवनभर मेरो अनुहारमा लागेको घाउजस्तै समाजमा रहेको असमानता, अन्याय र अवसरको खाडल मैले नजिकबाट देखेकी छु। मलाई लागेको चोट व्यक्तिगत मात्र थिएन, त्यो हजारौं नेपाली युवाको प्रतिनिधित्व गर्ने एउटा पीडा थियो– जहाँ महिला असुरक्षित छन्, जहाँ युवाले आफूलाई अब्बल प्रमाणित गर्न अनगिन्ती संघर्ष गरिरहनुपर्छ।

संसद्मा प्रवेश गर्दा थाहा पाएँ कि युवाको मुद्दा केवल भाषणमा मात्र होइन, नीतिमा रूपान्तरण हुनुपर्छ। केवल ऐन कानुन बनाउने सांसद भएर मात्र आएको होइन कि परिवर्तनको संवाहक भएर आएको मैले अनुभव गरेको छु। मलाई थाहा छ, म जस्तै संघर्ष हजारौं युवाले गरिरहेका छन्। रोजगारी अभाव, सीपमूलक शिक्षाको कमी, राजनीतिक अवसरबाट वञ्चित हुनुपर्ने अवस्था भोगिरहेका छन्। सबैभन्दा ठूलो चुनौती हो, समाजले युवा वर्गलाई बुझ्न नसक्नु।

नेपालको जनसंख्याको झन्डै ४० प्रतिशत युवा छन्। यति ठूलो जनसंख्या हुनु आफैंमा अवसर हो। तर, ती युवाले उचित ठाउँ पाइरहेका छैनन्। हाम्रो शिक्षा प्रणाली अझै परम्परागत छ, जसले व्यावहारिक सीप दिन सक्दैन। सरकारी नीति युवाका लागि बनाइए पनि कार्यान्वयन पक्ष कमजोर छ। हजारौं युवा सीप नहुँदा बेरोजगार छन् र विदेशिन बाध्य छन्।

सामाजिक संरचनाले पनि युवालाई दबाउने काम गर्छ। विशेष गरी महिला र कमजोर समुदायका युवालाई निर्णय प्रक्रियाबाट बाहिर राखिन्छ। संसद्मा आएपछि मैले महसुस गरेको अर्को कुरा हो– पुरानो सोच राख्ने धेरैले युवा नेतृत्वलाई सहज रूपमा स्वीकार गर्न सकेका छैनन्।

नेपालमा शिक्षित युवाको संख्या ठूलो छ। तर, उनीहरू रोजगारी पाउन असमर्थ छन्। शिक्षाले व्यावहारिक सीप दिन सक्दैन भने त्यो निरर्थक बन्छ। देशभित्रै रोजगारीको अवसर सिर्जना गर्न तथा बाहिर जाने युवाले पनि राम्रो काम पाउन रोजगारमूलक शिक्षा आजको आवश्यकता हो। विश्वविद्यालय शिक्षालाई उद्योगसँग जोडेर व्यावहारिक बनाउनुपर्छ। सीपमूलक कार्यक्रमलाई प्राथमिकता दिनुपर्छ। स्टार्टअप तथा उद्यमशीलतालाई प्रवर्द्धन गर्न अनुदान र सहुलियत ऋण दिनुपर्छ।

अर्को प्रसंग, युवा हिंसाको सिकार पनि भइरहेका छन्। म आफैं तेजाब आक्रमणको सिकार भएकी छु। मेरो अनुहारमा तेजाब फालेर मलाई कमजोर बनाउने चेष्टा गरियो। तर, त्यो घटनाले मलाई अझै बलियो बनायो। म मात्रै होइन, हजारौं नेपाली महिला हिंसाको सिकार भइरहेका छन्। त्यसतर्फ सरकार र समाजको ध्यान जान जरुरी छ। तेजाब आक्रमणविरुद्ध कडा कानुन ल्याउन र बनेको कानुन कार्यान्वयन गर्न जरुरी छ। पीडितलाई कानुनी सहायता, मनोवैज्ञानिक सहयोग र आर्थिक पुनःस्थापना प्रदान गरिनुपर्छ। हिंसाविरुद्ध शून्य सहनशीलता नीतिको प्रभावकारी कार्यान्वयन हुनुपर्छ।

युवालाई नेतृत्व र निर्णय प्रक्रियामा पहुँच दिनुपर्छ। युवा स्वयं आफूले भोगिरहेका समस्या समाधान गर्न अग्रसरता लिन सक्छ। नेपालमा युवा राजनीतिज्ञको संख्या बढ्दो छ। तर, उनीहरूलाई अझै निर्णय प्रक्रियामा ल्याइँदैन। नेतृत्व गर्न सक्छ भनेर विश्वास गरिँदैन। युवालाई कसरी नेतृत्वदायी भूमिकामा पुऱ्याउने यस सन्दर्भमा नीति निर्माताले ध्यान दिन आवश्यक छ।



> देशभित्रै रोजगारी सिर्जना गर्न रोजगारमूलक शिक्षा आवश्यक छ, विश्वविद्यालय शिक्षालाई उद्योगसँग जोडेर व्यावहारिक बनाउनुपर्छ, स्टार्टअप तथा उद्यमशीलतालाई प्रवर्द्धन गर्न अनुदान र सहुलियत ऋण दिनुपर्छ

संसद् होस् वा पालिका सबैतिर युवा आरक्षण नीति लागू गरिनुपर्छ। स्थानीय तहदेखि संघीय सरकारसम्म युवाको प्रतिनिधित्व बढाउनुपर्छ। राजनीतिलाई पारदर्शी र समावेशी बनाउँदै युवा सहभागितालाई प्रोत्साहन गर्नुपर्छ। राजनीतिक दलको कार्यकारिणी तहदेखि राज्य सञ्चालनका कार्यकारी निकायमा युवाको प्रतिनिधित्व बढाइने निर्णायक कदम चाल्न जरुरी छ। सबैतिर युवा जमातको हस्तक्षेप आवश्यक छ।

समाजमा बढ्दो प्रतिस्पर्धा, बेरोजगारी र असुरक्षाका कारण युवाले मानसिक तनावसमेत भोग्नुपरेको छ। आजको समयमा मानसिक स्वास्थ्यको विषयलाई पनि राष्ट्रिय प्राथमिकतामा राख्नुपर्छ। त्यसका लागि देशव्यापी अभियान चलाइनुपर्छ। शैक्षिक संस्थाहरूमा परामर्श केन्द्र स्थापना गर्नुपर्छ।

चुनौतीसँगै युवाका लागि ठूलो सम्भावना पनि छ। नेपालमा डिजिटल क्षेत्रको विकास तीव्र रूपमा भइरहेको छ। सही नीति ल्याइयो भने, डिजिटल उद्यमशीलता बढ्न सक्छ। त्यसले रोजगारी तथा आम्दानीको अवसर सिर्जना गर्ने प्रशस्तै सम्भावना छन्।

नेपालको जलवायु परिवर्तन नीतिमा युवाको सहभागिता आवश्यक छ। हरित ऊर्जा, जैविक कृषि र दिगो पर्यटनजस्ता क्षेत्रमा युवा नेतृत्व हुनुपर्छ। युवाका लागि विदेशमा अध्ययन र काम गर्ने थुप्रै अवसर छन्। सरकारले सही नीति ल्याएर ती अवसर उपयोग गर्ने वातावरण बनाउनुपर्छ।

संसद् प्रवेश गरेपछि कानुन, नीति निर्माण प्रक्रिया र कार्यान्वयन पक्षको वास्तविकता नजिकबाट बुझ्न पाएकी छु। जब गैरसरकारी मानव शरीर जलन नियन्त्रण तथा सजाय विधेयक (जलन विधयक) ल्याउने विषयमा काम गरें तब थाहा भयो हाम्रो कानुनी संरचना बलियो भए पनि कार्यान्वयन पक्ष निकै कमजोर छ।

म आफैं जलनपीडित भएकाले यो विधेयक मेरा लागि व्यक्तिगत लडाइँजस्तै हो। संसद्मा यो विषय उठाउँदा धेरैले यसलाई गम्भीर रूपमा लिएनन्। किनभने, पीडितको पीडा महसुस गर्नेहरू थोरै मात्र छन्। तर, म पछि हटिनँ र विधेयक नै बनाएर दर्ता गराएँ। सकेसम्म विधेयक टेबल गर्न कोसिस गरिरहेको छु। १४ जना माननीयले संयुक्त रूपमा गत साउन ३१ मा मानव शरीर जलन नियन्त्रण तथा सजायसम्बन्धी व्यवस्था गर्न बनेको गैरसरकारी विधेयक दर्ता गराएका हौं। एउटा सांसदको काम सरकारले ल्याएको विधेयकमा मात्रै छलफल गर्नु हुँदैन। देश र समाजलाई आवश्यक देखिएको कानुन निर्माणका लागि आफूले पनि विधेयक ल्याउन सक्छ। त्यसैअनुसार जलनसम्बन्धी कानुन नभएकाले त्यसको आवश्यकता महसुस गरेर विधेयक दर्ता गराएका हौं।

मानव शरीर जलनसम्बन्धी घटनाबाट पीडित नागरिकको उद्धार, उपचार र राहतसम्बन्धी विषयमा विद्यमान ऐनमा कुनै पनि प्रभावकारी व्यवस्था छैन। विशेष कानुन नभएकैले मानव शरीर जलन नियन्त्रण सम्बन्धमा कानुनी व्यवस्था गर्न विधेयक दर्ता गराएका हौं। जलनपीडितलाई राहत पुऱ्याउन, जलनका घटना गराउनेलाई कारबाही गर्न, हानि नोक्सानीप्रति जवाफदेही बनाउन एवं उत्तरदायी बनाउने लक्ष्य विधेयकले राखेको छ। क्षतिपूर्ति भराउन र पीडकलाई कडा सजाय गराई यस्तो घटना निरुत्साहित गर्न उक्त कानुनको आवश्यकता छ। यो अत्यावश्यक कानुन हो। यसलाई प्राथमिकतामा राखेर अगाडि बढाउन सदन र सरकारले ध्यान दिनुपर्छ। सरकारले यस्ता विषयलाई ध्यानमा राखेर प्रोत्साहन दिनुपर्छ, राजनीतिक हिसाबले हेरेर पन्छाउने काम मात्रै गरिनुहुन्न।

मेरो अनुहार जलाएर मलाई तर्साउने सोच राख्नेलाई म भन्न चाहन्छु– म आगोमा बलें तर खरानी भइनँ, संसद्सम्म आइपुगें। मलाई लाग्छ, मजस्तै हजारौं युवाले आफूलाई अब्बल बनाउने मौका पाउनुपर्छ।

सरकारले युवाकेन्द्रित नीति ल्याउनु जरुरी छ र यसका लागि निरन्तर लडिरहनेछु। युवा पुस्ता जबसम्म संगठित भएर अगाडि आउँदैन, तबसम्म परिवर्तनको यात्रा अपूरो नै रहन्छ। त्यसैले, अब समय आएको छ– युवा उठ्न, नेतृत्व गर्न र देशलाई नयाँ दिशा दिन। यदि म सक्छु भने, तपाईं पनि सक्नुहुन्छ। युवाको आवाज सडकदेखि सदनसम्म उठ्नु जरुरी छ। म चाहन्छु कि भुइँमान्छेको संघर्ष केवल व्यक्तिगत लडाइँमा सीमित नरहोस्। यो हाम्रै पुस्ताको संघर्ष हो– न्यायका लागि, अवसरका लागि र असल भविष्यका लागि।

# कार्यकारी तहमै समावेशी नेतृत्व

**संविधानले संसद्लाई त समावेशी बनायो, तर कार्यकारी तह समावेशी छैन, मुख्य काम कार्यकारी तहबाट कार्यान्वयन गर्नुपर्ने हुन्छ, सरकारमा दलितको प्रतिनिधित्वमा खासै ध्यान दिइएको छैन**

**सीता मिजार**
प्रतिनिधिसभा सदस्य,
कांग्रेस

विद्यार्थी राजनीति गर्दागर्दै सांसद भएँ। युवा उमेरमै संसद्भित्र छिर्न पाउँदा उत्साही पनि भएँ। सँगै जिम्मेवारीले थिचेजस्तो पनि भयो। तर, मनभरि सपना थिए। म हुर्केको, हिँडेको गाउँ र खासगरी आर्थिक रूपमा कमजोर, सामाजिक रूपमा अपहेलित समुदायको प्रतिनिधित्व गरेर म त्यहाँ पुगेको थिएँ। समुदायका दुःख र आँसु पुछ्न सक्छु कि भन्ने दृष्टिले सुरुका दिन निकै उत्साही भएँ। केही गर्ने हुटहुटी पनि थियो।

मनभरि सपना र आशाका किरण बोकेर संसद् छिरेको आज दुई वर्ष दुई महिना बितिसकेको छ। यसबीचमा बागमतीमा धेरै पानी बगिसक्यो। तर, जुन उद्देश्य र लक्ष्य बोकेर म संसद्भित्र छिरेको थिएँ, तिनमा अपेक्षित परिणाम भने प्राप्त गर्न नसकेको आफैंलाई अनुभव हुन्छ। प्रयास जारी छ। तर, संसद्मा छिरेर मात्र सबै कुरा पूरा नहुने रहेछ। मूलतः संसद् र सांसदको मूल दायित्व कानुन बनाउने काम हो। तर, त्यहाँ पुगेर कानुन बनाउने मात्र होइन, सामाजिक, आर्थिक र सांस्कृतिक रूपमा पछाडि परेका वर्ग र समुदायको न्यायका लागि लड्ने थलो पनि हो। त्यसका लागि बारम्बार आवाज उठाउने मूल दायित्वबाट म चुकेको छैन। थाकेको छैन। राज्यले कति सुन्छ, कति सुन्दैन भन्ने कुरा बेग्लै भयो। तर, पछाडि परेका वर्ग, समुदायको न्यायका लागि आवाज संसद्मा नउठ्ने हो भने भेदभाव र अन्यायरहित समाज निर्माण सहज देखिन्न।

सबै खालका अन्यायबाट मुक्त समाज निर्माण गर्ने हाम्रो मूल दायित्व हो। त्यसका लागि संसद्मा मेरो कति भूमिका हुन्छ ? कति गर्न सकिन्छ ? त्यसमा म दत्तचित्त छु। राज्यलाई कर्तव्यच्युत हुनबाट रोक्न, सबै खालका अन्याय र अत्याचार बन्द गर्न खबरदारी गर्ने र राज्यले झकझकाउने काम गरेको छु।

संविधान आफैंमा राम्रो छ। मौलिक हकले सबै वर्ग र समुदायको आर्थिक, व्यावसायिक र रोजगारीका हक ग्यारन्टी गरेको छ। संविधानमा व्यवस्था गरिएका मौलिक हकलाई कार्यान्वयनमा ल्याउन आवश्यक कानुन अझै बन्न सकेको छैन। कानुन निर्माण गर्ने, कानुनलाई कार्यान्वयन गर्ने नियमावली बनाउने काम अझै गर्न बाँकी छन्। त्यसका लागि बारम्बार दबाब दिने र खबरदारी गर्ने काम संसद् र आफूले प्रतिनिधित्व गर्ने कांग्रेस पार्टीभित्र पनि बारम्बार गरेको छु। अझ बनेकै कानुन कार्यान्वयनको पाटो पनि नाजुक छ। संघीय प्रणालीअन्तर्गत तीन तहमै दलित, महिला, जनजाति, मधेशी, पिछडिएका वर्ग र समुदायको विकासका लागि सांस्कृतिक संरक्षण र आर्थिक सुधारका कार्यक्रम सरकारका नीति तथा योजनामा समावेश गर्ने, बजेटमा पार्नेमा भूमिका निर्वाह गर्दै आएको छु।

यो अवधिको अनुभवले के देखायो भने बाहिरबाट जस्तो गर्छु भनेर संसद् आएको थिएँ, त्यही भावनाका साथ गर्न नसकिने रहेछ। सोचेको जस्तो एजेन्डा, मुद्दा राख्न सकिने अवस्था छैन। तर प्रयास जारी छ। त्यसमा पनि हामीलाई हेर्ने दृष्टिकोण धेरै फरक छ। कार्यगत रूपमा संसद्भित्र पनि सामूहिकताको भावना एकदमै कम छ। संविधानले संसद्लाई त समावेशी बनायो। तर, कार्यकारी तहमा समावेशी छैन। मुख्य काम कार्यकारी तहबाट कार्यान्वयन गर्नुपर्ने हुन्छ। त्यसमा दलित आफैं पुगेर कार्यान्वयन गर्ने कुरामा अझै कमजोरी छन्। कार्यकारी अर्थात् सरकारमा दलितको प्रतिनिधित्वमा खासै ध्यान पुग्दैन। भई हाले पनि नाम मात्रैको प्रतिनिधित्व हुने गर्छ। त्यसैले कार्यकारीलाई बारम्बार दबाब पुऱ्याउनुपर्ने हुन्छ। तर, संसद्मा एउटा समुदायले उठाएको मुद्दा अर्को समुदायले खासै मतलब नराख्ने, दलिको मुद्दा दलितले मात्रै, आदिवासी जनजाति, मधेशी, थारू, अल्पसंख्यकका मुद्दा त्यही समुदायले मात्रै उठाउने जस्तो छ। अरू समुदायका माननीयले प्राथमिकता नदिने अर्थात् त्यसमा ऐक्यबद्धता नजाउने व्यवहार छ। पार्टीभित्र पनि विचार र दृष्टिकोणमा एकरूपता छ। मुद्दामा र ऐक्यबद्धतामा कमी छ। यसलाई चिर्नु आवश्यक छ।




समावेशिता आफैंमा राम्रो पक्ष हो। समावेशिताकै कारण बहुजाति, बहुभाषी, बहुधार्मिक समुदायको अनुहार आज संसद् भित्र देखिन्छ। यो सुन्दर पक्ष हो। यसले तल्लो समुदायका व्यक्तिको क्षमता विकासमा सहयोग पुऱ्याएको छ। तर, शासकीय पहुँच र राज्यको संरचनाको पहुँच बढाउन अझै बाँकी छ। संसद्मा सबैको प्रतिनिधित्व हुँदा संसद्बाट बन्ने कानुनहरूको अपनत्व ग्रहण गर्ने काम हुन्छ। अर्कोतर्फ राज्यले न्याय गरे वा नगरेको विषयलाई नजिकबाट निकाल्ने काम हुन्छ। तर, समावेशिता जुन लक्ष्य र वर्ग समुदायको प्राथमिकतामा पर्नुपर्ने हो यदाकदा त्यसो हुन सकेको छैन। समुदायभित्रै पनि पछाडि परेका व्यक्तिलाई माथि ल्याउने काम यसको मुख्य लक्ष्य हो तर त्यहाँभित्र पनि टाठाबाठाले बढी अवसर पाएका छन्। यसको व्यवस्थापन सही ढंगले गर्न सकिएन भने द्वन्द्व र मनमुटाव सिर्जना हुने अवस्था आउन सक्छ। त्यसैले तल्लो वर्ग र समुदायको सशक्तीकरणका लागि, उनीहरूको आर्थिक, सामाजिक र सांस्कृतिक हक स्थापित गर्नका लागि समावेशिता चाहिन्छ। तर, संसद्मा प्रतिनिधित्व अनुहारले मात्रै सम्पूर्ण काम गर्न सक्दैन। संसद्भन्दा माथि सरकार छ। सरकारमा अझै पनि दलितको प्रतिनिधित्व देखाउनेका निम्ति मात्रै छ। कहिलेकाहीं त शून्य नै हुन्छ। यसले दलितका आवाज, मुद्दा र सरोकारका विषयमाथि राज्यले प्राथमिकता दिने र आवश्यक नीति, योजना र कार्यक्रम अघि बढाउने दिशामा सोचेजस्तो काम भएको छैन। संसद्सँगै कार्यकारी र राज्यका अरू महत्त्वपूर्ण निकायमा समेत प्रतिनिधित्व आवश्यक छ।

राजनीतिक अधिकार प्राप्ति त भयो र अधिकार उपयोग गर्न अझै पनि थुप्रै कानुन बन्न बाँकी छन्। खासगरी मौलिक हक कार्यान्वयनको दिशामा आवश्यक कानुन आउन सकेको छैन। त्यसका लागि सरकारलाई सशक्त दबाब दिनु आवश्यक छ।

सम्पूर्ण किसिमका भेदभावलाई सामाजिक अपराधका रूपमा संविधान र कानुनमा व्यवस्था गरिएको युगौं भइसक्यो, तर आज पनि दलितमाथि भेदभेव कायमै छ। हालै मात्र नेहा र सत्यन्त्रको अन्तरजातीय विवाह बदर गराउन भइरहेको दबाव र उनीहरूको सुरक्षालाई लिएर राष्ट्रिय मुद्दा नै बन्न पुग्यो। रुकुम पश्चिम घटनामा मारिएका जाजरकोटका नवराज विश्वकर्माको नियति यो समाजमा फेरि अरू कसैले भोग्न नपरोस् भन्न संसद् र सडक संघर्ष गर्नुपर्ने अवस्था छ। समाजमा घटेका विभिन्न घटनाले दलितका नाममा हुने भेदभावपूर्ण व्यवहार र घटनाबारे अनुसन्धान गर्न प्रहरीमा एउटा विशेष अनुसन्धान युनिट नै हुनुपर्छ भन्ने पछिल्लो नेहा र सत्यन्त्रको घटनाले उजागार गरेको छ।

एउटा सांसदमाथि समाजको ठूलो अपेक्षा हुन्छ। खासगरी पछाडि परेका दलित समुदायबाट त आर्थिक सुरक्षा र जीवनयापनको समस्या हल गरिदिए हुन्थ्यो भन्ने अपेक्षा रहन्छ। सांसदले गर्न सक्ने सीमितताका बारेमा उनीहरूमा राम्रो ज्ञान हुँदैन। आर्थिक र कानुनी रूपमा कसरी सुरक्षित गर्ने ? सामाजिक र सांस्कृतिक न्याय कसरी गर्ने ? आयआर्जन, व्यवसायमा कसरी आबद्धता गराउने ? त्यसको स्रोतको व्यवस्थापन कसरी गर्ने ? अहिलेको मुख्य चुनौती छन्। आर्थिक जीवनस्तर नउठाईकन आत्मसम्मानका साथ बाँच्न पाउने अधिकारसमेत दिलाउन मुस्किल हुन्छ। त्यसैले सबैभन्दा ठूलो पछाडि परेका समुदायका आर्थिक सुरक्षा नै मुख्य चुनौती मैले अनुभव गरेको छु। सरकारको नीति र कार्यक्रम यस दिशामा केन्द्रित हुन जरुरी छ। नीति तथा कार्यक्रम र बजेट पार्न एउटा सांसदले गर्ने भनेको राज्यलाई झकझकाउने र दबाब दिने मात्र हो। सरकारको नीति नभएको पनि होइन, छ। तर, वास्तविक र लक्षित समुदायसम्म त्यस्तो कार्यक्रम पुग्न सकिरहेको छैन। एउटा समस्या के पनि छ भने संघले प्रदेशलाई देखाउने, प्रदेशले स्थानीयलाई देखाउने र स्थानीयमा कहीं कतै पनि कार्यक्रम नभेटिने अवस्था पनि विद्यमान छ।

राज्यले गर्नुपर्ने मूल दायित्व भनेको दलितको उत्थानका लागि परम्परागत रैथाने सीपको संरक्षण गर्ने र उनीहरूको वृत्ति विकासका लागि कार्यक्रम लैजानुपर्छ। रैथाने पेसा र व्यवसायको संरक्षणको नाममा जाने बजेट पनि लक्षित समुदायले नपाइरहेको अवस्था छ। यस्ता कार्यक्रम लक्षित समुदायमा पुगेको छ कि छैन, नगएको भए पुऱ्याउने, अन्यत्र गएको रहेछ भने सच्याउने जस्ता कामका लागि निगरानी बढाउनुपर्ने देखिन्छ।

अहिले संसद्मा तीन पुस्ताको प्रतिनिधित्व देखिन्छ। हजुबादेखि नाति पुस्तासम्मको प्रतिनिधित्व संसद्भित्र छ। तर, हामीजस्ता युवाको संसद्मा केही संख्यामा प्रतिनिधित्व भए पनि उनीहरूको निर्णायक भूमिका छैन। कार्यकारीमा प्रतिनिधित्व कम छ। पुरानो पुस्ताका नेता जसले राज्यको सम्पूर्ण राजकाज चलाइरहनुभएको छ, उहाँहरूले युवाहरूको भावना बुझेर अघि बढ्दा राम्रो हुन्थ्यो। तर, हामीहरूको सोचाइ र स्पिड एकातिर र राजकाज चलाउन पुराना पुस्ताका नेताहरूको भावना अर्कोतिर गएको जस्तो लाग्छ। भावना बुझ्नु हुन्छ। मुद्दा बुझ्नु हुन्छ। तर, कार्यान्वयनमा जाने बेलामा कहीं न कहीं चुकेको जस्तो लाग्छ। सांसदहरूबीचमा पनि मुद्दा विशेषमा एकताभन्दा पनि प्रतिस्पर्धा बढी देखिन्छ। त्यसैले संसद् अहिले मेरा लागि सिक्ने र अझ बुझ्ने काम भइरहेको छ।

# हामी युवा अलि अराजक पनि छौं

**पहिले म बुबा (संविधानसभा अध्यक्ष सुवासचन्द्र नेम्वाङ) सँग कराउँथें, राजनीतिमा युवा चाहिन्छ भन्नुहुन्थ्यो बुबाले, मैले भन्थें, 'तपाईंहरूले न्यायपालिका, कार्यपालिका सबै ध्वस्त बनाउनुभयो, अनि युवा आउनुपर्छ भन्ने ? तपाईंहरूले भत्काएको सपार्न आउनुपर्ने ?'**

सुहाङ नेम्वाङ
प्रतिनिधिसभा सदस्य, एमाले

राजनीतिमा युवाको उपस्थिति अपरिहार्य छ । वर्तमान मात्र होइन विगत हेर्ने भने राजनीतिमा युवा कति आवश्यक थियो र छ भन्ने पुष्टि हुन्छ । एमालेका नेता मदन भण्डारीदेखि अहिले राजनीतिको केन्द्रमा रहेका केपी शर्मा ओली, माधव नेपाल, झलनाथ खनाल, पुष्पकमल दाहाल, जो जो हुनुहुन्छ सबै युवावयदेखि नै राजनीतिमा हुनुहुन्थ्यो ।

अहिले स्थानीय तह, प्रदेश हुँदै केन्द्रसम्म युवाको राजनीतिमा लहर देख्न सक्छौं । त्यो हुनु आवश्यक पनि हो । नयाँ समस्यालाई नयाँ पुस्ताले समाधान गर्न सक्छ भनेर जनताले युवालाई म्यान्डेट दिएको हो । विगतमा पनि युवाले नयाँ ढंगले समस्या समाधान गर्न सक्छ भनेका कारणले गर्दा अहिले युवापुस्ताको लहर देख्न सक्छौं ।

मैले प्रतिनिधिसभा निर्वाचनको बेलादेखि नै युवासँगै अग्रज पनि आवश्यक छ भन्दै आएको छु । अहिले युवाको ऊर्जा आवश्यक हो र अग्रजको अनुभव पनि । युवाले आजको भोलि नै परिणाम चाहन्छौं । विकासको कुरा आजको भोलि गर्न खोज्छौं, जुन समय अवस्था र आवश्यकता हामीले बुझ्न नसकेका हुन सक्छौं । त्यस्तो कुराहरू अनुभव बोकेका अग्रजले बाटो देखाउन सक्नुहुन्छ ।

समयसापेक्षता अनुसार राजनीति हुन्छ । विगतमा राजनीति, दलीय प्रतिस्पर्धा, पार्टी र संगठन निर्माणको जुन अवस्था थियो अहिले त्यो छैन । हामी युवाले इतिहास बिर्सिंदै, नजरअन्दाज गर्दै छौं कि जस्तो लाग्छ । धेरै जनाले इतिहासका यो र त्यो गरेका थियौं भन्दाखेरि अलिकति चिढिने पनि गर्छौं । तर साँच्चिकै बुझ्ने हो भने जुन धरातलमा उभिएर हामीले प्रतिस्पर्धात्मक वातावरणबाट राजनीति गरिरहेका छौं, त्यो प्राप्त गर्नका लागि हाम्रा अग्रजले लडेर, व्यवस्था परिवर्तनमा खुन पसिना बगाएर ल्याउनुभएको हो । पहिलेको र अहिलेको परिस्थित फरक छ । पहिले बन्देज थिए, अहिले स्वतन्त्रता छ । तर, अहिले पनि त्यसरी नै लडेर, ढुंगा हानेर, भूमिगत भएर, टिकाटिप्पणी गरेर राजनीति गर्नुपर्छ भन्ने छैन । परिस्थितिसँगै राजनीतिक चुनौती पनि भिन्न छन् । प्रविधिको जमाना छ ।

युवा परिवर्तनका निम्ति इच्छुक हुन्छन् । परिवर्तन खोजिरहने भएकाले युवाले प्रश्न गर्छन् । प्रश्न गर्दैमा गलत हो भनिहाल्न हुन्न । प्रश्न गर्नु र खबरदारी गर्नु ठीक छ भनेर जानुपर्छ । हाम्रा अग्रज युवा हुँदा प्रश्न नै गर्नुभएको हो । त्यो प्रश्न गरेकै कारणले आजको नयाँ युगमा प्रवेश गरेका हौं । त्यसैले प्रश्नप्रति नकारात्मक हुनु र टिकाटिप्पणी गर्नु जरुरी छैन ।

अहिलेको हकमा अग्रजको आवश्यकता युवापुस्तालाई संयम बनाउन र सही बाटो देखाउनका लागि छ । हाम्रो प्रश्न ठीक छ तर प्रश्न गराइमा कमीकमजोरी छ भने अग्रजले हामीलाई सम्हालेर, संयम बनाएर यसरी जाउँ भनेर बाटो देखाउने काम गर्नुपर्छ । फेरि पनि जोड दिन चाहन्छु कि अहिले युवाको ऊर्जा आवश्यक छ । परिवर्तनको हुटहुटी बोक्ने ऊर्जा छ, त्यो अहिलेको आवश्यकता हो । हाम्रा अग्रजले अनुभव बोक्नुभएको छ । त्यसले संयम बनाउने उहाँहरूको काम हो ।

राजनीतिमा सूचना प्रविधिको नकारात्मक पाटोबारे चर्चा गर्न चाहन्न । प्रविधिलाई हामीले प्रयोग गर्ने हो, प्रविधिले हामीलाई प्रयोग गर्ने होइन । वर्तमान दृष्टान्त हेर्नुहुन्छ भने प्रविधिले हामीलाई प्रयोग गरेको जस्तो छ । अहिले पढेलेखेका युवामा नै पनि प्रविधिले



नकारात्मक प्रभाव पारेको छ । अर्को कुरा, अहिले सामाजिक सञ्जालमा जुन प्रकारको अफवाह, नैराश्यता, नकारात्मकता बढी भेट्छौं । हामीले खबरदारी गर्नुपर्छ । सञ्चारमाध्यमले पनि सत्य समाचार ल्याउनका लागि मिहिनेत गरेका छन् । ती कन्टेन्ट हेर्दा फरक परेन तर जुन तरिकाले सत्य र तथ्य काटकुट गरेर नकारात्मकता फैलाउने गर्दा युवा साथीको मस्तिष्कमा अराजक गतिविधि र नकारात्मक कन्टेन्टबाहेक केही पनि हेर्न पाउनुहुन्न । त्यसको कारणले आजको युवा भड्काउमा परेको छ । त्यसको अभिव्यक्ति हो 'देश बन्दैन' । त्यसको परिणाम हो निराश भएर विदेश पलायन हुने । त्यसैले सूचना प्रविधि र सामाजिक सञ्जाल प्रयोग गर्दा फिल्टर आवश्यक छ ।

म राजनीतिसँग चिरपरिचित भएको लामो समय भयो । आफू राजनीतिमा थिइनँ तर राजनीतिक चेतनाको कुरा गर्दा बुबा (संविधानसभा अध्यक्ष सुवासचन्द्र नेम्वाङ) सँग राजनीतिक विषयमा बातचित भइराख्थ्यो । अहिले उहाँको असामयिक निधनपछि म चुनावमा होमिएँ । सांसद बनेको १० महिना भयो । सांसद बन्नु पहिलेको र यो १० महिनाको राजनीतिक बुझाइमा ठूलो अन्तर आएको छ ।

पहिले म बुबासँग कराउँथे । राजनीतिमा युवा चाहिन्छ भन्नुहुन्थ्यो बुबाले । मैले के भन्थें भने तपाईंहरूले न्यायपालिका, कार्यपालिका सबै ध्वस्त बनाउनुभयो । अनि युवा आउनुपर्छ भन्ने ? हामी तपाईंहरूले भत्काएको सपार्न आउनुपर्ने ? हामीलाई त सहज वातावरण बनाउनुपर्छ ता कि नयाँ तरिकाले सोच्ने युवा आउँदा नयाँ नयाँ समस्या समाधान गर्न सकिन्छ भन्थें । तर, अहिले १० महिना कानुन निर्माणको क्षेत्रमा रहँदा यो क्षेत्र फरक पाएँ । यो १० महिनाको अन्तरालमा संसदीय समिति बैठकहरूमा सहभागी भइरहेको छु । दुई वटा विदेशमा आयोजित कार्यक्रममा सहभागी भएँ, दक्षिण कोरिया र चीन । विकास निर्माण र जलवायु परिवर्तनसँग सम्बन्धित कार्यक्रममा ती देशमा सहभागी भएको थिएँ । यो १० महिनालाई किन फरक भनेको भने बाहिरबाट हेर्दा जति सहज देखिन्छ, जति भोकल हुन सकिन्छ, त्यतिभित्र हुन सकिँदैन । आफ्ना कुरा राख्न पाइन्छ, ढुक्कसँग राख्न पाइन्छ । आफूले कुरा राख्दाखेरि के कुरा जनतासँग जोडिएको र आवश्यक हो भनेर फोकस भइन्छ । अझ विशेष गरेर कानुन निर्माणका बेला कुनै पनि खालको 'लुपहोल' छोड्नुहुन्न भन्ने मानसिकता पहिला पनि थियो र संसद्मा पनि छ । तर कानुन निर्माणमा पनि नीति र नियम हुन्छ । त्यसैअनुसारको वातावरण हुन्छ । संसद्मा फरकफरक विचार हुन्छन् । फरक विचारको पनि सम्मान गरेर कानुन निर्माण गर्ने बेलामा देश र जनताको हितका लागि भन्ने सोचेर आएका हुन्छौं । त्यसमा हामी संयमित भएर लाग्नुपर्ने देखिन्छ । कानुन समितिमा यो १० महिनामा धेरै विधेयक पारित गरेका छौं । बुबा संलग्न भएर अगाडि बढाएको संक्रमणकालीन विधेयक पास गर्ने बेलामा म थिएँ । बाहिरबाट कानुन निर्माण जति सहज देखिए पनि मिहिनेत १० गुणा बढी लाग्ने, त्यसैअनुसारको संवेदनशीलतालाई हेरेर अगाडि बढ्नुपर्ने छ । आज दीर्घकालीन सोच राखेर कानुन निर्माण गर्नुपर्छ ।

बाहिरबाट धेरै युवा साथीले फोन गर्नुहुन्छ कि तपाईं सदस्य भएको समितिमा फलानो विधेयक छ । खबरदारी गर्नुहुन्छ । कानुन निर्माण गर्ने बेलामा विधेयकको संवेदनशीलता र त्यसको आशय पनि हेरेर अगाडि बढाउनुपर्ने हुन्छ । कतिपयले त्यो खारेज गर्नुपर्छ भन्नुहुन्छ भने कतिले यो विषयवस्तु थप्नुपर्छ भन्नुहुन्छ । तर, जति बाहिरबाट भन्न सजिलो छ त्यति सहज संसद्मा हुन्न । हामीले विधेयक ल्याउने सरकारको कुरा सुन्नुपर्छ, सरोकारवालाका कुरा सुन्नुपर्छ । शतप्रतिशत हामी मात्र सही हुन्छौं भन्ने हुँदैन । हामीले आफ्ना धारणा राख्ने हो । सबै जनाको विविध परिस्थितिलाई मनन गरेर कानुन निर्माण गर्नुपर्ने हुन्छ । बाहिरबाट हेर्दा संसद् हो । तर संसद्मा विविधता हुन्छ ।

कानुन निर्माण होस् कि विकास निर्माणका कुरा हुन्, हामीले प्रक्रियागत हिसाबले अगाडि बढ्नुपर्छ । संसद्मा जे कुरा भइरहेका छन् ती नियमावलीअनुसार हुन्छन् । युवाको ऊर्जामा ब्रेक लगाउनका लागि विभिन्न प्रक्रियाको व्यवस्था गरिएको होइन । त्यस्तो गरिएको छ भने त्यो तोड्नुपर्छ ।

राजनीतिमा युवाका लागि अवसर नै अवसर छन् । राजनीति गर्ने देश निर्माण र जनताको हितका लागि हो । बुबाले भन्ने गर्नुहुन्थ्यो- राजनीति सेवा हो । जीवनभर तपाईंले जनता र देशको हितका लागि सेवा गर्नुपर्छ । राजनीतिमा संलग्न भएर सेवा गर्ने अवसर युवापुस्तालाई छ । स्थानीय तह, प्रदेश हुँदै संघमा युवाको उल्लेख्य उपस्थिति छ । राजनीतिमार्फत जिम्मेवारीमा आएका युवाले धेरै राम्रो काम गरिरहनुभएको छ । राजनीति अवसर र चुनौती हो । आकांक्षा र त्यसको परिपूर्तिमा पनि चुनौती देखिएका छन् ।

राजनीतिमा युवा ह्वात्तै आउनुभएको होइन । जनताले आवश्यक ठानेर युवा नेता र नयाँ पार्टी आएका हुन् । जुन तरिकाको डेलिभरीको कुरा गर्नुहुन्छ आफूले चाह्यो भन्दैमा सबै कुरा सही हुन्छ भन्ने ठान्नुहुन्न । कानुन, नियम र प्रक्रियाले डेलिभरीमा ढिलाइ भएको पनि हुन सक्छ । संसद्मा युवा सांसदले जसरी जुन विषय उठाइरहेका हुन्छन् । उहाँहरूले समयसापेक्ष नै कुरा उठाइरहनुभएको देखिन्छ । तर, कुनै कुराको समय र व्यवहारमा लागू गर्ने सन्दर्भमा फरक हुन सक्छ । युवाले उठाएका विषयवस्तुको डेलिभरीमा ढिलासुस्ती हुनु भनेको व्यावहारिक, नियम कानुन र प्रक्रियाले पनि हुन सक्छ भन्ने अनुभव भएको छ ।

हाम्रा अग्रजले विशेष गरेर एमालेका अध्यक्ष केपी शर्मा ओली र अन्य पार्टीका नेतृत्वले जुन तरिकाले युवालाई अगाडि सारिराख्नुभएको छ, एमाले, माओवादी, कांग्रेस, रास्वपा जो पार्टी सदनमा छन्, सबैले युवापुस्तालाई अगाडि सार्नुभएको छ । युवा राजनीतिमा चाहिन्छ भन्ने बुझेरै यस्तो गर्नुभएको हो । नेतृत्वमा रहेका नेताले युवाको आवश्यकता राजनीतिमा छ भन्ने बुझ्नुभएन भन्ने होइन ।

नेतृत्वले युवाका कुरा कति सुन्नुहुन्छ भन्ने प्रश्न पनि उठेको हुन्छ । तर नेतृत्वले आवश्यक ठानेर नै युवालाई राजनीतिमा जिम्मेवारी दिनुभएको हो । युवा नयाँ जोस र शैलीले अगाडि बढ्छन् भन्ने हिसाबले नै जिम्मेवारीमा अगाडि सार्नुभएको होला । संसद्मा हेर्नुहुन्छ भने धेरैजस्तो युवा सांसदले आफ्ना धारणा राखिराख्नुभएको छ । सदन र संसदीय समितिमा म पनि गम्भीरताका साथ सहभागी भएको हुन्छु । अग्रजले युवाका कुरा सुनेरै जिम्मेवारी दिनुभएको हो । आवश्यकता महसुस गरेर नै युवापुस्ताले भनेका कुरा नसुन्ने भन्ने होइन । सँगसँगै युवा अलि अराजक छौं । के मानेमा अराजक छौं भने जे पनि आजको भोलि चाहिन्छ । त्यो एउटा हुटहुटी पनि हो र नकारात्मक हिसाबले हेर्नु हुन्न । तर, केही कुरा आजको भोलि प्राप्त गर्न सकिन्छ कि सकिँदैन भन्ने व्यवहारमा पनि हेर्नुपर्ने हुन्छ । मुलुकको आर्थिक अवस्था पनि हेर्नुपर्ने हुन्छ । नयाँ व्यवस्था ल्याएका छौं, यसबारे समाजलाई बुझाएर सम्हाल्दै टिकाएर बलियो बनाएर जानुपर्ने हुन्छ ।



# कान्तिपुर पब्लिकेशन्स् लिमिटेडको पब्लिकेशन्स्को उत्तरोत्तर प्रगतिका लागि




Nepal Media House Pvt.Ltd.
Kupondole, Lalitpur, Nepal
Tel.: 015554815, 5549880, Mob: 9855024296
Email: nepalmedia73@gmail.com




PHONE 01-5454815, 01-5449880 P.O.Box 8450
EMAIL gmedia07@gmail.com
ADDRESS Kupondole, Lalitpur




+977 1 526 03 77 / 526 03 78 +977 1 526 05 79
Maxmedia Pvt. Ltd., Maxmedia Villa, Chakupat Road
[Behind Patan Multiple Campus] G.P.O Box: 750
info@maxmedia.com.np www.maxmedia.com.np




Dhikuraghar, Thapagaun, New Baneshwor, Kathmandu
Tel: +977 1 5244490/5244591, E-mail: info@ans.com.np
www.anscreation.com.np




**Media Gate Pvt. Ltd.**
Advertising Agency
D&C Building, 4th floor
New Baneswor Kathmandu, Nepal
+977- 9801141040 (Mobile)
Email: admediagate@gmail.com



v-chitra

On the Auspicious Occasion of
32nd Anniversary of
**Kantipur Publications Ltd.**
*we extend our best wishes for the success and prosperity of the publications*
**Clovr Media Pvt. Ltd.**




Kite Advertising Agency Pvt. Ltd.
Anamnagar, Kathmandu | 01- 5705292 | kitead@gmail.com




Bagbazar, Kathmandu, Tel : 01-4253964
amsolution2068@gmail.com










Naxal, Kathmandu, Tel : 01-4536314, 4514405
Web: www.sanskaran.com.np, info@sanskaran.com.np




Subarna Shamsher Marg
Baluwatar, Kathmandu
Email: trikon@trikonadvertising.com
Tel.: 977-1-4525965, 4000536, 4511303
www.trikonadvertising.com







Humlal Bhandari
Executive Director
Anamnagar, Kathmandu
+977 1 5705274
98511 64553
intensive.nepal@gmail.com
A Complete Media Advertising Solution




P.O.Box: 6118, Buddha Nagar, Ktm., Nepal (Near ALFA Beta Complex)
Tel: 01-4795818, 4795819, 9851138002, 9851148004
E-mail: adkalash@gmail.com







Mars Advertising & Research Pvt. Ltd
4th Floor, Mid-Town Plaza, Radhe Marg-33
Dillibazar , Kathmandu, Nepal
Tel: 4437145, 4439782
Email : info@marsad.com.np
Web : www.marsad.com.np




Kamaladi, Putalisadak
9851033967,01-4516565,01-4529433
E-mail: infomediamagnum@gmail.com







Maitidevi, Kathmandu, Tel 4529906
E-mail. raj.adv2@gmail.com
Mobile: 9841282720










*MPG Admark Company Pvt. Ltd.*
WONDE Height, Teku, Ktm., Nepal, Tel: 01-5340017
E-mail: mpgadmark65@hotmail.com / E-mail: mpgadmark65@gmail.com




Graphic Designing · Printing · Advertising · Branding
G.P.O. Box: 19318 | summit.creation@gmail.com
Hanumansthan | Anamnagar | Ktm. | +977-9851040299
+977-1-5705741 | +977-9841403958

- Media Research & Analysis
- Public Relations
- Media Planning
- Media Monitoring
- Media Releases
- Product Placement

"Our vision for your future."




**Media Service (P.) Ltd.**
Advertising and Media Service
Anamnagar, Kathmandu, Nepal
Tel: 4434799, 4434828, Fax : 977-1-4434828
E-mail:tms@hons.com.np



WELCOME
ADVERTISING & MARKETING
Bhimsengola, Old Baneshwor Kathmandu, Nepal | 977-1-4116227, 4594842
info@welcomeadnepal.com | www.welcomeadnepal.com




KAROBARMEDIA Pvt. Ltd.
977-1-5232329 / 5232045
www.karobarmedia.com
karobarmedia@gmail.com
Kamaladi, Kathmandu, Nepal




Anamnagar, Kathmandu, Nepal
Tel: 01-4261030, Mob: 9851133942, 9851069943
Email: joinmediahouse@gmail.com




Business Promotion Research and Communication Pvt. Ltd.
(BPRC)
व्यवसाय प्रवर्द्धन अनुसन्धान तथा संचार प्रा.लि.
Putalisadak, Kathmandu, Nepal
Tel.: +977-1-4542853,
Email: bprc2055@gmail.com

Matrika Prasad Nepal
Managing Director




ADVERTISING MEDIA PVT. LTD.
Dharan-12, Mahendra Path, Sunsari, Nepal
Tel: 9842275730 | 9802075730
E-mail: ujyaloadvertising@gmail.com
facebook.com/UjyaloAdvertising




Arun Adhikari
Cell : 9851025766
Genesis Service Pvt. Ltd.
Baluwatar, Kathmandu
01-4444551, 4425820
ad.dhanus@gmail.com
365 DAYS RAPID SERVICE
• Planning • Designing • Advertising

# ३२ औं वार्षिकोत्सवको उपलक्ष्यमा हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

# अहिलेको राजनीतिमा को हो युवा ?

**२०४६ देखिकै अनुहारमा राजनीतिको मुख्य बागडोर छ, २०४६ मा १८ वर्ष पुगेको युवा अहिले ५३ वर्ष पुगिसकेको छ, तर उसले राज्यसत्ता चलाउने अनुहार त्यतिबेलादेखि अहिलेसम्म उही देखिरहेको छ, अनि कसरी हुन्छ परिवर्तन ?**



**योगेश गौचन**
प्रतिनिधिसभा सदस्य, कांग्रेस

पहिलोपल्ट संसद् छिर्दा २९ वर्षको मात्र थिएँ। राजनीतिक परिवारमा हुर्केकाले पनि सानैदेखि राजनीतितिर रुचि बढ्यो। बाजे तत् समयमा प्रधानपञ्च भएर काम गर्नुभयो। बुबा (रोमी गौचन) ३०-४० वर्षदेखि सक्रिय राजनीतिमै हुनुहुन्छ। मुमा सामाजिक काममा सक्रिय हुनुहुन्छ। मेरा लागि समाजसेवा र राजनीतिको पहिलो आदर्श केन्द्र नै परिवार हो। हामीले छाड्ने विरासत नै हो, त्यसका लागि सामाजिक काम र राजनीति नै मुख्य उद्देश्य हुनुपर्छ भन्नेमा सानैदेखि प्रतिबद्ध थिए। ढिलोचाँडो म राजनीतिमा आउने हो भन्नेमा सानैदेखिको सोच थियो।

संसद् छिरिसकेपछि आम नागरिकले गर्ने अपेक्षा र यथार्थ धरातलबीच ठूलो अन्तर रहेको अनुभव भयो। १०/१२ वर्षदेखि मैले बुबाको सक्रिय राजनीतिलाई नजिकबाट नियालिरहेको, बुझेको, चिनेको र सक्रिय भएर आफैं पनि लागेकाले धेरै कुरा पहिलादेखि नै अभास भइरहेको थियो। बुबा जिल्लाको पार्टी सभापतिदेखि सांसद र मन्त्रीसमेत भइसक्नुभएकाले एउटा विधायकले संसदीय फाँटमा निर्वाह गर्नुपर्ने भूमिका र मन्त्रीका रूपमा कार्यकारी फाँटका जिम्मेवारीका विषयमा केही जानकार थिएँ। संसदीय निर्वाचन क्षेत्रको यथार्थ र सांसदको भूमिकाका विषयमा मैले आफैं नआउँदै अनुभव गर्न पाएको थिएँ। धरातलीय यथार्थ र सांसद तथा मन्त्रीको भूमिकाको विषयमा धेरै अनभिज्ञ थिइनँ। तर आफैं व्यवस्थापिकाको भूमिकामा आइसकेपछि सोचेभन्दा फरक देखें।

के लाग्थ्यो भने, संसद्मा जनताको मुद्दा र विषय उठान भइसकेपछि राज्यका निकायले त्यसलाई गम्भीरताका साथ लिन्छन् र कार्यान्वयनमा जान्छ। सांसदका रूपमा आज जति समय मैले व्यतित गरें, गर्दै छु आशाभन्दा पनि बढी निराशामा परिणत हुँदै छ। संस्थागत संरचना, तिनको काम गर्ने शैली, क्षमता र प्रणालीगत विकासक्रमलाई हेर्दा अहिले निराशा बढेको छ। सिद्धान्ततः विधायिकाको भूमिका नीति निर्माताका रूपमा केन्द्रित छ। तर, मतदाताले नीति निर्माण गर्न र कानुन बनाउनभन्दा पनि आफ्नो गाउँ, ठाउँ र क्षेत्रको विकासप्रेमीका रूपमा सांसदलाई लिन्छन्। निर्वाचित प्रतिनिधिले विकास गर्ने हो भन्ने बुझाइ छ। यसैमा सिद्धान्त र धरातलीय यथार्थबीच आकाश जमिनको अन्तर छ।



त्यसैले हामी सांसदलाई नीति निर्माणको भूमिकामा मात्र सीमित रहने छुट छैन। उदाहरणका लागि म आफ्नो निर्वाचनमा जाँदा औसत दस जनासँग भेट्दा आठ जनाको कुरा गाउँमा कुलो छैन, बाटो छैन, पूर्वाधारका कुरा छैनन् भन्ने नै हुन्छ। एक जनाले पनि मलाई हालसालै संसद्मा पुगेको नागरिकता विधेयकमा आमाको नामबाट नागरिकता पाउने विधेयकमा यस्तो संशोधन गर्नुपर्‍यो भन्ने कुरा गर्दैनन्। हाम्रो परम्परागत राजनीतिक अभ्यास, मूल्य र मान्यता भनेकै विकास निर्माण हो भन्ने छ। आम नागरिकको अपेक्षा त्यसैमा छ। चुनावमा प्रतिबद्धता पनि विकास निर्माणकै गरिन्छ। यस्तो कानुन बनाउँछु, यस्तो नीति नियम बनाउँछु भनेर चुनाव जितिँदैन। गाउँका समस्या र विकास निर्माण गर्ने प्रतिबद्धता नै चाहिन्छ। यो यथार्थ हो। यसबाट विमुख हुने छुट सांसदलाई छैन। चुनावका बेलामा कबुलियत गरेका कुरालाई ध्यान दिइएन भने अर्को चुनाव नलडे पनि हुन्छ।

युरोप, अमेरिकामा जस्तो प्रणाली र संस्थाले काम गर्ने भए विधायिकी भूमिकामा केन्द्रित हुन सकिन्थ्यो। तर, हाम्रोजस्तो मुलुकमा यथार्थ धरातल योभन्दा फरक छ। एउटा निवेदन चढाएर, यो-यो गर्नुपर्‍यो भनेर मात्र हुनेवाला केही छैन। कि त हामीले मौजुदा कानुन र संरचनालाई परिवर्तन गर्न सक्नुपर्‍यो, होइन भने यस्तो छ, उस्तो छ भनेर जनताका बीच गरेका कबुललाई परिणाम दिन गरी लाग्नुपर्ने बाध्यता हुन्छ। अलिकति मिहिनत र अलि फराकिलो सोच राखेर गर्न चाह्यौं भने धेरै काम गर्न सकिन्छ भन्ने लाग्छ। तर, मौजुदा संगठनात्मक संरचनाबाट गर्न कठिनाइ छ।

जस्तो, हरेक वर्ष जेठ १५ मा बजेट आउँछ। त्यसभन्दा अघिको संसद् अधिवेशनमा दफाबार छलफल हुन्छ। आजको दिनसम्म दुइटा आर्थिक वर्षको अनुभव गर्दा संसद्मा हामीले राखेका कुनै पनि सुझाव र योजनाका कुरा जेठ १५ मा बजेट आउँदा समाहित भएर आएको अनुभव छैन। बजेटमाथिको छलफल नै व्यर्थ जस्तो देखिन्छ। तीन वटा सरकार र स्टेक होल्डरका सबैलाई एकीकृत गरेर योजना तर्जुमा गर्ने संस्था राष्ट्रिय योजना आयोग हो। योजना आयोगले समेत संघ, प्रदेश र स्थानीय तहका जनप्रतिनिधि र सम्बन्धित स्टेक होल्डरसँग छलफल गरेर योजना तर्जुमा गर्दैन। त्यसैले धेरै योजनाले धरातलीय आवश्यकता समेटिरहेको पाइँदैन। योजना आयोगको काम गर्ने शैली र संरचनालाई सुधार गरेर लैजाने हो भने पनि सांसद धेरै समय विधायकको भूमिकामा केन्द्रित हुन पाउँथे। आजसम्म, कुनै मन्त्रीले आफ्नै क्षेत्रमा योजना नपरेको गुनासो गर्छन्, कुनैले अर्बौं रुपैयाँ बजेट हालेको प्रतिक्रिया सुनिन्छ। यो सबै राष्ट्रिय योजनाले वस्तुगत आधारमा छलफल गरेर योजना तय नगर्दाको परिणाम हो।

बृहत् रूपमा हेर्दा संसद्भित्र विभिन्न विषय र मुद्दामा हुने बहस आंशिक बाहेक धेरैजसो 'भाइब्रेन्ट' नै देखिन्छ। आफ्नो निर्वाचन क्षेत्रको मुद्दा त छँदै छ, बृहत् मुद्दा र राष्ट्रिय मुद्दामा हामीजस्ता युवा र हामीमाथिका पुस्ताबीचमा धेरै दूरी देखिन्न। खालि काम गर्ने शैली र तरिकाका कुराले समाजमा असन्तुष्टि बढाइरहेको छ। नेपाली समाजले खोजेअनुसार राज्यसत्ताले काम गर्न नसकेको गुनासो छ। त्यो संसद्भित्र र बाहिर पनि छ। कार्यकारी जिम्मेवारीमा रहेकालाई औसत रूपमा काम गर्ने छुट छैन। हामीजस्ता विधायकको जिम्मेवारीमा रहेकालाई समेत औसत काम गर्ने छुट छैन। साँच्चै मुलुकलाई रूपान्तरण गर्ने हो र त्यही अनुसार काम गर्ने हो भने सबै पुस्ताले अहिलेकै शैलीबाट काम गरेर हुने देखिन्न। काम गर्ने शैलीलाई बदल्नैपर्छ। अहिले राज्य चलाउने नेतादेखि अरू लोकतान्त्रिक निकायले चुस्त, दुरुस्त कार्यसम्पादन गर्न बृहत् सोच र कार्यशैली बदल्न अत्यन्तै आवश्यक छ। यसका लागि पुरानो पुस्ता तयार भएन भने हामी जस्ता युवा सांसदले रचनात्मक विद्रोह नै गर्नुपर्ने आवश्यक छ।

सडक र सामाजिक सञ्जालमा नेताप्रति जस्तो खालको आक्रोश पोखिएको छ, यसका पछाडिको कारण पनि सत्तामा रहेकाको काम गर्ने शैली र तरिका नै मुख्य जिम्मेवार हो। हो, हामीले अपनाएको लोकतान्त्रिक संसदीय प्रणाली, मूल्य, मान्यता र मौलिक हकमा विशेषता संसारमै उत्कृष्ट छन्। तर, राज्यसत्ताका नायक र यसका 'स्टेक' होल्डरका नेतृत्वकर्ताको व्यवहार, निर्णय क्षमता, काम गर्ने शैली र नियुक्ति प्रक्रियालाई लिएर आम असन्तुष्टि छ। राज्य चलाउनेको कार्यसम्पादन हामीले अंगीकार गरेको सिद्धान्तको विपरीत छ। यसलाई बेलैमा सच्याउन सकिएन भने आम युवालाई आशा बाँड्न सकिँदैन। भएको अवसरलाई पुँजीकरण गर्न नसकेकै कारण आज लाखौं युवा भविष्य अन्धकार देखेर बाहिरिएका छन्। युवा बाहिर पलायन हुने यस्तै काम गर्ने प्रवृत्तिले बढाउँदै लगेको हो।

सहरी क्षेत्रमा राम्रो शिक्षा लिएका, विरासतबाट हुर्केका युवाले पनि नेपालमा भविष्य देख्न छाड्नु दुःखको कुरा हो। पुरानाको ठाउँमा नयाँ आएर मात्र हुन्न, हाम्रो संरचनागत कमजोरी र काम गर्ने शैलीमा आमूल परिवर्तन गर्नुपर्ने देखिएको छ। अहिले राज्यसत्ता दुई/चार जनाको वरिपरि छ। २०४६ देखिकै अनुहारमा राजनीतिको मुख्य बागडोर छ। २०४६ मा १८ वर्ष पुगेको युवा अहिले ५३ वर्ष पुगिसकेको छ, तर उसले राज्यसत्ता चलाउने अनुहार त्यतिबेलादेखि अहिलेसम्म उही देखिरहेको छ, अनि कसरी हुन्छ परिवर्तन ?

जस्तो उदाहरण नै दिउँ, अहिले मुस्ताङमा म मात्र होइन, दुई जना प्रदेश सांसद पनि ४० वर्ष तलको युवा नै हुनुहुन्छ। मेरो बुवा रोमी गौचन पार्टी सभापति, सांसद र मन्त्रीसम्म हुनुभयो। अझै सक्रिय राजनीतिमा हुनुहुन्छ। ३०-४० वर्ष सक्रिय राजनीति गरेको उहाँले समाज, अन्तर्राष्ट्रिय परिवेश र आम नागरिकको चाहनाअनुसार नै आफूपछिको पुस्तालाई बाटो छोडिदिनुपर्छ भनेर छोड्नुभयो। हाम्रो राष्ट्रिय जनभावना पनि त्यही थियो। मुस्ताङका जनताले मात्र होइन, देशभरका जनताले यो परिवर्तन चाहेका छन्। रोमी गौचनले छोरालाई उत्तराधिकारी बनायो भनेर भन्छन्। तर, त्यस्तो होइन। सिंगो मुस्ताङ र आम कांग्रेसको चाहनाअनुसार नै उहाँले मलाई अघि सार्नु भएको हो। मुस्ताङमा गर्न सकिन्छ भने अन्यन्त्र किन सकिन्न ? अरू पार्टीलाई भन्दिनँ, आफ्नै पार्टीको नेतृत्वप्रति पनि बारम्बार यही प्रश्न छ, मुस्ताङले पुस्तान्तरणसहितको नेतृत्व हस्तान्तरण गरिरहँदा हाम्रा नेताले किन आफ्नो ठाउँबाट गर्न सक्नुहुन्न ?

## लोक सेवा तयारी...

ठूला राजनीतिक दल धेरै आकर्षक घोषणापत्र लिएर निर्वाचनमा गएका थिए। तर सरकारमा, संसद्मा आइसकेपछि बिर्सन्छन्। कतिपय दलमाथि राष्ट्रिय र अन्तर्राष्ट्रिय प्रभाव पनि पर्छ होला। सांसदले दलको स्वार्थलाई हेर्नु परेकाले जनताको पक्षमा काम गर्न सकेका छैनन्। साँच्चै राम्रो काम गर्न चाहेका दलले सरकार चलाउने अवसर पाएका छैनन्।

संसद्मा मुख्य सत्ता र दलगत स्वार्थ हेरिन्छ। त्यसपछि नेताहरूले आफ्नो जिल्ला र निर्वाचन क्षेत्र हेर्छन्। देखावटी रूपमा मात्र जनताका लागि मरिमेटेको देखाउँछन्। प्रतिपक्षका सांसदले जनतासँग जोडिएका धेरै विषय उठाउनुहुन्छ तर सरकार सुन्दैन। सांसदले अन्याय, अत्याचार र भ्रष्टाचारविरुद्ध आवाज उठाइरहन्छन्, तर सरकारले कार्यान्वयन गर्दैन। मैले संसद्मा ४५ पटक जति विभिन्न विषय उठाएँ, त्यसमध्ये दुई वटा विषय मात्र सम्बोधन भए होलान्।

युवापुस्ताको चासो र सरोकारबारे सबै दलका सांसदबाट आवाज उठिरहेको हुन्छ। तर युवापुस्ताले नेपालमा भविष्य छैन भन्नु गम्भीर विषय हो। मुलुक बनाउने युवापुस्ताले आफ्नो देशमा भविष्य छैन भन्छन् भने त्यो धेरै गम्भीर विषय हो। युवा सांसदमा मुलुक बनाउने चिन्ता देखिन्छ। तर सरकार र दलको नेतृत्व गरेका नेताले त्यसलाई सम्बोधन गर्दैनन्। युवालाई आफ्नै देशमा सुन्दर भविष्य छ भनेर विश्वास दिलाउने आधार शिक्षा, स्वास्थ्य, रोजगारी नै हो। स्वदेशमै बसेर पनि उज्यालो भविष्य बनाउन सकिन्छ भनेर संसद्मा आवाज उठिरहन्छ। त्यो संसद्को रेकर्डमा भइरहेकै बेला सयौं युवा अन्तर्राष्ट्रिय विमानस्थलबाट बाहिरिइरहेका हुन्छन्।

म सल्यान दार्माकोट आफ्नो गाउँ जाँदा युवासँग अन्तर्क्रिया हुन्छ। एउटा सांसदले चाह्यो भने धेरै काम गर्न सक्छ भन्ने आशा र भरोसा उनीहरूमा छ। संसद्का बैठकमा जनताका कुरा राखेको सुनेपछि खुसी लागेको सुनाउँछन्। साँच्चै उनीहरूको काम हुने हो भने झन् कति खुसी हुँदा हुन्। देशमा रहेर राम्रो शिक्षा लिएका युवाले सांसदहरूबाट धेरै आशा र भरोसा खोजेका हुन्छन्। तर हामीले उनीहरूलाई खास सहयोग गर्न सकेका छैनौं। उनीहरूको काँधमा काँध मिलाएर दलहरूले काम गर्ने हो भने देश नबन्ने कुरै छैन।

युवाहरू संघ, प्रदेश र स्थानीय सरकारसँग हरेक दिन केही न केही प्रस्ताव लिएर पुगेका हुन्छन्। युवालाई प्रोत्साहन होइन, निरुत्साहन गरेर पठाएको मैले धेरैचोटि देखेको छु। युवाले नयाँ काम गर्न खोजे पनि नीति र बजेटको अभाव देखाइन्छ। सानो सानो सहयोगले भोलि ठूलो काम हुन्छ भन्ने कुरालाई कुनै पनि सरकारले ध्यान दिएको देखिँदैन।

देश खत्तम भइसकेको होइन तर भनेजस्तो शिक्षा, स्वास्थ्य, रोजगार, सरकारी सेवामा सुधार हुन सकेको छैन। यसको अर्थ देश बर्बाद भइसकेको भन्ने होइन। एउटा जोखिमचाहिँ छ, देशलाई सही बाटोमा लान सकिएन भने योभन्दा खराब स्थिति आउन सक्छ। सांसदहरू आफ्नो सरकार, दलको स्वार्थमा लिप्त छन्। जनप्रतिनिधिले हेर्ने जनताको स्वार्थ हो, त्यही अनुसार काम गर्नुपर्छ। यहाँ त जनताभन्दा दलगत स्वार्थलाई हेरिन्छ। जनतालाई सबभन्दा माथि राखेर काम गर्ने हो भने देश बनाउन गाह्रो छैन। देश र जनताका लागि काम गर्छु भन्ने युवा शक्तिलाई अघि सार्नुपर्छ।

एउटा उदाहरणका लागि काठमाडौं महानगरलाई लिन सकिन्छ। पूरा परिणाम आउन बाँकी भए पनि काठमाडौं महानगरपालिकाका मेयर बालेन शाहको चर्चा देशभर छ।

म गाउँ जाँदा देख्छु खाली हुँदै गएका छन्। गाउँ खाली किन भइरहेका छन् ? संसद्मा बहसको विषय बन्नुपर्छ। गाउँ खाली हुनु भनेको उत्पादन घट्नु हो। उत्पादन घट्नु भनेको अरूमाथि भर पर्नु हो। गाउँको उत्पादनले धानेको हाम्रो मुलुक अहिले उत्पादनमा परनिर्भर हुँदै गएको छ। त्यहाँ शिक्षा, स्वास्थ्य, रोजगारी, अवसरको वातावरण हुने हो भने गाउँमा कृषिलगायतको उत्पादन बढाउन सकिन्छ। सरकारले नीति निर्माण गरी गाउँ खाली हुनबाट रोक्नुपर्छ।

शिक्षाकै कुरा गर्ने हो भने प्रतिस्पर्धासँग जोडिएको छ। सरकारी (सामुदायिक) स्कुल र निजी स्कुलमा पढेको व्यक्तिबीच हुने प्रतिस्पर्धाले गाउँलाई असर गरेको छ। सरकारी स्कुलमा पढ्ने बालबालिकाले जुनसुकै क्षेत्रमा प्रतिस्पर्धा गर्ने वातावरण हुने हो भने छोराछोरी पढाउन सहर झर्नुपर्ने बाध्यता हुने थिएन। आफ्नै खेतबारीको उत्पादन उपभोग गरी छोराछोरीलाई राम्रो शिक्षा, स्वास्थ्य उपचार पाउने वातावरण हुने हो भने गाउँ कति सुन्दर हुन्थे होला। बाध्यताले सहर पसेको व्यक्तिहरू सायद फेरि गाउँ फर्कन्थे होलान्। शिक्षा र स्वास्थ्य गुणस्तरीय र निःशुल्क हुने हो भने गाउँ फेरि हराभरा हुन्छन्।

दलहरूका नीति राम्रा छन्, नियत सफा देखिँदैन। देश चलाउनेले नीति कार्यान्वयनमा जोड दिने हो भने देश बन्छ। नीति बन्दै आए, ती नीति कार्यान्वयन भएनन्। विकासमा पूरै राजनीतीकरण छ। मैले सल्यानको दार्मा गाउँपालिकामा आफ्नो निर्वाचन क्षेत्रको बजेट खर्च गरेर बाटो बनाउन खोज्दा ठूला दलले अवरोध गरे। दलहरूको हस्तक्षेपका कारण स्थानीय सरकारका धेरै काम अवरुद्ध भएको देखिन्छ।

प्रत्यक्ष निर्वाचित सांसद र मेरो हैसियत एउटै हो। तर हेर्ने नजर फरक छ। मेरो दल सरकारमा छैन। मेरो पहुँच पुग्दैन भन्ने ठानिन्छ। मैले जनताका माग लिएर मन्त्रालय वा अन्य निकायमा जाँदा बेवास्ता गरिन्छ। जनप्रतिनिधिले पनि सरकारी विभेद भोग्नुपर्छ। सही नेतृत्वको हातमा पर्‍यो भने नेपाल स्वर्ग बन्छ। किनकि हामीसँग स्रोत, साधन, जनशक्ति छ। मुख्य समस्या यसको सही सदुपयोग गर्न नसक्नु हो। नयाँ दृष्टिकोण लिएर काम गर्ने नेतृत्वको खाँचो छ। देश बनाउन राजनीति गर्नुपर्छ। आफ्नो र दलको स्वार्थका लागि राजनीति गर्नु हुँदैन।

# सुशासनको सुरुवात : नेताको सम्पत्ति छानबिन

**महामारी नियन्त्रण र दैनिक जीवनयापनमा सहयोग पुऱ्याउने क्रममा जनतासँग नजिक भएँ, युवाले पहुँचविहीन र निमुखाको अनुहारमा उज्यालोपन ल्याउनुपर्छ, हाँसो र खुसी भर्नुपर्छ भन्ने मेरो मान्यता हो, त्यसैले अझ धेरै परिवर्तनका लागि राजनीतिमा आएँ**

चन्द्रकेश गुप्ता
लुम्बिनी प्रदेश सांसद, जनमत

म राजनीतिमा लागेको ५ वर्ष पुग्दै छ। राजनीतिमा संलग्न हुनुअघि विद्यार्थी र सामाजिक अभियन्ता थिएँ। कोभिड महामारीपछि एमालेको लुम्बिनी सांस्कृतिक नगरपालिकाको युवा संघको नगर इन्चार्ज बनें। कोभिड महामारीमा नगरपालिकाका विभिन्न वडा र गाउँबस्ती पुगेर गरेको सामाजिक कामले नै मलाई युवा संघमा जोडेको थियो।

एमालेबाट स्थानीय तहको टिकट नपाएपछि जनमत पार्टीबाट निर्वाचनमा प्रतिस्पर्धा गर्ने निर्णय गरें। लुम्बिनी सांस्कृतिक नगरपालिका प्रमुखको पदमा जनमतबाट प्रतिस्पर्धा गरे पनि निर्वाचनमा पराजित भएँ। तर, हार मानिनँ। सामाजिक काममा निरन्तर सक्रिय भएँ।

२०७९ को प्रदेशसभा निर्वाचनमा जनमतका तर्फबाट रूपन्देही निर्वाचन क्षेत्र नं. ५ (२) मा उम्मेदवारी दिएँ। युवा साथीको साथ र आफू पनि युवा भएकैले निर्वाचन जित्न अप्ठ्यारो भएन। जनमतमा अहिले प्रदेश सदस्यको जिम्मेवारीमा छु। दुई पटक गरेर १ वर्ष जनमतबाट लुम्बिनीको सामाजिक विकासमन्त्री बनें। अहिले पनि प्रदेशमा जनमतको संसदीय दलको नेता छु।

राजनीतिमा लाग्दा कोभिडको महामारी थियो। कसैलाई पनि घर बाहिर निस्कन प्रतिबन्ध थियो। लुम्बिनी सांस्कृतिक नगरपालिकाका अधिकांश जनता किसान र मजदुर छन्। खेती किसानीबाट ३ महिना पनि खान पुग्दैन। मजदुरी गर्न कोभिडका कारण सरकारले नै नदिने भएपछि धेरै नागरिक आर्थिक समस्यामा परे। निर्वाचित जनप्रतिनिधि कोही पनि गरिब र मजदुर जनताकामा पुगेनन्। गाउँको अवस्था दिन प्रतिदिन दयनीय बन्दै गयो।

मैले विभिन्न उद्योग र ठूला व्यवसायीसँग अनुरोध गरेर केही खाद्यान्न र दैनिक जीवन निर्वाहका लागि आवश्यक पर्ने सामग्री जुटाएँ। मजदुर, किसान र विपन्न परिवारमा वितरण गर्न युवालाई सक्रिय गराएँ। त्यसले महामारी नियन्त्रण र जनताको दैनिक जीवनयापनमा सहयोग पुग्यो। सर्वसाधारण समस्या लिएर मलाई खोज्दै आउन थाल्नुभयो। निर्वाचित जनप्रतिनिधि जनताप्रति उत्तरदायी बन्न नसक्दा मप्रति जनताको भरोसा र जिम्मेवारी बढेको महसुस भयो।

युवाले पहुँचविहीन र निमुखाको अनुहारमा उज्यालोपन ल्याउनुपर्छ, हाँसो र खुसी भर्नुपर्छ भन्ने मेरो मान्यता हो। त्यही अभियानअन्तर्गत राजनीतिमा लागें। राजनीति भनेको नीति निर्माण गर्ने थलो हो, त्यसबाटै केही परिवर्तन गर्न सकिन्छ भन्ने हुटहुटी मनमा बढिरहेको थियो। त्यही हुटहुटीले स्थानीय तहको उम्मेदवार बनायो। तर, सबैको मन जित्न सकिनँ। निरन्तर काममा लागेपछि प्रदेशसभा सदस्यमा निर्वाचित भएँ।

संयोगले प्रदेशका धेरै युवा र शिक्षित वर्ग जोडिएको सामाजिक विकास मन्त्रालयको नेतृत्व गर्ने जिम्मेवारी पाएँ। पहिलो पटक २०७९ माघ २८ मा सामाजिक विकासमन्त्रीमा नियुक्त भएँ। तर, राजनीतिक किचलोकै कारण २०७९ चैत १२ मा मन्त्रीबाट राजीनामा दिएँ। २०८० जेठमा फेरि



सामाजिक विकासमन्त्री नै नियुक्त भएँ। २०८१ साउनसम्म काम गरें। उक्त मन्त्रालयले शिक्षा, युवा तथा खेलकुदको जिम्मेवारी पाएको थियो। सकेसम्म राम्रा काम गर्ने प्रयास गरें। तर, सोचेअनुसार प्रतिफल दिन सकिनँ। अहिले पनि आफूले गरेका केही काममा सन्तुष्ट छु। तर, धेरै गर्न नसकेकामा पछुतो पनि लागिरहेको छ।

देशमा संघीयता कार्यान्वयन भएको यतिका वर्ष भए पनि संघले प्रदेशलाई अहिलेसम्म पनि अधिकार दिएको छैन। प्रदेशमा पर्याप्त बजेट छैन। कर्मचारीतन्त्र दलगत रूपमा सक्रिय छ। जसले मन्त्री भए पनि सोचेअनुसार काम गर्न नसकिने रहेछ। कर्मचारीको सहयोगबिना मन्त्रीले केही पनि गर्न सक्दैन भन्ने मन्त्री भएपछि मात्र बुझें।

सबैजसो मन्त्रालयमा दलगत कर्मचारी हावी हुने रहेछन्। त्यसमा म नयाँ थिएँ। प्रदेशका ९० प्रतिशत कर्मचारी कांग्रेस र एमालेका दलगत संगठनमा आबद्ध छन्। त्यसकारण पनि मैले गर्न खोजेको कामले पूर्णता पाउन सकेन। तर, मलाई भेट गर्न, योजना माग गर्न र सल्लाहका लागि आउने आमनागरिकलाई सहज रूपमा भेट दिएँ। मन्त्रालयमा नागरिकको पहुँच हुनुपर्छ त्यसपछि मात्र प्रदेशप्रतिको अपनत्व बढ्छ भन्ने मान्यता राखेर काम गरें। समस्या समाधानका लागि सकेसम्म प्रयास गरें। त्यो नै मेरो मुख्य सन्तुष्टि हो।

कर्मचारीकै समन्वयमा धेरै काम गरियो। तर ठ्याक्कै उल्लेख गर्ने गरी राम्रो कामको बुँदा तयार गर्ने अवस्थामा पुग्न सकिएन। म मन्त्री त बनें। करोडौं बजेट पनि परिचालन गरियो। तर, अत्यावश्यक प्रदेश शिक्षा ऐन अहिलेसम्म पनि बनेको छैन। संघीय सरकारकै शिक्षा ऐनले काम गरिरहेको छ। प्रदेश सरकार कठपुतली जस्तो छ। अधिकार संघले राखेको छ। प्रदेशमा भन्दा स्थानीय तहमै अधिकार धेरै छ। जनताले शिक्षालाई निःशुल्क बनाउनुपर्छ भनिरहेका छन्। सरकारी विद्यालयमा निःशुल्क रहेको सरकारको दाबी छ। तर, विभिन्न बहानामा शुल्क लिएकै छन्। चाहेर पनि मन्त्रीले त्यसलाई नियन्त्रण गर्न नसक्ने रहेछ। प्रदेशमा शिक्षाको कुनै अधिकार नभएकै कारण यस्तो भएको हो। अधिकारविहीन अवस्थाले मन्त्रीले दिएका निर्देशन पनि शिक्षकले नटेर्ने अवस्था छ।

मैले खेलाडीका लागि केही राम्रा काम पनि गरेको थिएँ। क्रिकेटका राष्ट्रिय खेलाडीलाई प्रतिव्यक्ति ३ लाखका दरले सम्मानसहित आर्थिक सहयोग गर्ने निर्णय गरेको थिएँ। रूपन्देहीको सिद्धार्थ रंगशाला निर्माणका लागि ५० लाख विनियोजन गरिएको थियो। तर, बजेट पूरै आउन सकेन। सिद्धार्थ रंगशालामा प्रधानमन्त्री कप गराउन पनि निरन्तर प्रयासले सफल पारिएको थियो। जुन रूपन्देहीमै पहिलो पटक भएको हो। त्यसमा प्रदेश सरकारका तर्फबाट १५ लाख रुपैयाँ सहयोग गरिएको थियो। लुम्बिनी प्रदेशका १२ वटै जिल्लामा खेलकुद प्रतियोगिता गराएर खेलाडी छनोट गर्ने काम पनि मेरै नेतृत्वमा कार्ययोजना नै बनाएर गरिएको थियो।

अहिले देशको अर्थतन्त्र ठूलो समस्यामा छ। बेरोजगारी बढ्दो छ। अर्थतन्त्र सुधारका लागि पूर्वप्रधानमन्त्री र वर्तमान प्रधानमन्त्री, मन्त्री, स्थानीय तहका जनप्रतिनिधि, कर्मचारी, सुरक्षाकर्मी, प्रधानन्यायाधीश, अख्तियार प्रमुखलगायतका सबै उच्च पदस्थले सम्पत्ति विवरण बुझाउनुपर्छ। तर, अहिले त्यसो हुन सकेको छैन। प्रक्रियामात्र पूरा गर्ने गरिएको छ। प्रभावकारी छैन। सबैको सम्पत्ति छानबिन हुनुपर्छ। छानबिन भयो भने, त्यसले अर्थतन्त्र सुधार गर्न सक्छ। यसले जनतामा राजनीतिप्रति बढेको निराशा घटाउने र आशा जगाउने काम पनि गर्न सक्छ।

बेरोजगारीका कारण युवा विदेसिने क्रम बढेको छ। शिक्षित युवाले पनि देशको जिम्मेवारी बोक्नु जरुरी छ। तर, शिक्षित युवा नेपालमा बस्न नखोज्ने अवस्था छ। त्यो पनि एक किसिमको स्वार्थ नै हो। सरकारले शिक्षित युवालाई देशमै बस्ने, उद्योग खोल्ने, रोजगारीका अवसर सिर्जना गर्ने नीति अघि सारेर आशा देखाउनु जरुरी छ। बेरोजगारका लागि बजेट व्यवस्थापन गर्ने, तालिम दिने, भएको सीप र क्षमता उपयोग गर्ने नीति ल्याउन सकियो भने मात्र देश बन्न सक्छ। वास्तविक किसानलाई कृषि तालिम व्यवस्था गर्नुपर्छ पहुँचवालाले मात्र राज्यको सुविधा उपभोग गर्ने प्रवृत्ति अन्त्य गर्नुपर्छ। न्याय पनि शक्ति र पहुँचका आधारमा छ त्यो पनि अन्त्य गर्नुपर्छ। सरकारी अस्पतालमा सहज रूपमा उपचार सुविधा उपलब्ध गराउन सकियो भने सरकार जनताका पक्षमा रहेको अनुभूति हुन सक्छ।

# राजनीति भनेको श्रमदान हो

युवामाथि मतदाताले भरोसा देखाएका छन्, त्यो भरोसा हामीले पूरा नगरेमा र युवा नेतृत्वबाट फेरि निराशा मात्र मिलेमा ठूलो दुर्भाग्य हुनेछ, जुन युवाले राज्यको सेवा गर्छु भनेर राजनीति गर्छ, उसले सफलता पाउँछ



रहवर अन्सारी
मधेश प्रदेश सासद,
माओवादी



राजनीति जीवन्त र डायनामिक हुन्छ। कुनै पनि राजनीतिक व्यक्ति राजनीतिसँग कुनै बेला पनि सन्तुष्ट हुँदैन। त्यही, असन्तुष्टिका कारण ऊ चलायमान हुन्छ। म पनि अहिलेको राजनीतिसँग सन्तुष्ट छैन, त्यसैले चलायमान छु।

२०६६ तिर माओवादीमा आबद्ध भएँ। चुनावी राजनीतिमा ०७४ मा एकै वर्ष दुई पदमा प्रतिस्पर्धा गरें। वीरगन्ज महानगरपालिकाको प्रमुखमा उम्मेदवारी दिएँ, पराजित भएँ। लगत्तै, प्रदेशसभा सदस्यका लागि फेरि त्यही वर्ष चुनावी प्रतिस्पर्धामा हार व्यहोर्नुपर्‍यो।

पछि, ०७९ को आमनिर्वाचनमा पर्साको क्षेत्र नम्बर १ (१) बाट प्रदेशसभा सदस्यमा निर्वाचित भएँ। यसो हेर्दा, ०७४ पराजित भएँ र ०७९ मा प्रदेश सांसदमा जितेर फड्को मारेको देखिन्छ। तर, ५ वर्षको अन्तरालमा निरन्तर जनतासँग नजिक रहें। आफ्नो विचार र सोच सुनाएँ। राजनीतिमा सक्रिय भइरहें। त्यसपछि, प्रदेशसभामा प्रतिनिधित्व भयो भने मेरो लागि राम्रो प्लेटफर्म हुन्छ जस्तो लाग्यो। मधेशी जनतालाई सेवा गर्न सक्छु भन्ने लागेर नै प्रदेशसभामा चुनाव लडेको हो।

प्रदेशसभा सदस्य पनि रातारात भएको होइन। ५ वर्षसम्म तयारीको प्रतिफल हो। दुईवटा चुनावको तयारी गर्नु भनेको विश्वविद्यालयको डिग्री हासिल गरेजस्तो हुन्छ। प्रारम्भिक पढाइ मेरो नेपालमै भयो। हाइस्कुलको पढाइ भारतमा गरें। त्यसपछिको पढाइ र विभिन्न तालिम विदेशमा लिएँ। भुइँमान्छेसँगको सम्पर्क र सामाजिक सद्भावले मलाई राजनीतितिर लाग्नुपर्छ भन्ने प्रेरणा दिइरहन्थ्यो।

मान्छेले विभिन्न उमेरमा आफ्नो जीवनको उद्देश्यबारे समीक्षा गर्छ। एउटा समयकालमा 'यो जीवनमा समाजमा देख्न चाहेको परिवर्तन अर्को पुस्ताका लागि छोड्नु भएन, आफ्नै जीवनकालमा त्यो पूरा गर्नुपर्छ' भन्ने लाग्यो। त्यही उद्देश्यले मलाई राजनीतिमा लाग्न ऊर्जा दियो।

मैले करिब डेढ वर्ष मधेश प्रदेशमा उद्योग, पर्यटन र वन राज्यमन्त्रीको जिम्मेवारी पनि सम्हालें। राज्यमन्त्री हुँदा ठूलो चुनौती कुनै पनि काम कार्यान्वयनमा लैजानु थियो। हामी एउटा भिजन लिएर त्यहाँ पुगेका हुन्छौं। तर, त्यो भिजनअनुसार अघि बढ्न कर्मचारीबाट सहयोग पाइँदैन। डेलिभरी दिने त कर्मचारीतन्त्र नै हो। उनीहरू राजनीतिकर्मीको भिजनअनुसार चल्न चाहँदैनन्। मधेश प्रदेशमा राज्यमन्त्री हुँदा धेरै स्टक होल्डरको भिजन मसँग मिल्दैनथ्यो। मेरो अलि फरक सोच थियो। पहिलो दिनदेखि नै समयको दबाबमा थिएँ। राज्यमन्त्री हुँदा १ मिनेट पनि खेर फाल्न चाहँदिनँ थिएँ। जनता र मधेशको हितमा मेरो समय खर्चिनुपर्छ भन्ने लागेर काममा लागेको थिएँ। तर, एक्लो परेको महसुस गरें। राम्रो कामलाई सबैले राम्रै भन्छन्। तर, राम्रो कामलाई कसले प्राथमिकतामा राख्छ, उसैले त्यसलाई अगाडि बढाउन सक्छ।

धेरैजसोको प्राथमिकतामा जनता र मधेश प्रदेश पर्दैन। आफ्नो वेलफेयर मात्र हेर्छन्। परिवार र पार्टीको वेलफेयरलाई प्राथमिकतामा राख्छन्। म र मेरो भिजन त्यही भएर अल्पमतमा परे जस्तो लाग्यो। हामी सबैतिर हात हाल्छौं, केही पूरा गर्न सक्दैनौं। एउटा काम सकेर अर्कोमा हात हालौं भन्ने हुन्न। त्यसैले सबै काममा समस्या देखिएको छ। जस्तै, मधेशमा कस्तो खालको पर्यटन ठीक हुन्छ ? यसमा योजना बन्न सकेको देखिँदैन। मधेशको पर्यटन मन्त्रालयलाई ठोस काममा नलगाएर खुद्रे बजेट खर्चिने मन्त्रालय बनाइएको छ। मठ-मन्दिर, मस्जिद, समसानघाट र कब्रिस्तानमा अलिअलि बजेट छर्ने काम मात्र भएको छ।

मधेशको पर्यटन प्रवर्द्धनमा ठूलो योजना ल्याइरहन आवश्यक छैन। यहाँका ४-५ वटा धार्मिक-सांस्कृतिक केन्द्रलाई प्राथमिकतामा राखेर त्यहाँ आउने पर्यटकलाई सहजीकरण गर्ने काम मात्र प्रदेश सरकारले गर्‍यो भने गजब हुन्छ। जनकपुरको जानकी मन्दिर वा बाराको गढीमाई मन्दिरको गरिमा, महत्त्व र आस्थाबारे भनिरहनु पर्दैन। त्यो सबैलाई थाहा छ। तर, त्यहाँ पुग्ने पर्यटकले सरकारको उपस्थिति महसुस गरुन्।

भारतको जयपुर, अहमदाबाद वा मध्यप्रदेशमा पुग्दा धार्मिक, ऐतिहासिक स्थलमा राज्य सरकारको बलियो उपस्थिति हुन्छ। हामीकहाँ त कति पर्यटक आए, कहाँ-कहाँ गए, त्यति पनि सूचना हुन्न। कम्तीमा जनकपुरको जानकी मन्दिर आउने पर्यटकले राम्रो भनिदेऊन्, गढीमाई आउने पर्यटकले प्रदेश सरकारको उपस्थित महसुस गरुन्। यति मात्रै गरे, ठूलो काम देखिनेछ।

सुशासन र शून्य सहनशीलता नै मेरो मूल मर्म हो। राज्यमन्त्री हुँदा यही अडानमा बसें। प्रदेशसभाको बैठकमा केही समयअघि मैले दिएको अभिव्यक्ति चर्चामा आयो। मैले संसद्मा 'मधेशमा यति धेरै भ्रष्टाचार र यतिविध्न भ्रष्टाचारी भए कि जनताले भ्रष्टाचारलाई स्केप नै गर्न सकेनन्। मेरो चारैतिर भ्रष्टाचारी घुमिरहेका छन्। कसलाई समाऊँ, कस-कसलाई कारबाही गरूँ ? बरु, यो प्रदेशलाई भ्रष्टाचारको रेड लाइट भनेर घोषणा गरिदियौं' भनेको थिएँ। व्यङ्ग्यात्मक रूपमा 'मधेश प्रदेशलाई भ्रष्टाचारको हब बनाऔं। यहाँ भ्रष्टाचारबारे अध्ययन गर्न आउनेसँग राजस्व उठाऔं' भनेको थिएँ। जुन धेरैलाई मन परेन।

मधेशी जनतालाई नेतृत्व वर्गले नै विभेद गरेको देखिन्छ। प्रदेशसभाको सदस्यको हैसियतले मैले कुनै बेला एकपटक संसदीय कोषअन्तर्गत ३ करोड रुपैयाँ चलाउन पाएको थिएँ। राम्रो काम गर्‍यो भने ४०-५० वर्षसम्म त्यही कामका लागि फेरि बजेट खर्चिनु पर्दैन। तर, कमिसनको लोभले गर्दा राम्रो काम हुँदैन। हामीले बजेट सही तरिकाले चलाएका छैनौं। मैले ३ करोड पाउँदा वीरगन्जको जीर्ण रहेको छात्रा स्कुल कन्या माविको भौतिक पूर्वाधारमा खर्च गरें। सडक नै नपुगेको दलित बस्तीमा पक्की सडक बनाउन लगाएँ। विकास नपुगेको ठाउँमा काम गरेको छु।

कम उमेरमा सांसद हुँदा अलमलमा पर्ने खतरा हुन्छ। फोकस आउट हुने डर हुन्छ वा ठूलै मान्छे भइयो भन्ने भ्रमले बर्बाद पार्न सक्छ। कम उमेरमा ठूलो जिम्मेवारीले मान्छेलाई झन् गम्भीर बनाउनुपर्ने हो। समय-समयमा आएका जिम्मेवारीले मलाई झन् बढी जिम्मेवार हुनुपर्छ भने अलर्ट गराएको छ। जो युवा राज्यको भविष्यबारे सोचेर राजनीति गर्छ, त्यो युवाको भविष्य राजनीतिमा छ। जो युवा आफ्नो, परिवार र पार्टीको भविष्य सोचेर राजनीतिमा आउँछ, उसको भविष्य छैन। म आफूले गर्ने भनेको न्याय हो। शतप्रतिशन त नहोला। तर, सक्दो न्यायचाहिँ गर्छु। युवा नेतृत्वले समाज विकासलाई जहिल्यै प्राथमिकतामा राख्नुपर्छ।

युवामा एउटा आधारभूत कमजोरी छ, केका लागि राजनीति गर्ने भन्ने स्पष्ट चित्र देखिँदैन। उनीहरूलाई राजनीतिमा धेरै अप्ठ्यारा छन्। युवालाई राजनीतिमा धेरैले रुचाएका छैनन् भन्ने भाष्य नै बनिसकेको छ। तर, जुन युवाले राज्यको सेवा गर्छु भनेर राजनीति गर्छ, उसले सफलता पाउँछ। राजनीति गर्ने हैसियत छैन भने नगर्नुस्। राजनीति भनेको श्रमदान हो। मैले चुनावमा नारा लगाएको थिएँ, जनतालाई विकास होइन, निकास चाहिएको हो। पुरानो नेता र एजेन्डाबाट जनतालाई निकास दिनुपर्छ भनेर जनतासँग मत मागेको थिएँ। युवामाथि मतदाताले भरोसा देखाए, जनताको त्यो भरोसा हामीले पूरा नगरे वा फेरि युवा नेतृत्वबाट निराशा मात्र मिलेमा ठूलो दुर्भाग्य हुनेछ।

# शंकाको पहाडले थिचिएको छ युवा

संविधानले महिलालाई हरेक क्षेत्रमा ३३ प्रतिशत अधिकार सुनिश्चित गरेको छ तर त्यसअनुसार राज्यको मूलधारमा महिला र दलितको उपस्थिति ज्यादै न्यून छ


सपना दर्जी
कोशी प्रदेश सांसद, माओवादी

दलित समुदायको प्रतिनिधित्व गर्दै कोशी प्रदेशसभा सदस्य बनेको छु। खासगरी दलित र महिलाका अधिकार र सवालका क्षेत्रमा लामो समयदेखि सक्रिय छु। दलको कार्यकर्ताका रूपमा संगठन निर्माणमा निरन्तर संलग्न छु। मूलत: मेरो जिम्मेवारी पार्टीभित्र पनि महिला विभाग हो। सुरुआती दिनदेखि नै महिला मोर्चामा सक्रिय रहें। त्यही कारण महिला विभाग मेरो रोजाइ पनि भयो।

महिला विभागमा लामो समयको अनुभवले मलाई धेरै कुरा सिकायो। खासगरी संगठन निर्माण र कार्यकर्तालाई संगठित गर्न अनुभव लिन पाएको छु। मेरो अनुभव अपवाद मात्रै हो। अधिकांश महिलालाई दलले मलाई जसरी पत्याएको जस्तो लाग्दैन। परिवर्तनको अगुवाइ गरेर आएको माओवादीको कार्यकर्ताको हिसाबले मैले त्यो मौका पाएँ र पूरा गरेर देखाएँ।

जिम्मेवारी पाउनु भनेको सिक्ने प्रक्रिया पनि हो। मैले त संगठनका माध्यमबाट पार्टीको समग्र नीति, सोच र कार्यशैली बुझ्ने र सिक्ने अवसर पाएको छु। त्यो मौकाबाट धेरै दलका महिला नेता सायद वञ्चित छन्। सबै महिलालाई दलले बराबरी अवसर कहिले दिने ? पुरुषलाई झैं विश्वासको वातावरण कहिले बनाउने ? यो ज्यादै सोचनीय प्रश्न हो।

नेपालमा महिलालाई संविधानत: हरेक क्षेत्रमा ३३ प्रतिशत अधिकार सुनिश्चित गरेको छ। तर, सबै क्षेत्रमा उनीहरूको सहभागिता ३३ प्रतिशत छ त ? बिल्कुल छैन। वास्तविकता अर्कै छ। मुलुक संघीय व्यवस्थामा गइसके पनि राज्यको मूलधारमा महिला या दलितको उपस्थिति ज्यादै न्यून छ। राज्य पुन:संरचनापछि पनि समानुपातिक समावेशी सहभागितामा महिलामाथि विभेद कायमै छ।

खासमा महिलामाथिको विभेदको शृंखला हाम्रा घरबाटै सुरु भएको देखिन्छ। नेपाली समाज खासै उदार छैन। हामीलाई समाजले अनेक नाममा बन्धनमा राख्ने प्रयत्न जारी नै छ। झट्ट हेर्दा हाम्रो सामाजिक संरचनामा परिवर्तन भएजस्तो भान धेरैलाई हुन सक्छ। तर, हाम्रो मानसिकता अझै पुरातनवादी नै छ। घर, समाजबाट उब्जिएको यस प्रवृत्तिको झिल्को राजनीतिक दलमा पनि सल्किएको छ।

दलले महिलालाई पत्याउने परिपाटीको सुरुवात कहिले हुन्छ ? त्यसको ग्यारेन्टी कसले गर्छ ? महिला या दलितलाई जिम्मेवारी दिने सवालमा पितृसत्तात्मक सोच कहिले बदलिन्छ ? जिम्मेवारीबाट वञ्चित महिला र दलित नेतृत्वदायी भूमिकामा कहिले पुग्लान् ? जसले उनीहरूको पहुँच र प्रभाव बलियो बनाउन सकोस्।

माओवादी क्रान्तिकारी सोच राख्ने र परिवर्तनको नेतृत्व गर्ने दलको रूपमा परिचित छ। तर, युवालाई नेतृत्वमा ल्याउन खासै उदार देखिएको छैन। जसरी दलित र महिलामाथि अविश्वासको पहाड खडा गरिएको छ। त्यस्तै भीमकाय शंकाको पहाड युवामाथि पनि छ। विगतमा युवाले संगठनदेखि सेनासम्मको नेतृत्व गरेका थिए। तर, त्यो अभ्यास अहिले कुनै पनि दल देखिँदैन। गरे पनि ज्यादै न्यून छ। समावेशी दृष्टिकोणबाट हेर्दा, माओवादी अन्य पार्टीको तुलनामा उदार भए पनि व्यवहारमा युवा, दलित र महिलालाई समान अवसर दिन चुकिरहेको आम जनताको बुझाइ छ।




करिब १२ वर्ष लामो माओवादी 'जनयुद्ध'ले धेरै किसिमका सामाजिक परिवर्तन ल्यायो। मुलुकको समग्र व्यवस्था परिवर्तनको हकदार पनि माओवादी नै हो भन्दा फरक नपर्ला। दलित, महिला, सीमान्तकृत समुदायका लागि ऐतिहासिक अवसरहरू सिर्जना गर्‍यो। संविधानसभाको निर्वाचन र संविधान निर्माणले दलित समुदायका लागि अनेक अवसरका ढोका खोल्यो। सकारात्मक विभेददेखि समानुपातिक समावेशी सिद्धान्तका आधारमा धेरै काम गर्‍यो।

तर, पछिल्लो समय माओवादीले ल्याएका तमाम उपलब्धि गुम्ने खतरा बढेर गएको छ। खासगरी परिवर्तनको अगुवा माओवादीको पछिल्लो कार्यशैलीप्रति नै आशंका पैदा हुन थालेको छ। यो राम्रो सन्देश हैन। माओवादीको कार्यशैलीप्रति आम जनतामा निराशासँगै आशंका पैदा गरेको छ। यसलाई समयमै हल गर्न सकिएन भने यत्रो बलिदानीबाट प्राप्त हक, अधिकार र परिवर्तन गुम्ने खतरा निश्चित छ।

जनयुद्धले दलित समुदायलाई राजनीतिक, सामाजिक र आर्थिक रूपमा अघि बढ्ने अवसर दिएको यथार्थ हो। तर, सरकारको नीतिलाई योजनामा रूपान्तरण गर्न नसक्दा दलित समुदायलाई अझै पनि अवसर प्राप्त गर्न कठिन भइरहेको पनि अर्को यथार्थ पक्ष हो।

दलित समुदायप्रति संघ, प्रदेश र स्थानीय सरकार ज्यादै अनुदार बन्दै गएका उदाहरण प्रशस्त देख्न सकिन्छ। स्थानीय तहमा एक जना दलित महिला सदस्यको पद सुनिश्चित गरिनु ठूलो कुरा हो। यस्तै पद प्रदेश र संघमा समेत निश्चित गर्न सक्दा दलितको सहभागिता थप सुनिश्चित हुने थियो। जसले दलित समुदायको आत्मविश्वास थप बलियो बन्ने थियो।

तर, संघ, प्रदेश र स्थानीय तहमा दलितलाई अधिकार मात्रै हैन बजेट दिन पनि ज्यादै कन्जुस्याइँ भइरहेको छ। कोशी प्रदेशको एउटा सानो तर गम्भीर उदाहरण हेरौं न। यो प्रदेशले दलित अधिकार या सशक्तीकरणको शीर्षकमा एक सुको पनि विनियोजन गरेको छैन। कोशी प्रदेशसभामा अर्को पनि गलत अभ्यास भइरहेको छ। पहिलो कार्यकालमा ६४ भन्दा बढी ऐन प्रदेशसभाले पारित गर्‍यो। अहिले पनि दर्जन बढी ऐन पारित हुने तरखरमा छन्। तर, पहिलो कार्यकालबाट प्रक्रिया सुरु भएको 'दलित सशक्तीकरण विधेयक' को अहिलेसम्म अवधारणसमेत तयार नहुनु चिन्ताजनक कुरा हो। सामाजिक विकास मन्त्रालयले सैद्धान्तिक सहमतिका लागि अवधारणा मुख्यमन्त्री कार्यालय पठाएको तर उतै बेपत्ता भएको खबर सञ्चारमाध्यमहरूमा आएका थिए।

दलितको अधिकारका लागि ल्याउन लागेको ऐन किन र कुन नियतले रोकियो भन्ने विषय सामान्य भने हैन। यो विधेयक रोक्न मुख्यमन्त्री र कानुनमन्त्री नै अग्रसर भएको चर्चा छ। उहाँहरूको तर्क दलित ऐनले खर्च बढाउँछ भन्ने देखिन्छ। तर, दलित ऐनबाट प्राप्त हुने उपलब्धिप्रति उहाँहरू खास गम्भीर देखिनु भएको छैन।

दलित, महिला र युवा समुदायको उत्थानका लागि नीतिगत परिवर्तन मात्र होइन, त्यसको प्रभावकारी कार्यान्वयन पनि आवश्यक छ। संविधानमा स्पष्ट रूपमा उल्लेख भए पनि व्यवहारमा कार्यान्वयन कमजोर देखिन्छ। जसलाई बलियो बनाउन केही उपायहरू अवलम्बन गर्न सकिन्छ।

**नीतिगत कार्यान्वयन** : दलहरूले नीति निर्माण मात्रै होइन, त्यसलाई व्यवहारमा लागू गर्ने प्रतिबद्धता जनाउनुपर्छ। तब मात्र समग्र विभेद अन्त्य हुन सक्छ।

**समान अवसर सुनिश्चितता** : दलित, महिला र युवालाई समान अवसर दिने नीति दलहरूबाट निर्माण गरी त्यसको प्रभावकारी कार्यान्वयनमा जोड दिनुपर्छ। तब मात्रै समान अवसरको सुनिश्चितता हुन्छ।

**जातीय विभेद उन्मूलन** : जातीय विभेद अहिले पनि जारी छ। पानी छोएको निहुँमा, प्रेम गरेको निहुँमा र मन्दिर पसेको निहुँमा अहिले पनि दलितमाथि बर्बर दमन जारी छ। दमन मात्रै हैन हत्यासम्म नै भइरहेका उदाहरण हाम्रा अघिल्तिर छन्। यस्तो गलत काममा राज्य पक्षकै उकेरा र संरक्षण हुने गरेका उदाहरण पनि प्रशस्तै छन्। विभेद अन्त्यका लागि समाजमा तीन पुस्ता (हजुरबा, बुबा र छोराछोरी) बीच संवाद आवश्यक छ। यी तीन पुस्ताले मानसिक रूपमै विभेद अन्त्य गर्न सक्दा मात्रै समग्र विभेद अन्त्य हुन सक्छ। नत्र अझै सयौं वर्ष पर्खिनुपर्ने पनि हुन सक्छ।

**आरक्षण नीति बलियो बनाउने** : समानुपातिक समावेशी सिद्धान्तलाई व्यवस्थित रूपमा लागू गर्न सक्दा पनि विभेद अन्त्यको बाटो खुल्न सक्छ।

**शिक्षा र रोजगारी** : विभेद अन्त्यका लागि दीर्घकालीन रूपमा शिक्षामा लगानी बढाउन आवश्यक छ। संविधानले १२ कक्षासम्म नि:शुल्क शिक्षाको ग्यारेन्टी गरेको छ, तर यो कार्यान्वयन भएको छैन। यस्ता धेरै जटिलता छन्। जसका कारण दलितले शिक्षा प्राप्त गर्न कठिन छ। शिक्षा नभएपछि रोजगारी पाउने त कुरै हुन्न।

**राज्यको लगानी** : दलित अधिकारको सुनिश्चितताका लागि राज्यले प्रत्यक्ष रूपमा बजेट विनियोजन गर्नुपर्छ। कोशी प्रदेशमा दलित समुदायको उत्थानका लागि यो वर्ष कुनै बजेट छुट्याइएको छैन, तर अन्य अनुत्पादक क्षेत्रमा करोडौं लगानी भइरहनु दु:खद पक्ष हो।

**राजनीतिक नेतृत्वमा प्रतिनिधित्व** : दलित, महिला र युवालाई प्रत्यक्ष निर्वाचित प्रणालीमार्फत संसद्मा ल्याउनुपर्छ। चुनावमा उनीहरूलाई हार्ने क्षेत्रमै टिकट दिने प्रवृत्ति अन्त्य गरिनुपर्छ। निर्वाचन खर्चिलो बनाइनु हुन्न। खर्चिलो भएन भने दलित र महिलाले पनि पैसा खर्च नगरी चुनाव जितेर सांसद, मन्त्री र प्रधानमन्त्री बन्न सक्ने सम्भावनाको ढोका खुल्न सक्छ।

**मानसिकता परिवर्तन** : दलित, महिला वा युवा कोटा खान मात्रै आएका हुन् भन्ने गलत भाष्य समाजमा निर्माण गरिएको छ। यो गलत बुझाइ हटाउन आवश्यक छ। योग्य दलित तथा महिलालाई समानुपातिक प्रक्रियामा मात्र सीमित नगरी प्रत्यक्ष निर्वाचित पदमा लैजान जरुरी छ। दलित महिलालाई सधैं 'बिचारा' मात्रै बनाउनुभन्दा अवसर दिइनु चाहिँ बढी श्रेयष्कर हुन सक्छ।

अन्त्यमा, राजनीतिक दल, समाज र राज्यको नीति एकअर्कासँग अन्तरसम्बन्धित छन्। महिलालाई नेतृत्वदायी भूमिकामा स्थापित गर्न, दलित समुदायलाई अवसर दिन र युवालाई विश्वास गर्ने वातावरण सिर्जना गर्न राज्यले प्रभावकारी नीति अवलम्बन गर्नुपर्छ। सामाजिक विभेद अन्त्य गर्न कानुनी संरचना बलियो बनाउनुका साथै कार्यान्वयनमा जोड दिनु आवश्यक छ। दल र नीति निर्माताले यो विषयलाई गम्भीर रूपमा लिए मात्र समतामूलक समाज निर्माण सम्भव छ।

# अपांगता भएकाहरूको आवाज संसद्‌मा



सुनिता थापा
गण्डकी प्रदेश सांसद, कांग्रेस

**संघ, प्रदेश, स्थानीय तहमा अपांगता भएका व्यक्तिको अधिकार, सहभागिता र अवसरका लागि आवाज उठाउँदा नसुनिएपछि आफै त्यस स्थानमा पुग्ने लक्ष्य लिएँ, यही सोचले अघि बढ्दा गण्डकी प्रदेशसभामा आइपुगें**

म सुनिता थापा, बहिरा समुदायकी एक महिला। अपांगता भएका व्यक्ति, जनजाति, महिला र पछाडि परेका युवाको आवाज उठाउँदै गण्डकी प्रदेशसभामा प्रतिनिधित्व गरिरहेकी छु। मेरो लक्ष्य मात्र व्यक्तिगत सफलतामा सीमित छैन, बरु समावेशी समाज निर्माणका लागि अन्य उत्पीडित वर्गको आवाज बन्न चाहन्छु। राजनीतिमा अपांगता भएका व्यक्तिको सहभागिता किन आवश्यक छ ? युवाले कस्तो भूमिका खेल्न सक्छन् ? महिलाको प्रतिनिधित्व किन महत्त्वपूर्ण छ ? यी सबै प्रश्नको उत्तर खोज्दै राजनीतिमा यात्रा तय गरेकी हुँ।

स्याङ्जाको चापाकोटमा ०४९ मा जन्मिएँ। १२ वर्षको उमेरमा बिरामी भएँ। टाइफाइडले थलिएँ जसका कारण बहिरा भएँ। विद्यालयमा राम्रो विद्यार्थी थिएँ तर बिरामी भएपछि कक्षा ७ मा एकपल्ट अनुत्तीर्ण भएँ। म अनुत्तीर्ण हुँदा सबैले चासो राखे। जबकि त्यतिबेला मैले शिक्षक, साथी र घरपरिवारले बोलेको कुरा मधुरो सुन्न थालिसकेको थिएँ। कतिपयले मैले नाटक गरेको पनि भने। तर मेरो श्रवण शक्ति हराइरहेको थियो। सुन्ने मान्छे अचानक नसुन्ने हुँदा धेरैले विश्वास गरेनन्। त्यो मेरो जीवनको सबैभन्दा ठूलो परिवर्तन थियो। समाजमा अपांगता भएका व्यक्तिलाई हेर्ने दृष्टिकोण नै फरक थियो, जसले मलाई झन् धेरै चुनौती थप्यो।

म सामान्य विद्यालयमा अध्ययन गर्थें। तर बहिरा भएपछि सिकाइ प्रक्रियामा कठिनाइ देखा परे। शिक्षकले मलाई अघिल्लो बेन्चमा राखेर सिकाए। २०६५ मा एसएलसी उत्तीर्ण भएँ। स्टाफ नर्स पढ्ने ठूलो धोको थियो तर कान नसुन्ने कारणले विषय छानेर पढ्न नपाइने रहेछ। त्यसपछि पोखराको लेखनाथमा रहेको सिर्जना बहिरा आवासीय विद्यालयमा नेपाली विषय लिएर १२ कक्षासम्म अध्ययन गरें। त्यतिबेला शिक्षा संकायमा नेपाली विषय लिएर मात्र पढ्न पाइन्थ्यो। अहिले बागलुङमा कम्प्युटर विषय थपिएको छ। काठमाडौंमा लेखासम्बन्धी अध्यापन भर्खरै सुरु भएको छ।

बहिरा स्कुलमा भर्ना भएपछि सबैले सांकेतिक भाषा प्रयोग गरेको देखेर आफ्नो साथी बल्ल भेटेको महसुस भयो। मैले पनि भाषा सिकें। सुरुमा हात चलाउन नजानेरै आत्तिएको थिएँ। बिस्तारै बानी पर्‍यो। त्यसपछि बहिरासँग सम्बन्धित संस्था छन् भन्ने थाहा भयो। २०६६ मा स्याङ्जा जिल्ला बहिरा संघमा आबद्ध भएँ।

स्नातक पढ्न काठमाडौं जाँदा मेरो अगाडि अर्को ठूलो चुनौती आयो- सांकेतिक भाषामा पढाइको अभाव। मैले स्नातक सुन्ने विद्यार्थीहरूसँगै पढ्नुपर्ने भयो। मसँग उच्च शिक्षाको क्षमता थियो तर त्यो क्षमताको उपयोग गर्ने माध्यम थिएन। नेपालमा अपांगता भएका विद्यार्थीका लागि शिक्षाको उचित व्यवस्था नभएकै कारण धेरैले आफ्ना सपना मारेर जीवनलाई नयाँ मोड दिनुपर्ने अवस्था आउँछ। म त्यहाँ रोकिएँ। मेरो लक्ष्य आफ्ना लागि मात्र केही गर्नु थिएन। बरु मजस्ता अन्य अपांगता भएका व्यक्ति, महिला र युवाका लागि बाटो खोल्ने प्रयास गर्नु थियो।

देश-विदेशका विभिन्न कार्यक्रममा सहभागिता जनाउँदै मैले बहिरा समुदायका समस्या मात्र होइन, समग्र अपांगता भएका व्यक्ति, महिला, जनजाति र पछाडि परेका युवाका मुद्दालाई प्रतिनिधित्व गर्न थालें। सन् २०१८/०१९ मा जापानमा १० महिने नेतृत्व विकास तालिमको अवसर प्राप्त गर्नु मेरा लागि अवसरका रूपमा आयो।

त्यहाँबाट गण्डकी प्रदेशमै अपांगताको क्षेत्रमा काम गर्ने योजनाका साथ आएको थिएँ। त्यतिबेला के थाहा भयो भने जे काम गर्नुपर्दा पनि राजनीति बाधक बन्ने रहेछ। अपांगताको क्षेत्रमा विभिन्न परियोजना ल्याउने, जापानबाट सहयोग भित्र्याउने योजना लिएर आएको थिएँ। यहाँ कुनै पनि पार्टीमा आबद्ध नभई ती काम गर्न सम्भव नहुने तीतो यथार्थ रहेछ। म समाज सेवामा सक्रिय हुन चाहेको थिएँ। कुनै दलमा आबद्ध नहुँदा दुई वर्ष काम नै गर्न पाइनँ।

स्थानीय तहमा चुनिएका जनप्रतिनिधिले पनि राजनीतिक आबद्धता हेरेर मात्रै सहयोग गर्ने, संस्थाले ल्याएका परियोजना दलले जस लिने गरेर गर्नुपर्नेजस्ता बाधा व्यवधान आए। दुई वर्षसम्म झगडा नै गरेर बस्नुपर्‍यो। त्यसपछि राजनीतिमा आबद्ध हुनैपर्ने रहेछ भन्ने विचार आयो। अपांगता क्षेत्रको आवाज उठाउनका लागि राजनीतिमा प्रवेश गर्नुपर्छ भन्ने बोध भयो। कांग्रेसमा आबद्ध भएर मैले राजनीति थालें।

राजनीतिमा सक्रिय भएको ७ वर्ष पुगेको छ। कांग्रेसको क्षेत्रीय प्रतिनिधि, महाधिवेशन प्रतिनिधि, लोकतान्त्रिक अपांग संघको केन्द्रीय सदस्य भएर राजनीतिमा सक्रिय भएँ। राजनीति समाज परिवर्तन गर्ने प्रभावशाली माध्यम हो। यदि हामीलाई समान अवसर चाहिन्छ भने त्यसका लागि नीति निर्माण गर्ने ठाउँमा पुग्नुपर्छ। यही सोचका साथ म गण्डकी प्रदेशसभामा आइपुगें।

संविधानले सबै नागरिकलाई समान अधिकार दिएको भए पनि व्यावहारिक रूपमा अझै पनि धेरै समुदाय राज्यका निर्णय प्रक्रियाबाट अलग छन्। अपांगता भएका व्यक्ति, महिला, जनजाति र पछाडि परेका युवाको आवाज निर्णय प्रक्रियामा पुग्न नसकेको अवस्था छ। नीति निर्माण तहमा रहेका जनप्रतिनिधिले पनि अपांगता भएका व्यक्तिको आवाज सुनेको पाइनँ। आफूलाई नपरी महसुस नहुँदो रहेछ भन्ने महसुस भयो। संघ, प्रदेश, स्थानीय तहमा अपांगता भएको व्यक्तिको अधिकार, सहभागिता, अवसरका लागि आवाज उठाउँदा नसुनिएपछि म आफै त्यस स्थानमा पुग्ने लक्ष्य लिएको थिएँ।



नेपालमा करिब १५ प्रतिशत अपांगता भएका व्यक्ति छन्। तर, उनीहरू राजनीतिक नेतृत्वमा न्यून मात्र देखिन्छन्। अपांगता भएका व्यक्तिको मुद्दा बुझ्न र सम्बोधन गर्न उनीहरू स्वयं नीति निर्माण प्रक्रियामा सामेल हुन आवश्यक छ। त्यसका लागि मैले आफू जनजाति, महिला र अपांगता भएको व्यक्ति भएकाले प्रदेशसभा सदस्यको बन्दसूचीमा नाम राख्न पार्टीभित्रै संघर्ष गरें। क्लस्टरको हिसाबले पनि मेरो नाम समानुपातिकको बन्दसूचीको एक नम्बरमै पर्छ भन्ने लागेको थियो। मेरो नाम जनजातितर्फ पाँचौं नम्बरमा थियो। अपांगको क्लस्टर भएको भए एक नम्बरमै हुन्थ्यो।

कांग्रेस सांसद विमला गौचनको निधन भएपछि बन्दसूचीमा बुझाइएको रोलक्रमअनुसार मैले प्रतिनिधित्व गरेको छु। पहिला म आफै अपांगता भएका व्यक्तिका तर्फबाट आवाज उठाउँदै हिँड्थें। अहिले म आवाज सुन्ने ठाउँमा पुगेको छु। नीति निर्माण गर्ने ठाउँमा आएको छु। मैले जिम्मेवारी थपिएको महसुस गरेको छु। हिजो जुन-जुन ठाउँमा माग राख्दै हिँडेको थिएँ, अहिले त्यही ठाउँमा आइपुगेको छु। सबैको कुरा मैले सुन्नुपर्ने भएको छ। यहाँभित्र पनि बुझाउन गाह्रो छ।

हिजो अपांगता भएको व्यक्ति आज सांसद कसरी भई भन्ने पनि सुनिन्छ। संसद्‌मा भएका कुरा बुझेको छ कि छैन होला भन्नेजस्ता कुरा पनि समाजमा हुने गरेका छन्। हिजो अपांग भनेर विभेद गरिए पनि अहिले सांसद भइसकेपछि त्यही किसिमको सम्मान गर्ने, विभिन्न कार्यक्रममा बोलाउने पनि भइरहेको छ। हामीले के बुझ्न जरुरी छ भने अपांगता भएका व्यक्ति असक्षम होइनन्, समाजले गर्ने विभेद, अवरोधका कारण सक्षमता प्रमाणित गर्न नसकेका मात्रै हुन्।

नीति निर्माण गर्ने ठाउँ हो, संसद्। पहिलोपल्ट सदनमा उपस्थित हुँदा केही 'नर्भस' पनि भएको थिएँ। त्यहाँसम्म अपांगतामैत्री छ कि भन्ने सोचेकी थिएँ। तर संसद् भवन पनि पूर्ण रूपमा अपांगमैत्री छैन। संविधानले पनि अपांगता भएको व्यक्तिको सूचनाको अधिकार सुनिश्चित गरेको छ। संसद्‌मा दोभासेको व्यवस्था गर्नुपर्ने थियो तर अहिलेसम्म पनि भएको छैन। मैले दुई महिना अगाडि नै दोभासे राख्नका लागि निवेदन दिएको थिएँ तर अहिलेसम्म सुनुवाइ भएको छैन। प्रदेश संसद् नियमावलीमा अपांगता भएका सांसदलाई सहयोगीको व्यवस्था गर्ने भनिएको छ तर बहिराका लागि सञ्चार सहयोगीको व्यवस्था उल्लेख छैन।

म जापान, सिंगापुर, दुबई, स्विट्जरल्यान्ड, दक्षिण कोरिया, चीनलगायत देशमा अपांगता भएका व्यक्तिको प्रतिनिधित्व गर्दै पुगेको छु। स्विट्जरल्यान्डको जेनेभामा राष्ट्रसंघको सचिवालयमा भएको कार्यक्रममा अपांगता भएका जनजाति महिलाको विषय उठाएको थिएँ। विदेशका विकसित देशका कानुन, पूर्वाधार अपांगमैत्री छन्। त्यस्तै किसिमको लगानी नेपालमा गर्न नसकिएला तर स-सानो कुरामा परिवर्तन गर्न सकिन्छ। शिक्षा, स्वास्थ्य, रोजगारमा विशेष सुविधा दिन सकिन्छ।

अपांगता भएका व्यक्तिको शिक्षा, स्वास्थ्य, रोजगारी, पहुँच र आत्मनिर्भरता सुनिश्चित गर्ने नीति आवश्यक छन्। यी नीति प्रभावकारी बनाउन अपांगता भएका व्यक्तिको प्रत्यक्ष संलग्नता हुनुपर्छ। अपांगता भएका व्यक्तिलाई 'दया' को दृष्टिले होइन, 'सक्षम नागरिक' का रूपमा हेर्न आवश्यक छ। यसका लागि राजनीतिक तहबाट नै उदाहरणीय भूमिका निर्वाह गरिनुपर्छ।

नेपालका युवा परिवर्तनशील शक्ति हुन्। देशको कुल जनसंख्याको करिब ४० प्रतिशत युवा छन् तर उनीहरूलाई निर्णय प्रक्रियामा समावेश गर्न गरिएको प्रयास न्यून छ। युवाको राजनीतिक चेतना बढाउनुपर्छ। युवामा राजनीतिक जागरुकता ल्याउन सके मात्र उनीहरूलाई नीति निर्माणमा सक्रिय बनाउन सकिन्छ। राजनीतिक दलमा युवा नेतृत्वको अवसर हुनुपर्छ। पुरानै शैलीका नेताहरू मात्र अगाडि आउने होइन, नयाँ सोच र दृष्टिकोण भएका युवालाई अवसर दिनुपर्छ।

राजनीति केवल सत्ता प्राप्त गर्ने साधन होइन। यो समाज परिवर्तनको मूल आधार हो। जब निर्णय गर्ने ठाउँमा अपांगता भएका व्यक्ति, दलित, महिला, जनजाति र पछाडि परेका युवाको उपस्थिति हुन्छ, तब मात्र समावेशी नीति निर्माण सम्भव छ।

राजनीतिमा धेरै सुधार गर्नुपर्ने विषय छन्। दलभित्र युवालाई पछि समय आउँछ, बेला आउँछ, अहिले खुड्किलो चढ्ने बेला भएको छैन भन्ने चलन रहेछ। मलाई पनि त्यही भनिएको थियो। युवालाई नेतृत्व दिनुपर्ने हो। तर त्यस्तो छैन। सबैलाई पालो पुर्‍याउँदा युवाको पालो पछाडि आउने रहेछ। त्यसकारण पनि युवा पलायनको अवस्था देखिएको छ। उमेर ढल्किसकेपछि मात्रै नेतृत्वको अवसर दिने चलन बदलिनुपर्छ। सबै पार्टीले युवा र अपांगता भएका व्यक्तिलाई विशेष मौका दिनुपर्छ।

शिक्षा प्रणालीमा सुधार गर्दै अपांगता भएका विद्यार्थीका लागि समावेशी शिक्षाको व्यवस्था गर्नुपर्छ। रोजगारीका अवसर सिर्जना हुनुपर्छ, अपांगता भएका व्यक्ति, महिला र युवाका लागि रोजगारीका विशेष नीति लागू गर्नुपर्छ। समावेशी राजनीति प्रवर्द्धन आवश्यक छ। राजनीतिक दलले अपांगता भएका व्यक्ति, महिला र युवालाई उम्मेदवार बनाउनुपर्छ। समाजका सबै व्यक्तिलाई समान अवसर सुनिश्चित गर्न सरकार, समुदाय र संस्थाले सहकार्य गर्नुपर्छ।

म प्रदेश सांसदसँगै गण्डकी बहिरा संघको अध्यक्ष पनि हुँ। संसद्‌मा मेरो मुख्य एजेन्डा भनेको नीति नियमलाई प्रभावकारी बनाउन अपांगता भएका व्यक्तिको सहभागिता सुनिश्चित गर्ने हो। प्रदेशले जुनसुकै ऐन बनाउने क्रममा सरोकारवालासँग गर्ने छलफलका क्रममा अपांगता भएका व्यक्तिलाई छुटाउनु हुँदैन। कुनै ऐन बनाउँदै गर्दा त्यहाँ हुने छलफलमा अपांगता भएको व्यक्ति सहभागी हुने हो भने अपांगता क्षेत्रका लागि छुट्टै ऐन बनाइरहनु पर्दैन। बनेका ऐन कार्यान्वयन गर्ने पनि मेरो मुख्य एजेन्डा रहनेछ। शिक्षा, स्वास्थ्य, रोजगारीको क्षेत्रलाई अपांगमैत्री, समावेशी बनाइनुपर्छ।

अपांगता भएका व्यक्तिको सम्मानजनक सहभागिता सुनिश्चित गर्नेछु। महिलाको अधिकारका लागि लडिरहनेछु। युवालाई राजनीतिक निर्णय प्रक्रियामा ल्याउने प्रयास गर्नेछु। समाज परिवर्तन सजिलो हुँदैन। तर जब सबैले सँगै हातेमालो गरेर अघि बढ्छन् तब मात्र परिवर्तन सम्भव छ। म मेरो यात्रा जारी राख्नेछु- समावेशी राजनीति, समान अधिकार र सशक्त समाज निर्माणका लागि।

# नयाँ जनप्रतिनिधिमा पनि पुरानै सोच

सिंहदरबारभित्र आवश्यकभन्दा बढी कर्मचारी राख्ने तर जनतासँग प्रत्यक्ष जोडिएको पालिकामा कर्मचारी नपठाएर सेवा प्रवाहलाई दुरुह बनाउने काम भएको छ

विद्यानन्द चौधरी
अध्यक्ष, छिन्नमस्ता गाउँपालिका, सप्तरी, लोसपा

शरतसिंह भण्डारीको नेतृत्वमा रहेको तत्कालीन राष्ट्रिय मधेश समाजवादी पार्टीको विद्यार्थी युनिटमा जोडिएर राजनीतिमा प्रवेश गरेको हुँ। त्यतिखेर म १३ वर्षको थिएँ। त्यही उमेरदेखि लेखन अध्ययन तथा विभिन्न गतिविधिमा सक्रियता बढाएँ। पार्टीले गर्ने विभिन्न कार्यक्रम तथा सभाजुलुसमा सहभागी हुन्थे। आफ्नो भूमिका र जिम्मेवारी निर्वाह गर्थे। मधेश आन्दोलन, विद्रोहका बेला विभिन्न समितिमा रही सक्रिय रूपमा आफ्नो भूमिका निर्वाह गर्दै गएँ।

बाल्यकालमै मधेश विद्रोहका क्रममा रूपनी र मलेठमा भएको झडपका क्रममा प्रहरीको गोलीबाट जोगिएँ, झन्डै ज्यान गएन। त्यस दौरान केही पटक प्रहरी हिरासतमा बस्नुपर्‍यो। आन्दोलनमा सक्रिय रहेकै कारण पार्टीले मलाई विद्यार्थी सगठनको केन्द्रीय सदस्यमा मनोनयन गर्‍यो। मेरो गाउँ छिन्नमस्ताका व्यापारीलाई संगठित गर्दै उहाँहरूको विभिन्न समस्यामा काम गरिरहँदा १६ वर्षकै उमेरमा छिन्नमस्ता बजार व्यवस्थापन समितिको सचिव पदमा नियुक्त गरियो। यसले मलाई अझ जिम्मेवारीबोध गरायो।

२०७४ को स्थानीय तह निर्वाचनमा छिन्नमस्ता-३ को वडाध्यक्षमा उम्मेदवारी दिन पार्टीभित्र टिकटका लागि पहल सुरु गरे। मेरो उमेर त्यतिबेला २१ वर्ष थियो। राजनीतिक पृष्ठभूमि नभएको सामान्य परिवारको मान्छे, किसानको छोरा, निम्न आयस्तर भएको अल्पसंख्यक जातको व्यक्ति भएकाले टिकट पाउन त्यति सहज थिएन। मैले हरेक प्रयास जारी राखें। टिकट लिने दौरानमा मलाई मानसिक रूपमा समेत प्रताडित गर्ने काम भयो।

म प्रतिनिधित्व गर्ने जातबाट जम्मा २४ भोट मात्र वडामा रहेको र त्यति भोट पनि ल्याउन नसक्ने भनाइले मलाई सार्वजनिक रूपमा गिज्याउने काम भयो। अन्ततोगत्वा पार्टीले मलाई तत्कालीन समयमा देशकै कान्छो वडाध्यक्षका रूपमा अगाडि बढायो। मनोनयन गर्न जाने दिन यहाँका राजनीतिक मुखिया भनिएकाले सयौंको संख्यामा जुलुस नारा लिएर मेरो आत्मसम्मानलाई खिल्ली उडाउने गरी चुनाव नलड्न र राजनीति नगर्न सार्वजनिक रूपमा घुर्काइरहे। तर मैले मनोनयन गरे। उक्त समयमा मेरो दल राष्ट्रिय जनता पार्टी (राजपा) भइसकेको थियो। अन्तरघातले तत्कालीन विजेतासँग ४ सय ४४ मत ल्याई ३२ मतको झिनो मतान्तरले निकटतम प्रतिद्वन्द्वी भए। तर मसँगै चुनावमा होमिएका पार्टीका चार वटै वडा सदस्य विजयी भए।

स्थानीय वडावासीले ममा देखाएको भरोसा र विश्वासप्रति अझ जिम्मेवार भई हारलाई सहर्ष स्वीकार गर्दै अगाडिको राजनीतिक यात्रा बढाउन दिनरात लागिरहे। त्यस दौरान परिवारका अभिभावक र सदस्यले मेरो हरेक राजनीतिक गतिविधिलाई सक्रिय रूपमा सघाइरहे। निर्वाचनलगत्तै पार्टीले मलाई जिल्ला कमिटीको सहसचिव बनायो। त्यस दौरान जनताका दैनिकीसँग जोडिएको समस्यासँग निरन्तर काम गरिरहे। समाधानका निमित सशक्त रूपमा लागिरहे। जनतासँगै जोडिइरहँदा २०७४ देखि २०७९ आइसकेको पत्तै भएन।

२०७९ को निर्वाचन आउन केही महिना बाँकी छँदै साथीले तपाईं पालिका प्रमुखमा लड्नुपर्छ भन्दै सुझाव दिँदै हौस्याउन थाले। मैले पनि त्यस विषयमा टोलटोल र बस्तीमा छलफल सुरु गरे। जनताको विचार संकलन गर्न थाले। मेरो व्यवहार/रुचाइ पालिका प्रमुखमा हेर्न चाहेको महसुस भयो। परिवारमा पनि सल्लाह गर्दा अगाडि बढ्न सुझाव आयो। मैले मेरो पार्टीका नेतालाई म पालिका प्रमुखमा लड्ने कुरा सुनाउँदा कति हाँसे, कतिले मजाक बनाए, कतिले बचपना भन्दै कुरा काटे। तर केहीले तयारी गर्न सुझाए।



मेरा लागि पालिका प्रमुखको टिकट थप चुनौतीको विषय किन थियो भने मेरै पार्टीबाट जितेका तत्कालीन जिल्ला समन्वय समिति सप्तरीका प्रमुख रहेका प्रभाकर यादव पनि गाउँपालिका अध्यक्ष पदका लागि प्रबल दाबेदार थिए। उहाँ र ममा तुलना नै छैन भन्ने स्वर पनि थिए। पार्टीको निरन्तर छलफलले अन्ततः मलाई टिकट दिने निर्णय लियो। कहलिएका राजनीतिक हस्ती तथा दिग्गजसँग चुनावी प्रतिस्पर्धामा होमिएँ। २८ सय ९५ मत ल्याई निर्वाचित भएँ। मबाहेक निर्वाचनमा मेरो पार्टीका तर्फबाट कोही पनि विजयी हुन सकेनन्। जो मेरो लागि थप चुनौतीको विषय बन्यो र छ पनि।

स्थानीय तह निर्वाचनको पहिलो कार्यकालमा तीन वर्षसम्म गाउँसभा नै हुन सकेको थिएन। द्वन्द्वमा पिल्सिएको पालिकामा पार्टीका तर्फबाट एक्लै निर्वाचित भएर पालिका सञ्चालन गर्न त्यति सहज थिएन्। २०७९ जेठ १२ मा पदभार ग्रहण गरी निर्वाचित सम्पूर्ण साथीलाई भेला गरी पालिकाको हकहितमा तथा विकास निर्माणका निम्ति दलीय स्वार्थभन्दा माथि उठेर अगाडि बढ्न प्रस्ताव गरे। त्यसैअनुसार अभ्यासबाट अगाडि बढाएँ।

पालिका प्रमुखका रूपमा पालिकाको मूल नेतृत्वमा आएपछि समाजका विभिन्न समस्या समाधान र विकास निर्माणको गतिविधिमा कार्यकारी भूमिकामा रहेर सम्बोधन गर्ने र निवारण गर्ने अवसर मलाई प्राप्त भएको छ। तर पालिका सञ्चालन गर्न त्यति धेरै सहज भने छैन। बजेट बाँडफाँटका क्रममा वडालाई दिइने सिलिङ तथा टुक्रे योजना समावेश गर्नुपर्ने बाध्यताका कारण नयाँ सोचका साथ ठूला योजना गर्न सक्ने अवस्था छैन।

बहुमत अल्पमत हुने भएकाले जनप्रतिनिधिको बार्गेनिङको सामना गर्नु र उनीहरूको चित बुझाएर अगाडि बढ्नु पनि कम्ती चुनौतीपुर्ण छैन। आजका समयमा पनि केही जनप्रतिनिधिको सोच उही पुरानो पाराको छ। २१ औं शताब्दी अनुसार युग सुहाउँदोभन्दा पनि टुक्रे योजना राखेर पुरानै पाराले अगाडि बढ्न खोज्नेलाई समेत सम्बोधन गर्दै पालिकाको दीर्घकालीन विकासमा लागेको छु। एकातिर कर्मचारी अभावका कारण सेवा प्रवाह र सुशासन कायम गर्न असहज छ भने अर्कोतिर ठूला योजनाको अभावमा समस्या समाधान हुन सकिरहेका छैनन्।

म नेपाल-भारत सीमामा रहेको पालिकाको अध्यक्ष हुँ। मेरो पालिकामा प्रसिद्ध शक्तिपीठ छिन्नमस्ता भगवतीको ऐतिहासिक मन्दिर छ। दैनिक नेपाल तथा भारतका तर्फबाट मन्दिर दर्शनकै लागि भए पनि यहाँमा उल्लेख्य संख्यामा मानिस आउँछन्। आफ्नो पालिकाका नागरिकको समस्या र बाहिरबाट आउने दर्शनार्थी पर्यटकको भावनालाई समेत कदर गर्दै विकासका गतिविधि अगाडि बढाउनुपर्ने चुनौती मसँग छ। ऐतिहासिक मन्दिर हुनु र बर्सेनि २५ देखि ३० लाखसम्म आन्तरिक तथा बाह्य दर्शनार्थी पर्यटक आउने गरे संघीय सरकारबाट यो मन्दिरको अपेक्षाकृत विकासमा ध्यान जान नसक्नु दुःखद हो। छिन्नमस्ता मन्दिर यस क्षेत्रका हजारौं परिवारको छाक टार्ने माध्यम त हो नै, देशकै प्रमुख धार्मिक पर्यटकीय स्थलका रूपमा समेत विकास हुन सक्ने सम्भावना बोकेको स्थान हो। भारतीय सीमासँग जोडिएका कारण यहाँ अझै पनि भारतीय धार्मिक पर्यटकलाई ल्याउन स्थानीय तहको मात्र प्रयासले सम्भव छैन। यसमा संघीय सरकारकै ध्यान पुग्नु आवश्यक छ।

आजको अवस्थामा प्रसिद्ध छिन्नमस्ता मन्दिरसम्म पुग्ने बाटो सहज छैन। महेन्द्र राजमार्गको रूपनीदेखि राजबिराज हुँदै छिन्नमस्ता मन्दिरसहित न्योर बोर्डरसम्म जाने सडक टेन्डर भएर निर्माण सम्पन्न हुनुपर्ने अवधि पनि सकिएको छ। तर पनि यो सडकको काम सम्पन्न हुन सकेको छैन। जसका कारण धूलो र हिलोमा यात्रा गर्न भक्तजन बाध्य छन्। सडक अस्तव्यस्त भएकै कारण पनि धेरै जना छिन्नमस्ता नआउने गरेको तीतो अनुभव हामीसँग छ। यो संघीय सरकारले टेन्डर गरेको सडक हो। कानुनी अड्चनका कारण हामीले यसमा काम गर्न सक्दैनौं, हामीसँग त्यो परिमाणमा बजेट पनि हुँदैन। तर छिन्नमस्तासम्म पुग्ने सडक समयमै निर्माणका लागि सडक कार्यलयसँग संवाद गरे। मेरो नेतृत्वमा पालिकाका जनप्रतिनिधि सडक कार्यालय लहानमा धर्ना बसे। सडक विभागमा जिम्मेवार अधिकारीलाई गएर आग्रह गरे। यहाँसम्म कि देशको प्रमुख कार्यकारी प्रधानमन्त्रीज्यूसमक्ष पनि गएर टेन्डर भई निर्माण रोकिएको छिन्नमस्ता सडक तदारुकताका साथ निर्माण होस् भन्ने आग्रह गरे। तर हात लाग्यो शून्य। सडक त बनेनन् बनेनन्, बरु भएका सडक पनि खनेर जर्जर बनाइएको छ। यातायात सहज रूपमा चल्नु त के पैदल हिँड्न पनि अप्ठ्यारो भएको छ। यदि स्थानीय पालिका आर्थिक रूपमा सबल भएको भए केन्द्रको मुख ताक्नुपर्ने विवशता हुन्थेन।

मुलुकमा संघीयता आयो तर अझै पनि हाम्रो माटो सुहाउँदो संघीयता आउन सकेको छैन। आज पनि निजामती कर्मचारी ऐन आउन नसक्दा तथा वित्तीय संघीयताको मर्मअनुसार बजेटको स्रोत बाँडफाँट नगरेकाले आर्थिक अभावमा पहिचान भएका प्राथमिकताका योजनासमेत सञ्चालन गर्न नसक्ने अवस्था छ। पालिकाको बजेट सीमित छ। हामीसँग आन्तरिक स्रोत छैन। हाम्रो पालिका ग्रामीण क्षेत्र र किसान बहुल क्षेत्र हो। तर हामीले चाहेर पनि बजेट अभावमा किसानहरू लागि सिँचाइ र मलखाद्य लगायतका समस्या पूर्ण रूपमा समाधान गर्न सकिरहेका छैनौं। संघीय सरकारले यसमा आँखा चिम्लेको जस्तो मेरो अनुभव छ।

खासगरी कृषि बहुल पालिकामा कृषिको विशेष कार्यक्रम नदिँदा, कृषि आधुनिकीकरण र यन्त्रीकरण गर्नेतर्फ संघीय सरकारले कुनै कदम चाल्न नसक्दा ग्रामीण क्षेत्रका किसान कृषि कर्म छोडेर भारत तथा खाडी मुलुकतर्फ रोजगारीका लागि जाने क्रम बढेको छ। यसतर्फ तीनै तहका सरकारको गम्भीरतापूर्वक ध्यान जानु जरुरी छ।

सिंहदरबारभित्र आवश्यकभन्दा निकै बढी कर्मचारी राख्ने तर जनताको सेवा प्रवाहसँग प्रत्यक्ष जोडिएको स्थानीय पालिकामा कर्मचारी नपठाएर सेवा प्रवाहलाई दुरुह बनाउने काम भएको छ।

काम गर्ने युनिट स्थानीय सरकार हो, तर संघीय र प्रदेश सरकारले पनि ससर्त अनुदानको कार्यक्रम भन्दै २५-५० हजारको योजना सञ्चालन गर्नु जस्तो हास्यास्पद र लज्जास्पद के होला ? तीनै तहका सरकारबीच हरेक विषयमा समन्वय र सहकार्य हुने व्यवस्था संविधानमै रहे पनि कुन सरकारले के नीति र कार्यक्रम ल्यायो वा कसले के कार्यक्रम गर्दै छन् भन्ने यकिन गर्ने कुनै संयन्त्र नहुँदा सीमित स्रोतसमेत दुरुपयोग हुने र कार्यक्रम दोहोरिने क्रम बढेको छ।

समस्या नै समस्यामा रहँदा पनि सीमित साधन स्रोतका बाबजुद प्राथमिकताका आधारमा जनअपेक्षाअनुसार काम गर्न योजना तर्जुमा गर्दै अगाडि बढेको छु। शिक्षा, स्वास्थ्य, कृषि, पूर्वाधार र पर्यटनलाई प्रमुख रूपमा अगाडि बढाइरहेको छु। भएका सीमित साधनस्रोतको अधिकतम उपयोग गरी सेवा प्रवाहलाई कसरी जनअपेक्षाअनुसार गर्न सकिन्छ, यसमा दत्तचित्त भएर लागेको छु। तर सोचेका कुरा सबै पूरा गर्न अनेकौं बाधा व्यवधान छन्। यो समस्या मेरो मात्रै नभई देशैभरिका पालिकाको हो। तर म युवा रहेका कारण मसँग अन्यभन्दा बढी अपेक्षा हुनु स्वाभाविक हो। यी अपेक्षालाई प्राथमिकताका आधारमा सम्बोधन गर्दै अगाडि बढ्नु ठूलो अवसर रहेको मलाई ज्ञात छ।

# ०८४ को पर्खाइमा धेरै युवा

**संघ सरकारले दिएको अनुदान विकास निर्माणलाई पर्याप्त छैन, सहरको तुलनामा गाउँमा राजस्व संकलन पनि न्यून छ**

वशिष्ठकुमार गुप्ता
अध्यक्ष, कालिकामाई गाउँपालिका, पर्सा, जसपा

परिवार नै राजनीतिमा संलग्न रहेकाले कम उमेर भए पनि मलाई राजनीतिमा आउन सजिलो भयो। परिवार सामाजिक काममा जुटेको सानैदेखि देख्दै आएको हो। सोही कारण समाजका लागि केही गर्नुपर्छ भन्ने मानसिकता थियो।

२०७९ को स्थानीय तह निर्वाचनमा प्रतिस्पर्धा गर्ने तय भएपछि गाउँपालिकाका युवा उत्साहित भएका थिए। परिवर्तन हुन्छ भन्ने आशाका साथ उनीहरूले साथ दिएका थिए। चुनाव जितेर अध्यक्ष भएपछि पालिकामा विभिन्न समस्या देखिए। फरक तरिकाले पालिका चल्दो रहेछ। शिक्षा र स्वास्थ्यमा धेरै समस्या छन्। भौतिक पूर्वाधार निर्माणका लागि बजेट अपुग छ।

५ वर्षे कार्यकालको आधाभन्दा बढी अवधिमा आफू जुन उद्देश्यका साथ अध्यक्ष भएको थिएँ, त्यसको ५० प्रतिशत काम गर्न सकेको विश्वास छ। बजेट अपुग भए पनि विद्यालयको पूर्वाधार निर्माणमा प्राथमिकताका साथ लागेका छौं। पालिकाका १२ सामुदायिक विद्यालयमध्ये चार माध्यमिकस्तरमा सञ्चालनमा छन्। माध्यमिक तहको विद्यालय सञ्चालनका लागि सरकारले अनुमति त दिएको छ। तर, शिक्षकको दरबन्दी थपेको छैन। गाउँपालिका बोर्डको निर्णयले शिक्षकको व्यवस्थापन गरेका छौं। आन्तरिक स्रोतबाट तलब तथा सेवा सुविधा मिलाएका छौं। भवनसमेत निर्माण गर्‍यौं। हालसम्ममा ९ विद्यालयको पूर्वाधारको समस्या समाधान भएको छ। बाँकी विद्यालयमा पनि पूर्वाधार निर्माण प्रक्रियामै छ।

सरकारले नै निर्धारण गरेर स्वास्थ्य क्षेत्रमा बजेट पठाउने गरेको छ। दरबन्दी नभएका स्वास्थ्य चौकी र बर्थिङ सेन्टरमा दरबन्दी थपेका छौं। औषधि अभाव हुन दिइएको छैन। जनतालाई नियमित सेवा पाउने व्यवस्था मिलाइएको छ। काम नगर्ने स्वास्थ्यकर्मीमाथि निगरानी बढाएका छौं। प्रदेश सरकारले निर्माण गरेको जनस्वास्थ्य प्रयोगशालामा केही मेसिन तथा उपकरण पालिकाले समेत थपेको छ। पालिकामा दुई बर्थिङ सेन्टर सञ्चालनमा छन्। एउटालाई अत्याधुनिक बनाउँदै छौं।

शिक्षा स्थानीय तहमा आउँदा अनेक विकृति देखिएको छ। गाउँपालिकाले दरबन्दी कायम गरी भर्ना गर्ने समयमा धेरैतिरबाट आफ्नो मान्छे राख्न दबाब आउने गरेको छ। नपढाउने र समयमा नआउने शिक्षक सरुवा गर्दा पनि राजनीतिक दबाब आउने गरेको छ। बाहिरबाटै शिक्षक आए भर्ना प्रक्रियामा हुने राजनीतिक दबाब हट्थ्यो। शिक्षा जसरी स्थानीय तहमातहत राखिएको छ, त्यसरी नै दरबन्दीसमेत पठाउनुपर्‍यो। बजेट व्यवस्था गर्न सक्नुपर्‍यो।

पालिकास्तरमै एमबीबीएस डाक्टरको व्यवस्था सरकारले गर्न सक्नुपर्छ। बीचमा प्रदेश सरकारले निर्णय गरेको थियो। तर, कार्यान्वयन हुन सकेन। अहेब रहेको स्वास्थ्य चौकीमा बिरामीले राम्रो उपचार पाउन सकेका छैनन्। स्वास्थ्य चौकी निर्माणका लागि पालिकाको बजेटले पर्याप्त हुँदैन। केन्द्रमा माग गर्छौं।

युवालाई विभिन्न सीपमूलक तालिम तथा प्रशिक्षण उपलब्ध गराएका छौं। वैदेशिक रोजगारमा जाने युवाले केही सीप सिकेर जाऊन् भन्ने उद्देश्य राखेका छौं। गाउँपालिकामा पनि कुनै रोजगारीका लागि 'भ्याकेन्सी' निस्किँदा यहाँकै युवालाई प्राथमिकतामा राख्ने गरेका छौं। इलेक्ट्रिसियन, प्लम्बर, राजमिस्त्रीलाई प्राविधिक ज्ञान दिएका छौं। गाउँघरकै व्यक्तिलाई साथमा लिई विकास गर्ने सोच छ।

राजनीतिक द्वन्द्वले पालिकामा योजनाबद्ध काम गर्ने वातावरण छैन। युवा भएकाले होला, धेरै पुराना नेताबाट सहयोग पाउन सकेको छैन। 'खुद्रा' कामका लागि बढी झमेला हुने गरेको छ। नाला किन बनेन ? सडक किन ढलान भएन ? भवन किन ढिला निर्माण हुँदै छ भन्ने विषयमा कहिले छलफल हुन्न। विरोधका लागि विरोध गर्ने परिपाटी भयो। काम भाँड्ने योजनाले विरोध हुने गरेको छ।

बोर्डमा बहुमत नभएकाले गाउँ परिषद्समेत समयमा हुन नदिने षड्यन्त्र हुँदै आएको छ। जसले मूल्यांकनमा गाउँपालिकाको कम नम्बर आउने गरेको छ। यसपालि पनि समयमै परिषद्का लागि पत्राचार गरेको थिएँ। स्थानीय सरकार सञ्चालन ऐनबमोजिम असार १० सम्म नीति कार्यक्रम तथा बजेट गाउँसभामा पेस गरिसक्नुपर्ने व्यवस्था छ। उपमेयरले निर्धारित समयमा नीति तथा कार्यक्रम नै पेस गर्नुभएन।

निर्धारित समयभन्दा झन्डै दुई महिनापछि चालु आर्थिक वर्षको गाउँसभा भयो। त्यसमा पनि दुई पटक सभामै माइन्युट च्यातियो। गाउँसभा असफल गर्ने योजना थियो। प्रहरी प्रशासनको सहयोगमा अन्त्यमा परिषद् सफल भयो। माइन्युट च्यात्नेमाथि कारबाहीका लागि निवेदन दिए पनि कारबाही भएन।

कालिकामाईमा ५ वडा छन्। विकास निर्माणलाई बजेट पर्याप्त छैन। संघ सरकारले उपलब्ध गराएको अनुदानले सबै वडामा विकास गर्ने अवस्था छैन। करिब डेढ करोड रुपैयाँ शिक्षकको तलबमै जाने गरेको छ। सरकारले निर्धारण गरेको औषधि किन्नैपर्‍यो। प्रत्येक वडामा बराबर बजेट बाँडेका छौं। शिक्षा, स्वास्थ्य, कृषि, बालविकासलगायत क्षेत्र वडास्तरबाटै हेर्दै छौं।

सहरको तुलनामा गाउँमा राजस्व संकलन न्यून छ। कर दाखिला गर्नुपर्छ भन्ने मानसिकता विकास भएको छैन। ३/४ सय कर दाखिलाका लागि पनि छुट गरिदिन सिफारिस आउने गरेको छ। मालपोत करले एक आर्थिक वर्षमा मुस्किलले ४/५ लाख रुपैयाँ संकलन हुने गरेको छ। यहाँ राजस्व संकलनको मुख्य आधार पोखरी हुन्। बोलपत्र आह्वान गरेर पालिकाले माछा पालनका लागि पोखरी ठेक्कामा लगाउने गरेको छ। तर, ठेक्का सकार गर्ने ठेकेदारले कबुल गरेको रकम नदिने प्रवृत्ति छ। अघिल्ला जनप्रतिनिधिकै पालामा ठेक्कामा लगाइएका पोखरीको राजस्व दाखिला भएको छैन। करिब ७० लाख रुपैयाँ बक्यौता छ। समयमै ठेकेदारले राजस्व बुझाए प्रत्येक आर्थिक वर्षमा करिब ४० लाख रुपैयाँ पालिकालाई आम्दानी हुने देखिन्छ।

पढेलेखेका युवा राजनीतिमा आउनुपर्छ। युवामा केही नयाँ गर्ने सोच हुन्छ। उदाहरणका लागि काठमाडौं महानगरका मेयर बालेन शाह देशमा मात्र नभई विदेशमा पनि त्यतिकै चर्चित छन्। बिनापार्टी एक्लैले परिवर्तन ल्याएका छन्। धेरै युवा प्रोत्साहित भएका छन्। आगामी चुनावमा अझ युवा प्रतिस्पर्धामा आउने सम्भावना बढेको छ।









# NEPAL'S LARGEST MANUFACTURER OF WIRES CABLES CONDUCTORS



## POWER TRANSMISSION AND DISTRIBUTION

### ACSR CONDUCTORS



- **Size:** 20 SQMM - 500 SQMM
- **Voltage Grade:** 11 KV - 400 KV

### ABC CABLES



- **Size:** 2C X 10 SQMM - 1CX185 SQMM
- **Voltage Grade:** 1100 V

### MEDIUM VOLTAGE XLPE COVERED CONDUCTORS



First of its kind in Nepal
- **Size:** 55 SQMM - 240 SQMM
- **Voltage Grade:** 11 KV - 33 KV

## COMMERCIAL AND INDUSTRIAL WIRING

### LV POWER CABLES



- **Type:** Copper and aluminium Armoured & Unarmoured
- **Insulation:** PVC/XLPE/HR PVC /Zero Halogen
- **Size:** 1.5 SQMM - 1000 SQMM
- **Voltage:** Up to 1.1 KV

### CONTROL CABLES



- **Type:** Copper | Armoured & Unarmoured
- **Single core to 37 cores**
- **Insulation:** PVC/XLPE/HR PVC/Zero Halogen
- **Size:** 1.5 SQMM - 4 SQMM
- **Voltage:** Upto 1.1 KV

### SUBMERSIBLE CABLES



- **Size:** 1.5 SQMM - 4 SQMM
- **Voltage Grade:** Upto 1.1 KV

## RESIDENTIAL WIRING

### ECOWIRE-ZH




(Nepal's only wire with zero halogen)
- **Size:** 0.5 SQMM - 16 SQMM
- **Voltage Grade:** 1100 V

### FRLS FIRE RETARDANT LOW SMOKE




- **Size:** 0.5 SQMM - 16 SQMM
- **Voltage Grade:** 1100 V

### FR FIRE RETARDANT



- **Size:** 0.5 SQMM - 16 SQMM
- **Voltage Grade:** 1100 V

### CONCENTRIC CABLES



- **Size:** 4 SQMM - 25 SQMM
- **Voltage Grade:** Upto 1100 V

### FLEXIBLE TWIN TWISTED CABLES



- **Size:** 0.25 SQMM - 0.5 SQMM
- **Voltage Grade:** 750 V

## INDUSTRIAL ELECTRICAL USES

### ENAMEL WINDING WIRES



- **Size:** 9 SWG - 36 SWG

### PAPER INSULATED COPPER STRIPS



- **Size:** 2 MM - 4 MM (Thickness) 6 MM - 12 MM (Width)

### ANNEALED BARE COPPER WIRES



- **Size:** 8 SWG - 18 SWG (4.064 mm - 1.219 mm)
- **Packaging:** Plastic or Wooden Reels

LITMUS INDUSTRIES LIMITED

NS QUALITY AWARD WINNER

47+ YEARS INDUSTRY EXPERIENCE | 500+ EMPLOYEE STRENGTH | ADVANCED GERMAN TECHNOLOGY

2 PLANTS STATE-OF-ART FACILITIES | STRONG DISTRIBUTION | 72000+ KMPA PRODUCTION CAPACITY

9801914455
litmus@rameshcorp.com
www.litmus.com.np



# नेटवर्किङमा सक्रियता : सफल उद्यमशीलता

युवाको प्रमुख चुनौती भनेकै छिटो नतिजा खोज्ने प्रवृत्ति हो, तर युवावस्था धेरै सीप र क्षमता विकास गर्ने समय पनि हो

अनुपमा संग्रौला
चार्टर्ड एकाउन्टेन्ट,
सहसंस्थापक, ब्राइट एकेडेमी

नेपालमा उद्यमशीलताको संस्कृति विस्तारै फस्टाउँदै छ। तर नयाँ व्यवसाय थाल्दा सबै कुरा सहज हुँदैन- कहिले अप्ठ्यारा परिस्थिति आउँछन्, कहिले सही टिम खोज्न गाह्रो हुन्छ, कहिले लगानी जुटाउन चुनौती हुन्छ। तर, एउटा कुरामा शंका छैन- नेपालमा सम्भावना अनगिन्ती छन्। सही योजना, धैर्य र निरन्तर प्रयास गर्न सकियो भने यहाँ उद्यमशीलताका उत्कृष्ट अवसर सिर्जना गर्न सकिन्छ।

मैले यही सोचका साथ आफ्नै व्यवसाय यात्रा सुरु गरें। सीए पास गरेर करिअर अघि बढाउँदा म सधैं वित्तीय व्यवस्थापन, व्यवसाय सञ्चालन र उद्यमशीलताको सम्भावनाबारे जिज्ञासु थिएँ। यही रुचिले मलाई अडिट फर्मको जागिरबाट आफ्नै स्टार्टअपतर्फ मोड्यो, जहाँ मैले अवसर खोज्न मात्र होइन, आफैं अवसर सिर्जना गर्न थालें।

मैले सीए उत्तीर्ण गरेको ६ वर्ष भयो। सीए सकिएपछि मैले दिल्लीमै ३ वर्ष इन्टर्नसिप गरें। त्यसपछि नेपाल फर्केर डेढ वर्ष अडिट फर्ममा काम गरें। तर, कोभिडका कारण काम रोकियो। त्यसपछि श्रीमान्सँग मिलेर 'हाम्रो एकेडेमी' स्टार्टअपमा सीओओका रूपमा काम गरें। अहिले भने मैले 'ब्राइट एकेडेमी' सञ्चालन गरिरहेकी छु जहाँ एसीसीए पढाइ हुन्छ। 'एएस ट्रेनिङ्स'मार्फत अकाउन्टिङ, कर प्रणाली (ट्याक्सेसन) लगायत विषयमा व्यावहारिक ज्ञान दिने तरिकाले तालिम दिइरहेकी छु।

वित्तीय साक्षरताको अभावलाई ध्यानमा राख्दै सामाजिक सञ्जालमार्फत सबैले बुझ्ने भाषामा आर्थिक विषयका जटिल कुरा बुझाउने प्रयास गरिरहेकी छु। भिडियो कन्टेन्टमार्फत मानिसलाई कर प्रणाली, अकाउन्टिङ, वित्तीय योजना जस्ता विषयमा सचेत गराइरहेकी छु। श्रीमान्को स्टार्टअप यात्राको कुराकानी सुनेर म पनि व्यवसायतर्फ आकर्षित भएकी हुँ।

उद्यमशीलताको सुरुवातमा टिम निकै महत्त्वपूर्ण हुँदो रहेछ। हामीले व्यवसाय सुरु गर्दा टिम राम्रो भएकाले धेरै चुनौती सजिलै पार गर्‍यौं। व्यवसायमा टेक्निकल समस्या आउँदा हामी आफैं सिक्दै अगाडि बढ्यौं। जस्तै एकेडेमी सञ्चालन गर्दा, सीएहरूसँग काम गर्नुपर्थ्यो। तर उहाँहरूको समय मिल्नै गर्न गाह्रो हुन्थ्यो। अनलाइन कक्षा राति बसेर लिने अवस्था पनि आयो। तर, टिम एकजुट भएर काम गर्दा समस्या समाधान गर्न पनि सहज भयो।

ब्राइट एकेडेमी सुरु भएको एक वर्ष पूरा भयो। यसमा मलाई सीएको पढाइले धेरै सघाएको छ। वित्तीय व्यवस्थापनदेखि व्यवस्थापकीय सीपसम्म सिकाएकाले उद्यमशीलता यात्रा कठिन भएको छैन। सामाजिक सञ्जालमा कन्टेन्ट बनाउने गरेकाले पनि यसले व्यवसायमा सहयोग गरेको छ। मैले सामाजिक सञ्जालमा सीए पढ्दाका अनुभव सेयर गर्दा अन्य धेरै जिज्ञासा आउन थाले। त्यसपछि मैले आर्थिक विषयमा कन्टेन्ट बनाउन सुरु गरें।



मेरो पहिलो भिडियो रेस्टुराँले लिने अतिरिक्त भ्याटका विषयमा थियो। यो भिडियो नै मिलियन भ्युज पुग्यो। आज यस्तो कामले मेरो व्यवसायमा राम्रो प्रभाव पारेको छ। मेरा कन्टेन्ट हेरेर एसीसीए इनरोल गर्ने र तालिम लिन चाहने धेरै विद्यार्थी आएका छन्।

नेपालमा कुनै पनि समस्याको समाधान खोजेर स्टार्टअप सुरु गर्न सकिन्छ। समस्या समाधान गर्ने, दैनिक जीवनलाई सहज बनाउने जुनै पनि सर्भिस दिने र प्रडक्ट छ भने सफलताको सम्भावना उच्च छ। हाम्रो देशमा विकासको अभाव भएकाले समस्या धेरै छन्, जसको समाधान खोज्दै व्यवसाय सञ्चालन गर्न सकिन्छ। उद्यमशीलता गर्दा मुख्य कुरा 'मेरो उत्पादन वा सेवा बिक्री हुन्छ कि हुँदैन ?' भन्ने बुझ्न जरुरी छ। व्यापारका लागि के-कसरी बेच्नेभन्दा पहिले ग्राहकको माग बुझ्नुपर्छ। उनीहरूको आवश्यकतालाई सम्बोधन गर्ने व्यवसाय टिक्छ।

नेपालमा उद्यमशीलताको अर्को चुनौती भनेको टिम टिकाउनु रहेछ। स्टार्टअपमा कर्मचारीहरूको टर्नओभर उच्च छ। धेरैजसो इन्टर्न विदेश जाने तयारीमा हुन्छन्, जसले दीर्घकालीन टिम बनाउन गाह्रो बनाउँछ। तर युवामा धैर्य र निरन्तर प्रयास गर्ने बानीको आवश्यकता छ। जागिर होस् वा उद्यम धैर्य आवश्यक छ।

कुनै पनि यात्रा सुरु गर्नु छ भने सुरुवात गरिहाल्नुपर्छ, धेरैले तयारी गर्दागर्दै समय बिताइदिन्छन्। सुरुमा परिपूर्ण नभए पनि निरन्तर सुधार गर्दै अघि बढ्नुपर्छ। 'कन्टेन्ट क्रिएसन' नै गर्दा पनि विस्तृत अनुसन्धान गर्नुपर्छ, ताकि कन्टेन्ट विश्वसनीय र उपयोगी होस्। जति अनुसन्धान गर्‍यो, त्यति नै राम्रो कन्टेन्ट उत्पादन गर्न सकिन्छ।

नेपालमा स्टार्टअप कल्चर पनि तीव्र रूपमा बढ्दै छ। डिजिटल युगमा व्यवसाय गर्न सजिलो पनि भएको छ। पहिला शारीरिक रूपमा गर्नुपर्ने काम अहिले अनलाइनबाटै गर्न सकिन्छ। अफिस खोल्नैपर्ने बाध्यता थियो, अहिले छैन। कम लागतमा सुरु गर्न सकिने अवसर प्रशस्त छन्।

आजको प्रतिस्पर्धी बजारमा केवल राम्रो सेवा वा उत्पादन भएर पुग्दैन। तपाईंको पहिचान, विश्वसनीयता र प्रभाव पनि उत्तिकै महत्त्वपूर्ण छ। पर्सनल ब्रान्डिङ भनेको तपाईंको ज्ञान, सीप र अनुभवलाई प्रभावकारी रूपमा प्रस्तुत गर्ने कला हो, जसले तपाईंलाई अरूभन्दा अलग बनाउँछ। जब तपाईं आफ्नो क्षेत्रमा विशेषज्ञका रूपमा चिनिनुहुन्छ, ग्राहकहरू स्वतः तपाईंलाई विश्वास गर्न थाल्छन्। व्यवसाय मात्र होइन, अवसर पनि तपाईंलाई खोज्न आउँछ। त्यसैले व्यक्तिगत ब्रान्डिङ डिजिटल युगमा सफलताको एउटा प्रमुख रणनीति हो।

अहिले धेरै युवा निराश छन्, जसको मुख्य कारण देशको अर्थतन्त्र हो। नेपालमा बाहिरका देशसँग तुलना गर्दा राम्रो पेआउट छैन, जसले गर्दा चाँडै नैराश्य जन्मिन सक्छ। धेरैलाई लाग्छ, बाहिर गएर मात्र राम्रो भविष्य सम्भव छ। आफ्नो कामको राम्रो मूल्यांकन विदेशमा छ भन्ने लाग्दा विदेश जानु नराम्रो होइन। तर बाहिर बसेर पनि नेपालका लागि योगदान दिन सकिन्छ भन्ने बुझ्नु आवश्यक छ।

युवाको प्रमुख चुनौती भनेकै छिटो नतिजा खोज्ने प्रवृत्ति हो। तर युवावस्था भनेकै धेरै सीप र क्षमता विकास गर्ने समय पनि हो। धेरै सिक्ने, अनुभव लिने, विभिन्न स्रोतबाट ज्ञान आर्जन गर्ने बानी बसाल्नु आवश्यक छ। धैर्य राख्ने र तुरुन्तै सफलताको अपेक्षा गर्नुभन्दा कामबाट प्रमाणित गर्ने सोच राख्नु उपयुक्त हुन्छ।

सशक्त नेटवर्क बनाउने अनि राम्रो सर्कल बनाएर अवसर पहिल्याउने बानी बसाल्नुपर्छ। नेटवर्किङ निकै आवश्यक छ। नियमित र निरन्तरता एकैचोटि ठूलो उपलब्धि होइन, तर निरन्तर सुधारमुखी प्रयास नै सफलताको चाबी हो। नेपालमा व्यवसायका धेरै अवसर छन्। मुख्य कुरा भनेको देश र समाजलाई के चाहिन्छ भनेर बुझेर, समाधानमुखी व्यवसाय सञ्चालन गर्नु हो। धैर्य, मिहिनेत र सही टिमको साथ अघि बढ्दा सफलता सम्भव छ।

# पूर्वाधार अघिअघि, पर्यटक पछिपछि

क्रिस्चियनहरूका लागि 'भ्याटिकन', इस्लामका लागि 'मक्का' र हिन्दुका लागि चारधाम मुख्य मानिन्छन्, बौद्ध धर्मावलम्बीका लागि लुम्बिनीलाई त्यस्तै धाम बनाउन सकिन्छ

अक्षय गोल्यान
प्रबन्ध निर्देशक, गोल्यान ग्रुप

पर्यटन प्रवर्द्धनमार्फत प्रचुर लाभ लिने सम्भावना बोकेको मुलुकका रूपमा नेपाललाई चिनिन्छ। पछिल्लो समय नेपालमा पर्यटन पूर्वाधार थपिने क्रम बढिरहेको छ। पूर्वाधार थपिँदा मुलुकको पर्यटनमार्फत आर्थिक समृद्धिको सम्भावना बलियो हुन्छ।

कोभिड महामारीपछि नेपालमा पर्यटक घटे। नेपाल भित्रने जोकोहीमा कोभिड संक्रमण भए-नभएको पत्ता लगाउन सरकारले पीसीआर परीक्षण अनिवार्य गरेको थियो। त्यसैले पनि कोभिडका बेला कम पर्यटक नेपाल भित्रिए।

सन् २०२४ मा ११ लाख ४७ हजार ५६७ पर्यटक नेपाल भित्रिएका थिए। उक्त तथ्यांकले पर्यटकको आगमन सन् २०१९ तिर नै फर्केको देखाएको छ। सन् २०२५ मा पर्यटकको आगमन गत वर्षको तुलनामा १२ प्रतिशतसम्म वृद्धि हुने अनुमान छ।

पर्यटकको आगमन संख्या अन्तर्राष्ट्रिय विमानस्थलमै भर पर्छ। निर्माण तथा स्तरोन्नतिका लागि भन्दै त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल कहिले १२ घण्टा त कहिले १० घण्टा बन्द भइरहेको छ। विमानस्थल पूर्ण रूपमा सञ्चालन नहुँदा पर्यटक आवागमन प्रभावित बनेको छ। त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल २४ घण्टा वा २० घण्टा खुला हुँदा जहाजको उडान र पर्यटकको संख्या बढी हुन्छ। छिटफुट उडान भए पनि गौतम बुद्ध अन्तर्राष्ट्रिय विमानस्थल र पोखरा अन्तर्राष्ट्रिय विमानस्थल पूर्ण सञ्चालनमा आउन सकेका छैनन्।

नेपालको पर्यटन क्षेत्रलाई चलायमान बनाउन हवाई र सडक पूर्वाधारको अभाव छ। पूर्वाधार पर्याप्त नहुँदा पर्यटन प्रवर्द्धनको प्रचुर सम्भावना भए पनि नेपालले अपेक्षित लाभ लिन सकेको छैन। नेपालमा मुख्य समस्या हवाई र सडक पूर्वाधारकै हो। हवाई पूर्वाधार निर्माण भए पनि सञ्चालनमा आउन सकेका छैनन्। सडक पूर्वाधारको अवस्था उस्तै छ। निर्माणाधीन सडक अस्तव्यस्त छन्। निर्माण अवधि लम्बिँदै जाँदा घुम्न आएका पर्यटकले विभिन्न सास्ती भोग्नुपरिरहेको छ।

नेपाल आउने पर्यटक काठमाडौंमै अवतरण गर्न बाध्य छन्। पोखरा, सगरमाथा, अन्नपूर्ण, जोमसोमलगायत क्षेत्रमा हेलिकोप्टरमार्फत जान महँगो हुन्छ। तर सडक पूर्वाधार पनि राम्रो छैन। पछिल्लो समय हवाई यातायातमा समेत 'फ्लाइट सेफ्टी' राम्रो छैन। पर्यटक डराइरहेका छन्। हवाई र सडक पूर्वाधार राम्रो हुने हो भने पर्यटकको आगमन बढ्ने र पर्यटन क्षेत्र राम्रो हुनेछ।

पर्यटन क्षेत्रलाई आक्रामक रूपमा बढाउन हवाई तथा सडक पूर्वाधार निर्माण तथा स्तरोन्नतिमा सरकारले जोड दिनुपर्छ। विमानस्थल र त्यसका सेवालाई अझै चुस्त बनाउन जरुरी छ। पहिला हेरेर अहिले 'ब्यागेज क्लेम' मा सुधार गरेको छ। त्यसरी नै 'इमिग्रेसन' मा हुने लामो लाइनलाई व्यवस्थित बनाउनुपर्नेछ।

घुम्न आएका पर्यटकले आफ्नो देश फर्केपछि नेपालमा घुमेका ठाउँ तथा देखेका कुरा सुनाउँछन्। त्यसपछि उनीहरूका समूह घुम्न आउन लालायित हुन्छन्, आउँछन्। विदेशी पर्यटकको आवागमन बढाउन सकिन्छ। तर नेपालबारे सुनाउन केही भेट्दैनन्। र, विमानस्थलदेखि नै भोगेका सास्ती सुनाउँछन्। नेपाल आउने मनस्थिति बनाएकाहरू पनि जाने कि नजाने सोच्न बाध्य हुन्छन्। त्यसकारण हामीले पूर्वाधारमा विशेष जोड दिनुपर्नेछ।



काठमाडौं उपत्यकामा अहिले अन्तर्राष्ट्रिय ब्रान्डका होटल आइसकेका छन्। चितवनमा वन्यजन्तु पर्यटन (वाइल्ड लाइफ टुरिजम) का लागि ४/५ वटा होटल छन्। बर्दियालगायत राष्ट्रिय निकुञ्जभित्र भने होटल बन्न सकेका छैनन्। पर्यटनभित्र 'वाइल्ड लाइफ टुरिजम' अर्को अवसर हो। वन्यजन्तुको संख्या राम्रो भएकाले अफ्रिकामा पर्यटन प्रवाह राम्रो छ। पर्यटनका लागि बाघको संख्या भारत र नेपालमा धेरै छ। यसलाई अझै बढाउन सकिन्छ। भारतको कर्बेट बाघ आरक्ष र रणथम्बोर राष्ट्रिय निकुञ्जभित्र धेरै विलासी होटल तथा क्याम्प सञ्चालनमा छन्। अमेरिका, युरोपदेखि चिनियाँ मुलुकका पर्यटकको आगमन बढ्दो छ। तर नेपालमा शून्य छ। वन्यजन्तु पर्यटनबारे हामी सबैले सोच्नुपर्नेछ। यसमा हामीले योजना बनाएर काम गरिरहेका छौं।

नेपाल धार्मिक पर्यटनका लागि प्रचुर सम्भावना बोकेको मुलुक हो। धार्मिक विविधता र संस्कृति प्रवर्द्धनमार्फत पर्यटकको आवागमन बढाउने अवसर प्रशस्त छन्। अहिले भारतमा भइरहेको कुम्भमेलाले विश्वकै रेकर्ड तोडेको छ।

हामीसँग भगवान् शिवको आराधनाका लागि पशुपतिनाथ छ। पशुपतिनाथ मन्दिर प्राचीन धार्मिकस्थल भएकाले पूजास्थल, मठमन्दिर र मूर्ति तथा अभिलेखको खुला संग्रहालय हो। शैव, शाक्त, वैष्णव, बौद्ध, जैन, सौर, गाणपत, नाथ, सिखलगायत प्रमुख सम्प्रदायका भक्तजनका लागि आस्था एवं श्रद्धाको केन्द्र हो। जहाँ गए पनि पशुपतिनाथको दर्शन नगरेसम्म चारधाम पूरा हुँदैन। त्यसकारण पनि हामीले यस क्षेत्रको थप प्रचार र प्रवर्द्धन गरी विभिन्न मेला-महोत्सव आयोजना गरेर विदेशी पर्यटक भित्र्याउन सकिन्छ।

भारतको महाकुम्भ मेलामा विश्व समुदायको नजर परिरहेको छ। त्यसरी नै पशुपति क्षेत्रलाई चलायमान बनाउन सक्नुपर्छ। शान्तिका नायक गौतम बुद्ध जन्मेको ठाउँ लुम्बिनीमा समेत पर्यटकीय आकर्षण बढाउन सकिन्छ। यहाँ हिन्दु र बौद्ध धर्मावलम्बीको आकर्षण बढाउने गरी काम गर्न सकिन्छ।

बौद्ध शिक्षा र धर्मको महत्त्वलाई फैलाएर लुम्बिनी क्षेत्रको प्रवर्द्धन गर्न सके विभिन्न मुलुकका हिन्दु तथा बौद्ध धर्मावलम्बी नेपाल भित्रिनेछन्। भुटान र तिब्बतका नागरिक बौद्ध धर्मबारे अध्ययन गर्न लुम्बिनी आइरहेका छन्। धार्मिक पर्यटनका माध्यमबाट मुलुकले ठूलो लाभ लिन सक्नेछ। माता सीताको जन्मभूमिका रूपमा विश्वप्रसिद्ध जनकपुरधाम नेपालमै छ। भारतमा अयोध्याधाममार्फत धार्मिक पर्यटनको विकास गरिए जसरी जनकपुरधामको प्रचारप्रसार र प्रवर्द्धनमार्फत पर्यटक भित्र्याउन सकिनेछ।

पछिल्लो समय भारतको अयोध्याधाममा धार्मिक पर्यटनको आकर्षण बढिरहेको छ। जनकपुरधाममा समेत धार्मिक पर्यटनको चहलपहल बढाउन ध्यान दिनुपर्छ। यी धार्मिकस्थललाई दृष्टिगत गरेर समयमै होटल तथा अन्य पूर्वाधारको विकास गर्न जरुरी छ।

क्रिस्चियनहरूका लागि 'भ्याटिकन', इस्लामका लागि 'मक्का' र हिन्दुका लागि चारधाम मुख्य मानिन्छन्। बौद्ध धर्मावलम्बीका लागि लुम्बिनीलाई त्यस्तै धाम बनाउन सकिन्छ। त्यसका लागि हामीले लुम्बिनीमा 'ह्यात रिजेन्सी' बनाइरहेका छौं। झन्डै ७ बिघा जग्गामा १७५ कोठाको लक्जरी रिसोर्ट बनाइरहेका छौं। रिजेन्सीको डिजाइन सकेर निर्माणको काम अर्को महिनादेखि सुरु हुनेछ। रिसोर्ट सञ्चालनमा आउन केही वर्ष लाग्छ। लुम्बिनीभित्र बौद्ध धर्मावलम्बीलाई लक्ष्य गरी होटल र पूर्वाधार निर्माणको काम गर्न निजी क्षेत्रले चासो दिइरहेको छ। यसमा सरकारले सहजीकरण गर्नुपर्छ।

पर्यटनमा नेपाल ट्रेकिङ गन्तव्यका रूपमा मात्रै परिचित छ। पर्यटनका अन्य आयामको त्यति प्रवर्द्धन हुन सकेको छैन। वन्यजन्तु पर्यटन, साहसिक पर्यटन, धार्मिक पर्यटकीय क्षेत्रलगायत विभिन्न आयाममार्फत पर्यटन प्रवर्द्धन हुन सकेको छैन। ट्रेकिङका आफ्नै चुनौती र अवसर छन्। यसमा पूर्वाधार र लजिस्टिकका चुनौती समाधान भए पर्यटक अझै बढ्छन्। ट्रेकिङका लागि मात्र नभई वाइल्ड लाइफ र धार्मिक पर्यटनको गन्तव्यका रूपमा समेत नेपाललाई प्रवर्द्धन गर्नुपर्छ। जुनसुकै मुलुकका नागरिक नेपालमा आएपछि कहाँ-कहाँ जान सकिन्छ? के-के अनुभव गर्न सकिन्छ? यस्ता खालको बजारीकरण सरकार र निजी क्षेत्रबाट हुन सकेको छैन।

मलेसिया, थाइल्यान्डलगायत मुलुकको पर्यटकीय गन्तव्यबारे जानकारी लिन गुगलमा हेर्ने हो भने सरकारी तथा निजी क्षेत्रबाटै सातै दिन वा १५ दिनमा कहाँ-कहाँ जान सकिन्छ? मुख्य गन्तव्य के हो? छुटाउनै नहुने के हो? सबै समेटेर 'आइटिनरी' बनाएको हुन्छ। अहिले सबै अनलाइनमार्फत पाइन्छ। त्यस्तो प्लाटफर्म सरकारले बनाउनुपर्नेछ। 'गुगल' मा नेपालको पर्यटकीय गन्तव्य खोज्दा ट्रेकिङ मात्र नभई वन्यजन्तु, धार्मिक, सांस्कृतिक, इतिहासलगायत क्षेत्र 'हाइलाइट' गर्न जरुरी छ। यसमा निजी क्षेत्र पनि जोडिन इच्छुक छ।

भूपरिवेष्टित देश भएकाले नेपालमा ऊर्जा र पर्यटनको अवसर छ। ऊर्जामा राम्रो काम भइरहेको छ। नेपालको पर्यटन क्षेत्र काठमाडौं, सगरमाथा र पोखरामा मात्र सीमित हुनुहुँदैन। देशभर पर्यटन क्षेत्रको विकास र सञ्चालनमा ल्याउन जरुरी छ। सरकारले पूर्वाधार निर्माणमा जोड दिनुपर्छ। अहिले स्थानीय पर्यटकको गन्तव्य पोखरा र चितवन बनेको छ। पोखरा र चितवनपछि अर्को गन्तव्य लुम्बिनी बनाउने हाम्रो प्रयास हो। यसमा सरकारले पनि आफ्नो भूमिका खेल्नुपर्छ।

अहिले हामीले लुम्बिनीमा एउटा रिसोर्ट मात्रै बनाउन लागेका छौं। भैरहवा अन्तर्राष्ट्रिय विमानस्थल पूर्ण रूपमा सञ्चालनमा आयो भने होटल तथा रिसोर्टको अभाव हुनेछ। त्यसकारण लुम्बिनीमा होटल पर्यटनको ठूलो सम्भावना छ। सरकारले निजी क्षेत्रलाई साथमा लिएर लुम्बिनीको पर्यटन प्रवर्द्धनका लागि पूर्वाधार विकासको काम गर्नु अहिलेको आवश्यकता हो।

# रैथाने उत्पादनका उज्याला दिन

**हाम्रो बेच्ने मूल्य निश्चित छ भने किन्ने मूल्य पनि निश्चित हुनुपर्छ, अनि मात्र किसानले प्रोत्साहन पाउँछन्, नेपालका रैथाने उत्पादनको आफ्नै विशिष्टता छ, तिनको बजारीकरण सरकारी तहबाटै हुनुपर्छ**





**प्रशान्त घिमिरे**
प्रवन्ध निर्देशक,
पहाडी फुड्स

कोभिडपछि नेपालमा रैथाने खानाको महत्त्व, त्यसबाट पाइने पोषणले सबैको ध्यान खिच्यो। सर्वसाधारणले पोषणका लागि रैथाने खानालाई दैनिकी बनाउन थाले। माग बढेपछि हुम्ला, जुम्लादेखि मनाङ, मुस्ताङसम्मका रैथाने उत्पादन काठमाडौं उपत्यकामा सहजै पाइन थाल्यो। तर कुनै एउटा कम्पनीले रैथाने उत्पादनलाई नै ब्रान्डका रूपमा अघि बढाएको भने थिएन।

पहिलाको कम्पनी छाड्दा नै ब्रान्डिङ, मार्केटिङ, बिक्री-वितरण राम्रो तरिकाले गर्न सक्छौ भन्ने विश्वास भइसकेको थियो। किसानका उत्पादनलाई प्रशोधन, वर्गीकरण र प्याकेजिङमार्फत मूल्य अभिवृद्धि गरेर एकल ब्रान्डका रूपमा स्थापित गर्ने काममा ठूलो 'ग्याप' थियो। सोही 'ग्याप' पूरा गर्न श्रीमती कामनासँग मिलेर सुरु गरेको 'पहाडी फुड्स' मा २५ जनाको समूह बनेको छ। गत वर्षको पुसदेखि औपचारिक बिक्री सुरु गरेका थियौं। उक्त वर्ष ४/५ करोड रुपैयाँको कारोबार गर्‍यौं। यस वर्ष कारोबार तीन गुणाले बढाउने लक्ष्य छ। पहाडी फुड्सको बजार काठमाडौं उपत्यकामै केन्द्रित छ। केही समय अघिदेखि बुटवल र भैरहवा क्षेत्रमा पनि बिक्रीवितरण सुरु गरेका छौं।

अन्य कम्पनीको वितरक छुट्टै हुन्छन्। कम्पनीले वितरकलाई सामान दिएपछि तिनै वितरकले खुद्रा पसलसम्म सामान पुर्‍याउँछन्। तर पहाडीका छुट्टै वितरक कम्पनी छैनन्। हामीसँग वितरकलाई दिने धेरै मार्जिन हुँदैन। कारोबारको रकम ठूलो देखिए पनि वितरकसँग सुरुमै कुनै किसिमको प्रतिबद्धता गर्न सक्दैनौं। त्यसकारण आफ्नै डिपो वा वेयरहाउस राखेर हामीले खुद्रा पसलमा पहाडीका उत्पादन पुर्‍याइरहेका छौं। अहिले पहाडीसँग ७ हजारभन्दा बढी खुद्रा पसल जोडिएका छन्।

हाम्रो उद्देश्य भनेकै किसानसँग मिलेर काम गर्ने हो। त्यसबाट रैथाने उत्पादन बढाउन सकिन्छ। गत वर्ष पोखराबाट मुरीको ६ हजार रुपैयाँ तिरेर जेठो बुढो चामल किन्यौं। जब कि त्यसबेला मुरीको ५५ सयमै किसानले बेचिरहेका थिए। जेठो बुढो चामलको माग बढेका कारण पोखरामा यसपालि उत्पादन दुई गुणा बढेको छ। चामलको माग पुर्‍याउन हामीलाई गाह्रो भइरहेको छ।

मूल्य स्थिर हुने र मागसमेत नघट्ने भए किसानले उत्पादन गर्नेमा दुई मत छैन। किसानको उत्पादन खेर जाने र घाटामा गएर बेच्नुपर्ने अवस्था भने आउनुभएन। अब किसानसँग खरिदफिर्ता सम्झौता गर्ने गरी अध्ययन गरिरहेका छौं। हामीलाई जेठो बुढो चामलको माग र कति चामल बेच्न सक्छौ भन्ने थाहा भइसक्यो। हाम्रो बेच्ने मूल्य निश्चित छ भने किन्ने मूल्य पनि निश्चित गर्नुपर्छ। लोप हुँदै गइरहेको जेठो बुढो धान जोगाउन सरकारी निकायसँग मिलेर बीउ बाँड्ने र सम्झौता गर्ने योजना छ।

मसुरो, कोदोलगायत रैथाने उत्पादन घट्दै गएका छन्। यस्ता उत्पादन जोगाउन र बढाउन सरकारका तर्फबाट केही पनि हुन सकेन। मानकीकरण, गुणस्तरलगायत काम सरकारले गर्नुपर्नेछ। विश्वको ९० प्रतिशत मखना भारतको विहारमा उत्पादन हुन्छ। भारत सरकारले आगामी आर्थिक वर्षको बजेटमार्फत 'मखना बोर्ड' नै स्थापना गर्‍यो। मखनाको उत्पादन, बजारीकरण, गुणस्तर, तालिमलगायत सम्बन्धित काम बोर्डले गर्ने भयो। गत वर्ष कोदोलाई त्यसरी अघि बढाएको थियो। नेपालमा चिया तथा कफी विकास बोर्ड छ। तर सकारीभन्दा बढी निजी कम्पनीको छ। नेपाल सरकारले पनि कुनै एउटा वस्तु पहिचान गरेर त्यसरी नै प्रवर्द्धन गर्नुपर्छ। यो निजी कम्पनीको पहुँच र क्षमताभन्दा बाहिर हो। नेपालका रैथाने उत्पादनको आफ्नै विशिष्टता छ। त्यसको बजारीकरण सरकारी तहबाट हुनुपर्छ।

भातरमा बेसारको मूल्य फरक-फरक हुन्छ। बेसारको कर्क्युमिन भ्यालुअनुसार मूल्य तोकेको हुन्छ। ६ भन्दा माथि कर्क्युमिन भ्यालु भएको बेसार युरोपमा महँगोमा बिक्री हुन्छ। तर नेपालमा औसत मूल्यमा बेसार बिक्री हुन्छ। गुणस्तर वा ग्रेडिङअनुसार मूल्य तोक्ने प्रचलन छैन। नेपालमा दूधको मात्रै थाहा हुन्छ। किनकि किसानले दुधको फ्याटअनुसार मूल्य पाउँछन्। तर भारतमा दुधको मात्र होइन, हरेक वस्तुको ग्रेडिङ र गुणस्तरअनुसार किसानले मूल्य पाउँछन्। नेपालमा अलैचीदेखि अदुवासम्म सालाखालामा बेच्ने चलन छ। सरकारले किसानकै तहमा पुगेर आफ्ना उत्पादनको थप मूल्य पाउन ग्रेडिङ गर्नेलगायत जानकारी दिनुपर्‍यो। कृषि उत्पादनमा हाम्रो चुनौती र समस्या भनेकै होलसेल मूल्यमा बिक्रीवितरण गर्नु हो।

सरकारले निजी कम्पनीहरूसँग मिलेर नै काम गर्ने हो। त्यसो भन्दैमा एउटै निजी कम्पनीलाई लिएर मात्र काम गर्नुहुँदैन। अन्य निजी क्षेत्रलाई पनि प्रतिस्पर्धा गर्ने बाटो खुलाउन जरुरी छ। सरकारले बजार, उत्पादन, उत्पादकत्व हेर्नुपर्छ। त्यहीअनुसार किसानलाई पनि जागरुक गर्नुपर्छ। लमजुङमा कुनै बेला एक किसानले झिनुवा धान ३ मुरी फलाउँथे। अहिले शकर ४, राधा ४ जस्ता लगाएर ६ मुरी फलाएका छन्। शकर ४, राधा ४ चामल किलोको ८०/९० रुपैयाँमा बिक्री हुन्छ भने झिनुवाको चामल प्रतिकिलो ४ सय रुपैयाँमा बिक्री हुन्छ। यो कुरा सरकारले बुझ्नुपर्छ र किसानलाई पनि बुझाउन सक्नुपर्छ। जुन लोपोन्मुख छ, त्यसले मूल्य पाउँछ। किसानलाई पनि रैथाने उत्पादन गर्न/गराउन आकर्षित गराउन जरुरी छ।

जिल्लाअनुसार रैथाने उत्पादन फरक-फरक छन्। यस्ता उत्पादन संकलन गरेर ल्याइसकेपछि त्यसको गुणस्तर मापन गर्ने, ल्याब टेस्ट गर्ने, मानकीकरणका लागि एउटा सरकारी निकाय चाहिन्छ। त्यसबाट अहिले बेचिरहेको रैथाने उत्पादनको मूल्य अझै बढाउन सकिन्छ। पछिल्लो समय डल्ले खुर्सानीको उत्पादन बढेको छ। करेन्ट चाउचाउको फ्याक्ट्री लागेका केही वर्षपछि गुल्मी र पाल्पामा डल्ले खुर्सानीको उत्पादन हुन थालेको छ। त्यसअघि उत्पादनै हुँदैनथ्यो। तर कुनै सिजनमा उत्पादनले मूल्य पाउने र कुनै बेला नपाउने क्रम जारी छ। किसानलाई उत्पादन खेर जाँदैन, मूल्य पाउँछ भनेर ढुक्क हुने ठाउँ दिन जरुरी छ।

हामीले किसानसँग रैथाने उत्पादन किनेर मूल्य अभिवृद्धि गरेर बेचिरहेका छौं। यो व्यवसायलाई सही तरिकाले गरेको खण्डमा आगामी ५ वर्षमा १० गुणाले कारोबार बढ्छ। रैथाने उत्पादनहरूको माग बढ्दै गएकाले गम्भीर हुने हो भने धेरै समस्या समाधान हुन सक्छ। जस्तै गाउँ फर्क अभियान, कृषि क्रान्ति, आर्थिक छलाङ, रोजगारीको समस्या, आयात प्रतिस्थापनलगायत समस्याको समाधान हुनेछ। तर ध्यान दिएनौं भने हाम्रो अर्थतन्त्र अझै बिग्रनेछ।

भोलि खाडी मुलुकहरूले नेपाली लैजाँदैनौं भने के गर्ने? हाहाकार नै हुन्छ। रैथाने उत्पादनको प्रवर्द्धनमा जोकोही जोडिएका छन्। विभिन्न मुलुकबाट आयात गरेर नेपालको रैथाने बेचिरहेका छन्। ब्राडिन्ड एक पटक सामान बेच्नका लागि मात्रै होइन। लामो समयसम्मका लागि हो। ग्राहकले पनि वास्तविक रैथाने उत्पादन कुन हो भनेर चिन्न जरुरी छ?

पुराना रैथाने जातका चामल सकिँदै गएका छन्। मुलुकको स्थानीय उत्पादनलाई ब्रान्डिङ गरेर बेच्ने व्यवसायमा अहिले जो कोही आकर्षित हुनेछन्। नेपाल सकारले खरिदप्रक्रियालाई सम्बोधन गरेर नीतिहरू बनाउने काम गरिरहेका छन्। उत्पादन र उत्पादकत्व बढाउन संसारले नै काम गरिरहेको छ। परिमाणका आधारमा भारतसँग प्रतिस्पर्धा गर्न नेपालले सक्दैन।

चीन, भारत, श्रीलंका, बंगलादेशललगायत मुलुकका छिमेकी भएर नेपालले परिमाणमा उत्पादन बढाउँछु भन्नु शून्य व्यावसायिक नीति हो। नेपालको युनिक सेलिङ प्वाइन्ट (यूएसपी) के हो? त्यसलाई हेरेर योजना अघि बढाउने र काम गर्न जरुरी छ। जापानलगायत मुलुकमा चिप्लो मोटा चामल किनेर खान्छन्। त्यो अनदी चामल नेपालमा उत्पादन हुन्छ। अनदी चामल नेपालमा उत्पादन गरेर महँगोमा बेच्ने र हामीलाई मनपर्ने चामल किनेर ल्याउँदा राम्रो हुन्छ।

भारतमा राज्यअनुसार विश्वव्यापी जान सक्ने उत्पादन हेरेर योजना बनाइन्छ। भारतले विहारमा कालानमक चामल प्रवर्द्धन गर्‍यो। हरेक जिल्लाबाट एउटा चामल जुन विश्वमा पुग्न सक्छ, त्यसको पहिचान गरेर उसले प्रवर्द्धन गरिरहेको छ। नेपालको पनि त्यस्तै हुनुपर्छ। नेपालमा पकेट क्षेत्र, जोनलगायत छन्। तर बजेट सकाउन मात्रै यस्तो व्यवस्था गरिएको छ। वास्तविक रूपमा कार्यान्वयनमा आउन सकेको छैन।

# सूचना प्रविधिको चामत्कारिक छलाङ

## देशभित्रै नयाँ स्टार्टअपदेखि ठूला सफ्टवेयर कम्पनीले अन्तर्राष्ट्रियस्तरको सेवा दिइरहेका छन्, तर यस क्षेत्रको जटिल समस्या दक्ष जनशक्ति अभाव हो

प्रार्थना साख:
पूर्वअध्यक्ष,
नेपाल युवा उद्यमी मञ्च

पछिल्लो ५/६ वर्षमा स्टार्टअप र डिजिटल बिजिनेसको क्षेत्रमा धेरै फेरबदल आइसकेको छ। कृषि, वित्तीय, शिक्षा, यातायातलगायत क्षेत्रमा प्रविधिको प्रयोग गरी नवप्रवर्तनका प्रयास भएका छन्। हाम्रा सूचना प्रविधि कम्पनी लन्डन टेक विक, अमेरिकाका रोड शोहरूमा सहभागी हुन थालेका छन्। नेपालमा यो क्षेत्रले गरेको प्रगति देखेर विदेशमा रहेका नेपाली नै छक्क पर्ने स्थिति छ। तर पनि जति छिटो वा ठूलो स्तरमा रूपान्तरणमुखी काम हुनुपर्ने हो, त्योचाहिँ अझै हुन सकेको छैन। तर, पहल उत्साहप्रद छ।

जेनजी, जेन अल्फाजस्ता नयाँ पुस्ताले प्रविधिलाई आफ्नो जीवन सहज बनाउने मात्र नभएर उद्यमशीलताकै लागि पनि यसको प्रयोगबारे सोचिरहेको देखिन्छ। यो अझै व्यापक बन्दै गयो भने सूचना प्रविधि (आईटी) क्षेत्र थप विकसित हुनेछ। महिला पनि यो क्षेत्रमा सक्रिय छन्। सूचना प्रविधि कम्पनीहरूलाई अहिले सरकारले प्रोत्साहन गरेको छ। यसले सबैमा काम गर्ने, व्यवसाय विस्तार गर्ने हौसला थपेको छ। नेपालको सूचना प्रविधि क्षेत्र पछिल्लो केही वर्षमा उल्लेखनीय रूपमा अगाडि बढिरहेको छ। नीतिगत सुधारका लागि यस क्षेत्रका कम्पनीले पहिला निजीस्तरमा 'लबिइङ' गर्ने गरेका थिए भने अहिले हामी सामूहिक रूपमा बोल्न थालेका छौं। संगठित भएर आफ्ना माग राख्दा र काममार्फत नै आफूलाई पुष्टि गरेपछि सरकार यस क्षेत्रलाई लिएर सकारात्मक बनेको छ।

विशेषगरी साइबर सुरक्षासम्बन्धी कम्पनीहरूले नेपालमा साइबर सुरक्षासम्बन्धी कानुन निर्माणका लागि लामो समयदेखि सरकारलाई आग्रह गरिरहेका थिए। तर, छुट्टाछुट्टै आवाज उठाउँदा सरकारको ध्यानाकर्षण गराउन मुस्किल परिरहेको थियो। जब प्रविधि क्षेत्रका कम्पनी संगठित भई सामूहिक रूपमा आफ्नो माग राख्न थाले, सरकारले कुरा सुन्न थालेको छ। यसको प्रत्यक्ष परिणामस्वरूप, सूचना प्रविधि क्षेत्रका महत्त्वपूर्ण नीतिगत सुधार देखापर्न थालेका छन्। गत वर्ष मात्रै राष्ट्रिय साइबर सुरक्षा नीति बनेर लागू भयो।

दुई वर्षअघि नेपाल एसोसिएसन अफ सफ्टवेयर एन्ड आईटी सर्भिसेज कम्पनीज (नास-आईटी) गठन गरेर सूचना प्रविधिका क्षेत्रमा प्रत्यक्ष वैदेशिक लगानीमा रहेको थ्रेसहोल्ड हटाउन र विदेशमा शाखा कार्यालय खोल्न पाउनुपर्ने विषयमा सरकारसमक्ष माग राखिएको थियो। बजेटमार्फत सूचना प्रविधिमा वैदेशिक लगानीको न्यूनतम सीमा हटाइएको छ। अध्यादेशमार्फत सूचना प्रविधि सेवा निर्यात गर्ने उद्योगलाई तेस्रो मुलुकमा शाखा कार्यालय खोल्न दिने व्यवस्थाले यो क्षेत्रलाई प्रोत्साहन मिलेको छ। बजार विस्तारमा यसले सघाउनेछ। अब यो पारित भइदिए कानुन बन्थ्यो र त्यसपछि छिट्टै कार्यविधि आइदिए सहज हुने थियो।

हामीकहाँ राम्रा नीतिगत पहल घोषणा त हुन्छन्। तर, कार्यान्वयनसम्म नपुग्ने चलन छ। कति वा कस्ता कम्पनीले कतिसम्म लगानी विदेशमा लगेर शाखा कार्यालय खोल्न पाउँछन्, कहिलेबाट पाउँछन् भन्ने स्पष्ट पार्न निर्देशिका वा कार्यविधि चाहिन्छ। एक-दुई सफलताका कथा अनुभव नगरेसम्म हामी ढुक्क हुने अवस्था छैन। सरकारले कोटा प्रणालीमार्फत नै भए पनि विदेशमा विस्तारको ढोका खोलिदिए यो सूचना प्रविधि व्यवसायीहरूका लागि सकारात्मक कदम हुनेछ। नेपालमा आईटी क्षेत्रको तीव्र विकास भइरहेको छ। देशभित्रै नयाँ स्टार्टअपदेखि ठूला सफ्टवेयर कम्पनीले अन्तर्राष्ट्रियस्तरका सेवा दिइरहेका छन्। तर यस क्षेत्रले सामना गरिरहेका मुख्य चुनौतीमध्ये सबैभन्दा जटिल समस्या दक्ष जनशक्ति अभाव हो। सूचना प्रविधि क्षेत्रमा जति कामका अवसर बढ्दै छन्, योग्य जनशक्ति पाउन र टिकाइराख्न त्यति नै गाह्रो छ। अन्तर्राष्ट्रिय ग्राहकलाई सेवा दिनुपर्ने, गुणस्तर कायम राख्नुपर्ने, समयमै डेलिभरी गर्नुपर्नेजस्ता आवश्यकता पूरा गर्न कम्पनीहरूलाई कठिनाइ भइरहेको छ।




कतिपय अनुभवी तथा योग्य प्राविधिकहरूलाई 'अफोर्ड' गर्न नसक्ने अवस्था छ भने अधिकांशचाहिँ कम्पनीमा लामो समय टिक्दै नटिक्ने हुन्छन्। विश्व बजारमा प्रतिस्पर्धा गर्न सक्ने स्तरका प्रविधि विज्ञहरू कम्पनीमा आबद्ध भएर काम गर्नुभन्दा फ्रिलान्सिङ वा रिमोट वर्कमार्फत अन्तर्राष्ट्रिय कम्पनीहरूका लागि काम गर्न बढी रुचाउँछन्। अर्को थरी जनशक्तिको उद्देश्य नै विदेश जाने हुन्छ। नेपाली कम्पनीहरू त नयाँ जनशक्तिका लागि ट्रेनिङ सेन्टर वा प्रशिक्षण लिने ठाउँजस्ता भएका छन्। तालिम लियो, विदेश गयो, दक्ष जनशक्ति पलायन अर्थात् ब्रेन ड्रेनको समस्याले गर्दा सूचना प्रविधि कम्पनीहरूलाई हैरानी भएको छ। अब विदेशमा शाखा खोल्न पाउने कुरा छ, यसले कामको भार बढाउनेछ। कम्पनीहरूले पर्याप्त काम त पाउँछन् तर डेलिभरी दिन सकस पर्छ किनभने जनशक्ति कम छन्।

स्टार्टअप, महिला उद्यमशीलता वा जति पनि इन्नोभेसनका काम हुन्छन्, सबै काठमाडौं केन्द्रित भइरहेका छन्। काठमाडौंबाहिर जानेबित्तिकै ठूलो खाडल देखापर्छ। दुर्गम क्षेत्रमा बिजुली, इन्टरनेटजस्ता आधारभूत पूर्वाधारको अभाव भएकाले नवीनतम सोचमा आधारित र स्थानीय समस्या समाधान गर्ने स्टार्टअप र प्रविधिमा आधारित व्यवसाय जन्मिन पाएका छैनन्। डिजिटल पब्लिक इन्फ्रास्ट्रक्चर निर्माणमा सरकारले पनि ध्यान दिनुपर्छ। सूचना महामार्ग, प्रविधि पूर्वाधारको सहप्रयोगजस्ता विषय नीतिमै सीमित भएका छन्।

नीति निर्माण तहका कतिपयले सूचना प्रविधि क्षेत्रका कुरा बुझ्नु हुन्छ, सिक्ने प्रयास पनि गर्नु हुन्छ तर धेरैले आधारभूत विषयमा पनि जानकारी नराखी नियम/कानुन बनाउने गरेको देखिन्छ। हाम्रा लागि यो असाध्यै ठूलो र लामो समयसम्म असर पार्ने विषय हो। उदाहरणका लागि केही समयअघि मात्रै विद्युतीय व्यापार वा ई-कमर्ससम्बन्धी विधेयकबारे बोल्दा तत्कालीन उद्योगमन्त्री र राष्ट्रिय सभाका सांसदहरूले नै बिजुली व्यापारको कुरा गरे। यस्तो हालतले बनेको कानुन कस्तो होला भनेर चिन्ता लाग्नु स्वाभाविक हो।

अर्को चुनौती भनेको सरकारी निकायका सूचना प्रविधिसम्बन्धी परियोजनामा विदेशी भेन्डर खोज्ने प्रवृत्ति हो। यसले स्थानीय कम्पनीहरूलाई निरुत्साहित त गर्छ नै, सरकारलाई पनि पैसा विदेशिने, समयै मर्मतसम्भार सेवा नपाइने, नेपाली डेटा विदेशीको हातमा पुग्नेजस्ता जोखिम छन्। स्टार्टअप क्षेत्रमा चाहिँ सरकारले पर्याप्त प्रयत्न नगरेको महसुस हुन्छ। स्टार्टअपलाई प्रोत्साहन गर्ने, तिनमा लगानी गर्ने भन्ने घोषणा त हुन्छ तर त्यसको कार्यान्वयन प्रभावकारी छैन। यो क्षेत्रमा महिलालाई त झनै प्रोत्साहन गरिँदैन। एउटा बिजनेस असफल हुनासाथ व्यवसाय छाडेर जागिर खान दबाब आउँछ। यसले महिलालाई उद्यमी बन्नबाट रोकिरहेको छ।

सूचना प्रविधि क्षेत्रलाई लिएर सरकारले अहिले जुन हिसाबले नीतिगत सहजता ल्याउन तदारुकता देखाएको छ, यो क्षेत्रलाई बुझ्न वा हाम्रा कुरा सुन्न राजनीतिक नेतृत्वले जुन हिसाबले उत्साह देखाउनुभएको छ, यसले हामीलाई धेरै आशावादी बनाएको छ। सूचना प्रविधिलाई अर्थतन्त्रको खम्बाका रूपमा स्थापित गर्ने, नेपाललाई सूचना प्रविधि हबका रूपमा विकास गर्ने र सूचना प्रविधि क्षेत्रमा १० वर्षमा ३० खर्ब रुपैयाँ बराबरको सेवा निर्यातसँगै ५ लाखलाई प्रत्यक्ष र १० लाखलाई अप्रत्यक्ष रोजगारी सिर्जना गर्ने सरकारको लक्ष्य छ। यो सहजै पूरा गर्न सकिने लक्ष्य हो।

लगानी भित्र्याउन सहज बनाइदिने र विदेशमा खोल्ने विषयमा सहजता सुनिश्चित गरिदिने हो भने ३० खर्बको आईटी सेवा निर्यात गर्न १० वर्ष कुर्नै पर्दैन। हाम्रो चाहना अध्यादेशले कानुनी मान्यता पाएर चाँडै कार्यविधि आओस् भन्ने हो। यसरी हेर्दा अबको ५/१० वर्षमा नेपालको सूचना प्रविधि क्षेत्र बलियो बन्ने सम्भावना धेरै छ। पाँच/छ वर्षअघि नै विदेशमा व्यवसाय विस्तार गर्न दिने कानुनी आधार तयार भएको भए अहिलेसम्म सूचना प्रविधि क्षेत्रका कैयौं कम्पनीका संस्थापक खर्बपति भइसक्नुहुन्थ्यो। नेपालमा मात्रै लगानी गरेर वा यहाँ मात्रै सीमित भएर हामीलाई विश्वव्यापी बजारमा प्रतिस्पर्धा गर्न वा जायन्ट कम्पनी बन्न सम्भव छैन।

स्टार्टअप क्षेत्रमा कानुनी र प्रक्रियागत सरलता ल्याइदिए त्यसमा पनि सम्भावना देखिन्छ। हामीभन्दा पछिल्लो पुस्ताका भाइबहिनी स्टार्टअप र टेक बिजनेसमा नयाँ-नयाँ प्रयोग गर्न रुचाइरहेका छन्। एआई, मेसिन लर्निङ, रोबोटिक्समा इन्नोभेटिभ काम गरिरहेका छन्। उनीहरूको ज्ञान, सूचनामा पहुँच राम्रो छ। तर स्टार्टअपका लागि हामीकहाँ प्रक्रियागत झमेला धेरै छन्। कम्पनी दर्ता प्रक्रियाले स्टार्टअप व्यवसायीलाई सुरुमै निराश बनाउँछ। अनेक थरी कागजात जुटाउनेदेखि एकपछि अर्को निकायमा धाउनुपर्ने अवस्था छ। यसलाई सरल गरियो भने नवउद्यमीको संख्या बढ्छ। अहिले निजी क्षेत्रका केही अग्रणी संस्थाले स्टार्टअप गर्नेहरूलाई सल्लाह, सुझाव दिने दिशानिर्देश गर्ने काम गरिरहनुभएको छ। यो असाध्यै महत्त्वपूर्ण हो। यसमा अझै धेरै संस्था र अनुभवी उद्यमीहरूले विज्ञका रूपमा नयाँलाई सिकाउने गर्नुपर्छ। यस्तो संस्कृति बसाल्न सक्यौं भने स्टार्टअप फस्टाउँछन्।

हाम्रा शैक्षिक संस्थाहरूले जब मार्केटमा मिल्ने जनशक्ति निर्माण गर्न अलि मिहिनेत गर्नुपर्ने देखिन्छ, यसमा ग्याप भइरहेको छ। यो ग्याप हटाउन हामीले पनि सूचना प्रविधिसम्बन्धी कम्पनीको छाता संगठन नास-आईटीबाट केही पहल थालेका छौं। जब मार्केटको व्यावहारिक पाटोबारे जानकारी दिने गरी हामीले दुई/तीन वटा पाठ्यक्रम बनाएका छौं, यसले कलेजका ग्र्याजुएटलाई जब मार्केटमा फिट हुन मद्दत गर्नेछ। प्रविधि क्षेत्रका कतिपय व्यवसायीले जनशक्ति तयार गर्न निजीस्तरमै प्रयास गर्दै आएका छन्। शैक्षिक संस्थाहरूले नै पाठ्यक्रम अद्यावधिक गरेर वा तालिमको व्यवस्था गरेर जब मार्केटलाई आवश्यक पर्ने जनशक्ति निर्माणमा सघाउन सक्छन्। उद्योग र शैक्षिक संस्थाबीच सहकार्य आवश्यक छ।

हाल नेपालबाट ठूलो संख्यामा युवा जनशक्ति विदेशिएका छन्। अझै धेरै जना विदेश जाने सोचमा छन्। उनीहरू सबै पैसा कमाउन मात्रै विदेश गएका होइनन्, व्यक्तिगत स्वतन्त्रताको खोजी र यहाँको कमजोर शासन प्रणाली, सामाजिक-राजनीतिक बेथितिजस्ता कारणले उनीहरूलाई देशबाहिर जान बाध्य बनाएको छ। विदेश गएका नेपाली युवाले त्यहाँका प्रविधि, ज्ञान र कार्यशैली आत्मसात् गर्दै छन्।

युवाहरूको विदेश पलायनलाई दीर्घकालीन रूपमा नेपालकै विकासका लागि अवसरमा रूपान्तरण गर्न आवश्यक छ। सरकार तथा नीति निर्माताले विदेशमा बसेका नेपालीको ज्ञान, सीप र लगानीलाई नेपाल फर्काउने वातावरण बनाउन ध्यान दिनुपर्छ। सामाजिक, आर्थिक र राजनीतिक सुधारका संकेत देखिन थाले धेरै नेपाली पुन: आफ्नो देश फर्किन इच्छुक हुनेछन्, जसले नेपाललाई नयाँ युगतर्फ अघि बढाउनेछ।

# डिजिटल बैंकिङको प्रस्थानबिन्दु

**सही नीति, प्रविधि र मानव संसाधन विकासका उपाय अपनाइयो भने नेपालको बैंकिङ क्षेत्र निकट भविष्यमा अझ प्रतिस्पर्धात्मक, आधुनिक र दिगो बन्नेछ**



रश्मि पन्त
बैंकर

तीव्र रूपान्तरणको चरणमा रहेको नेपालको बैंकिङ क्षेत्रले डिजिटल प्रविधिको विकास, नियमनको कडाइ र अर्थतन्त्रमा आएको उतारचढाववीच आफ्नो स्थायित्व जोगाइरहेको छ। यसबीच वित्तीय सेवा डिजिटल रूपान्तरणको दिशामा अघि बढिरहेका छन् र यसले बैंकिङ प्रक्रियालाई छिटो, सरल र प्रभावकारी बनाएको छ। डिजिटल बैंकिङ प्रणालीको विकाससँगै कृत्रिम बुद्धिमत्ता (आर्टिफिसियल इन्टेलिजेन्स-एआई), ब्लकचेन, बिग डाटा एनालिटिक्स, डिजिटल भुक्तानी प्रणाली (क्यूआर, एनएफसी, क्रिप्टो) तथा साइबर सुरक्षाजस्ता विषय अब बैंकिङ उद्योगका आधारभूत अंश बनिसकेका छन्।

नेपाल जस्तो मुलुकका लागि डिजिटल बैंकिङको विकास एक प्रवृत्ति मात्र होइन, यो अब अनिवार्य आवश्यकता बनिसकेको छ। तसर्थ आज बैंकिङ क्षेत्रमा युवापुस्ताले प्रविधि र नवप्रवर्तनको विधामा महत्त्वपूर्ण भूमिका खेल्न सक्छन् र त्यो आवश्यक पनि छ। नेपालमा बैंकिङ प्रणाली पछिल्लो दशक उल्लेखनीय रूपमा विस्तार भएको छ। बैंक मात्र होइन फिनटेक कम्पनी, भुक्तानी सेवा प्रदायक (पीएसपी), भुक्तानी प्रणाली सञ्चालक (पीएसओ) र डिजिटल वित्तीय सेवा प्रदायक पनि बैंकिङ सेवाका प्रमुख भाग बनेका छन्। यी प्रविधिले नगदरहित कारोबारलाई प्रवर्द्धन गर्दै बैंकिङ प्रणालीलाई सरल, सुरक्षित र द्रुतगतिमा अगाडि बढाइरहेका छन्।

क्यूआर भुक्तानी र मोबाइल बैंकिङको वृद्धिले नगदरहित अर्थतन्त्रको सुरुवात, क्रेडिट स्कोरिङ र डिजिटल ग्राहक पहिचान (केवाईसी) विस्तार गरेको छ। झन्झटरहित कर्जा प्रणाली, कृत्रिम बुद्धिमत्ता (एआई) र बिग डाटा एनालिटिक्स, सुरक्षित र पारदर्शी वित्तीय कारोबार, नयाँ डिजिटल बैंक मोडलको विकास आशालाग्दो देखिन्छ। फिनटेक कम्पनीसँगको सहकार्यले पनि बैंक तथा वित्तीय संस्थालाई उचाइमा पुर्‍याएको छ।

डिजिटल बैंकिङको वृद्धिसँगै साइबर सुरक्षाका चुनौती पनि सँगै छन्। डेटा सुरक्षामा लगानीको अभाव, साइबर हमलाको जोखिम, डिजिटल साक्षरताको कमी र नियामकीय कडाइ जस्ता कारण डिजिटल बैंकिङको प्रभावकारिता सीमित भएको छ।

नेपालको बैंकिङ क्षेत्र युवाका लागि अवसरले भरिएको छ। प्रविधिमैत्री सोच, नवीन विचार र व्यावसायिक दृढतासहित अगाडि बढ्नेका लागि यो क्षेत्र सुनौलो भविष्य निर्माण गर्ने थलो बन्न सक्छ। डिजिटल बैंकिङले युवालाई झनै धेरै अवसर प्रदान गरेको छ।

नेपालमा फिनटेक स्टार्टअप अहिले उदाउँदा चरणमा छन्। डिजिटल भुक्तानी प्रणाली, कृत्रिम बुद्धिमत्ता तथा ब्लकचेन प्रविधिको प्रयोग गरेर नयाँ स्टार्टअप सफल भइरहेका छन्। एकातिर उनीहरूले राम्रो व्यावसायिक विस्तार गरिरहेका छन् भने सुपथ मूल्यका कर्जा सुविधा र उचित नाफा प्राप्त गरिरहेका छन्। डिजिटल बैंकिङको वृद्धिसँगै बैंक तथा वित्तीय संस्थाले साइबर सुरक्षामा लगानी बढाइरहेका छन्, जसले युवालाई नयाँ अवसर प्रदान गर्छ। साइबर सुरक्षासम्बन्धी विषय अध्ययन गरेका युवाले यो क्षेत्रमा आफ्नो करियर सुरक्षित गर्न सक्छन्।

यसैगरी, डाटा एनालिटिक्स र कृत्रिम बुद्धिमत्तालाई अहिले बैंक तथा वित्तीय संस्थाले ग्राहकको वित्तीय गतिविधि विश्लेषणमा उपयोग गर्दै आएका छन्। बिग डाटा एनालिटिक्स र एआईको प्रयोगलाई झनै सशक्त बनाउनुका साथै दायरा पनि फराकिलो बनाउन सकिन्छ।



अबको बाटो डिजिटल बैंकिङको हो। एक/दुई वर्षयता नेपालमा डिजिटल बैंकिङको विकास र विस्तार हेर्दा यो पुष्टि हुन्छ। तर, यो क्षेत्रका लागि योग्य, अनुभवी र दक्ष जनशक्ति अभाव छ। यो क्षेत्रको विकास र विस्तारसँगै दक्ष जनशक्ति (विशेषज्ञ) को माग उच्च छ। यसकारण डिजिटल वित्तीय सेवा, क्रेडिट स्कोरिङ प्रणाली तथा डिजिटल कर्जा प्रवाहजस्ता क्षेत्रमा दक्ष युवाले सहजै अवसर पाउन सक्छन्। जसबाट उनीहरूको सीप र दक्षता अभिवृद्धि हुनुका साथै आयआर्जनको पनि राम्रो र दिगो स्रोत हुन सक्छ। तर, यी अवसर उपयोग गर्न युवाले डिजिटल वित्तीय प्रणाली, साइबर सुरक्षा, ब्लकचेन, तथा कृत्रिम बुद्धिमत्तासँग परिचित हुन आवश्यक छ। यसका लागि सम्बन्धित विषयको अध्ययन, अध्यापन, अनुभव संकलन, नवीनतम सोच, नीति नियममा अनुकूलन, राज्य वा नियामक निकायको प्रोत्साहन तथा संरक्षण प्रभावकारी नियमनलगायत व्यवस्था हुन जरुरी छ।

नेपालमा डिजिटल बैंकिङले धेरै उपलब्धिहरू हासिल गरे पनि विभिन्न चुनौती अझै समाधान गर्न बाँकी छन्। प्रविधि सधैं एउटै रहन्छ भन्ने हुँदैन। समय र सन्दर्भअनुसार यो परिवर्तन हुन्छ। यसकारण डिजिटल परिवर्तनसँगै चुनौतीहरू पनि थपिँदै जान्छन्।

नेपालको बैंकिङ प्रणालीमा डिजिटल पूर्वाधारको अभाव सबैभन्दा महत्त्वपूर्ण चुनौती हो। ग्रामीण क्षेत्रमा इन्टरनेट पहुँच सीमित भएकाले डिजिटल वित्तीय सेवाहरूको पहुँच कमजोर छ। गुणस्तरीय पूर्वाधार नभएको अवस्थामा यो क्षेत्रको विकास र विस्तारले गति लिन सक्दैन। यसकारण बैंकिङ प्रणालीमा डिजिटल पूर्वाधारको सम्बन्धमा बैंक तथा वित्तीय संस्था, नियामक निकायलगायत सबै सरोकारवालाहरूको ध्यान जान जरुरी छ।

डिजिटल बैंकिङको क्षेत्रमा नियमन सन्तुलित रूपमा अगाडि बढ्नु महत्त्वपूर्ण छ, जसले नवप्रवर्तनलाई सुरक्षित र दिगो बनाउन मद्दत गर्छ। नेपाल राष्ट्र बैंकले डिजिटल बैंकिङलाई प्रवर्द्धन गरिरहेको छ, जसका कारण नयाँ प्रविधि अपनाउने अवसरहरू पनि बढ्दै गएका छन्। यस क्षेत्रका फिनटेक कम्पनीहरूका लागि अहिले व्यवसाय विस्तार गर्ने, संस्थागत क्षमता अभिवृद्धि गर्ने र नयाँ कम्पनी स्थापना गर्ने उपयुक्त समय हो। नियमनसँगै यस्ता कम्पनीलाई आवश्यक संरक्षण र प्रोत्साहन प्रदान गर्नुपर्नेछ, जसले डिजिटल वित्तीय प्रणालीलाई अझ सुदृढ बनाउनेछ। यस दिशामा सम्बन्धित निकायको सहकार्य र समर्थन आवश्यक छ। अहिले यो क्षेत्रमा नयाँ कम्पनी स्थापना हुने, व्यवसाय विस्तार गर्ने र संस्थागत क्षमता अभिवृद्धि बेला हो। त्यस्ता कम्पनीलाई नियमनसँगै संरक्षण र प्रोत्साहन पनि आवश्यक पर्छ।

डिजिटल बैंकिङको विकाससँगै साइबर सुरक्षाको जोखिम पनि बलियो चुनौतीका रूपमा अघि आएको छ। नेपालको बैंकिङ प्रणालीमा पनि ह्याकर, फ्रड, डेटा चोरी, पिनकोड तथा पासवर्ड पत्ता लगाएर पैसा चोरी, साइबर ठगी सम्बन्धमा विभिन्न घटना बढेका छन्। यी समस्याबाट बच्न बैंक तथा वित्तीय संस्था, ग्राहक, नियामक निकाय सबै सचेत हुन जरुरी छ। यसका लागि नागरिकहरू पनि वित्तीय साक्षर हुनुपर्छ। वित्तीय साक्षरताका लागि सबै बैंक तथा वित्तीय संस्था, सरोकारवाला, नियामक निकाय र राज्यको संयुक्त पहल आवश्यक छ। नेपालमा डिजिटल बैंकिङमा दक्ष जनशक्ति उत्पादन भए पनि युवा जनशक्ति पलायन मुख्य चुनौतीका रूपमा देखिएको छ। तीमध्ये धेरैजसो विदेशी कम्पनीहरूसँग आकर्षित भएर विदेश पलायन भइरहेका छन्।

पछिल्ला वर्ष नेपालका युवा जनशक्ति तीव्र रूपमा विदेश पलायन भइरहेका छन्। बैंकिङ क्षेत्रमा मात्रै होइन, सूचना प्रविधि, इन्जिनियरिङ र वित्तीय प्रविधिमा दक्ष जनशक्ति उच्च तलब तथा स्थायित्वको खोजीमा बिदेसिने क्रम बढ्दो छ। बैंकहरूले प्रविधिमा अब्बल युवा उत्पादन गर्न लगानी गरे पनि उनीहरूलाई दीर्घकालीन रूपमा बैंकिङ क्षेत्रमा टिकाउन सकिएको छैन। बढ्दो पलायनले यो क्षेत्रमा दक्ष जनशक्तिको अभाव हुने गरेको छ।

पलायनले नवप्रवर्तनशील सोचको ह्रास हुने गरेको छ। अन्तर्राष्ट्रिय बैंकिङ अभ्यास सिकेका दक्ष युवा विदेश जानुले नेपालमा नवप्रवर्तनशील सोच कमजोर हुँदै गएको छ भने पुरानै सोचले निरन्तरता पाइरहेको छ। उत्साह र नवीनतम सोच नहुँदा यो क्षेत्रको विकास र विस्तारको गति प्रभावित हुने हो कि भन्ने जोखिम पनि छ। यसको असर अहिले देखिन थालेको छ। किनकि पछिल्ला एक/दुई वर्षमा डिजिटल बैंकिङको विकासको गति कम भएको जस्तो देखिन्छ। प्रविधि विकासको गतिलाई तीव्र पार्नका लागि नेपालमै दक्ष जनशक्ति आवश्यक छ।

आगामी पाँचदेखि १० वर्षमा नेपालमा डिजिटल बैंकिङ व्यापक रूपमा विस्तार हुने सम्भावना छ। डिजिटल बैंकिङको विस्तार र नगदरहित कारोबार प्रोत्साहनका लागि सरकार र निजी क्षेत्र मिलेर विभिन्न कार्यक्रम अघि बढाइरहेका छन्। परिणामस्वरूप डिजिटल बैंकको स्थापनाको सम्भावना बढ्दै गएको छ, क्रिप्टोकरेन्सीलाई नियमित गर्न सकिने नीतिगत बहस चलिरहेका छन्, ब्लकचेन प्रविधिको प्रयोग गरेर वित्तीय लेनदेनलाई अझ पारदर्शी बनाउने विषयमा काम भइरहेको छ। कृत्रिम बुद्धिमत्ताको प्रयोग गरेर ग्राहक सेवालाई स्वचालित बनाउने विषयमा प्रभावकारी रूपमा काम अघि बढाउन सकिन्छ।

तर, यी सम्भावनालाई साकार पार्न सरकार, निजी क्षेत्र तथा नियामक निकायहरूको सहकार्य अपरिहार्य हुनेछ। बैंकिङ नियमनलाई समयानुकूल सुधार गर्दै व्यवसायमैत्री वातावरण बनाउँदै तथा प्रविधिअनुकूल कार्यनीति निर्माण गर्दै लगे मात्र नेपालको बैंकिङ क्षेत्र अन्तर्राष्ट्रियस्तरमा प्रतिस्पर्धी बन्न सक्छ।

नेपालको बैंकिङ क्षेत्र अहिले एक संक्रमणकालीन मोडमा छ। डिजिटल बैंकिङ, फिनटेक प्रविधि तथा कृत्रिम बुद्धिमत्ताको आगमनसँगै बैंकिङ उद्योग नयाँ उचाइमा पुग्दै छ। सरकारले युवाहरूलाई नेपालमै रोक्न दीर्घकालीन रोजगारीका अवसर सिर्जना गर्नुपर्छ। बैंकहरूले नवप्रवर्तनशील सोचलाई प्रोत्साहन गर्दै, युवाहरूलाई नेतृत्वदायी भूमिकामा ल्याउन विशेष नीति अपनाउनु जरुरी छ।

यदि सही नीति, प्रविधि र मानव संसाधन विकासका उपाय अपनाइयो भने नेपालको बैंकिङ क्षेत्र निकट भविष्यमा अझ प्रतिस्पर्धात्मक, आधुनिक र दिगो बन्नेछ। युवाले नवप्रवर्तनशील सोच, दृढता र प्रविधिसँगको घनिष्ठ सम्बन्ध कायम राख्न सके नेपालमै बसेर पनि वित्तीय क्षेत्रलाई नयाँ उचाइमा पुर्‍याउन सकिन्छ। देशमै अवसर खोज्ने, सिर्जना गर्ने र नेपाललाई आत्मनिर्भर बनाउने जिम्मेवारी अब हाम्रो पुस्ताको हो।





# युवा प्रवासनको अर्थसामाजिक प्रभाव

**विश्वव्यापीकरणको युगमा आप्रवासन स्वाभाविक प्रक्रिया हो, यसलाई 'बौद्धिक पलायन' का रूपमा नभई 'विश्वभर बलियो नेपाली सञ्जाल' का रूपमा निर्माण गरेर अवसरको भरपूर उपयोग गर्नुपर्छ**



विभव प्रधान
कार्यक्रम अधिकृत, आईआईडीएस

नेपाली युवाको विदेश पलायन प्रवृत्ति सामाजिक-आर्थिक परिदृश्यको परिभाषित विशेषता बनिसकेको छ। यसको मुख्य कारण आर्थिक अवसरको अभाव, राजनीतिक अस्थिरता, शिक्षा तथा रोजगारीका सीमित सम्भावनालगायत हुन्। त्यसो त नेपालबाट बिदेसिने प्रवृत्ति नयाँ भने होइन। यसको निकै पुरानो इतिहास छ। तर, पछिल्ला दुई दशकमा बिदेसिने क्रम उच्च दरले बढेको छ।

सन् १८१४ देखि १८१६ को 'अंग्रेज-नेपाल युद्ध' पछि ब्रिटिस र भारतीय सेनामा नेपाली गोर्खा सैनिकका रूपमा काम गर्न जाने लहर सुरु भयो। तर, आधुनिक प्रवासन भने सन् १९८० र १९९० को दशकदेखि तीव्र हुन थालेको हो। खाडी मुलुक र मलेसियालगायत देशमा निर्माण, होटल तथा पर्यटनलगायत क्षेत्रमा कम ज्यालाका (सीप नभएका, आंशिक सीप) नेपाली कामदारको ठूलो माग भएदेखि कामका लागि बाहिरिने क्रमले तीव्रता पायो। त्यही बेला नेपाल सरकारले पनि रेमिट्यान्समार्फत अर्थतन्त्रलाई उकास्न सकिन्छ भन्ने सोच अघि बढायो। परिणामस्वरूप सरकारले सन् १९८५ मा वैदेशिक रोजगार ऐन जारी गर्‍यो। त्यसपछि विदेशमा काम गर्नकै लागि श्रम आप्रवासनको औपचारिक बाटो खुलेको हो। सन् २००० मा दक्षिण कोरियाले ईपीएस प्रणालीमा कामदार लैजान थालेपछि कोरिया पनि नेपालीको महत्त्वपूर्ण श्रम गन्तव्य बन्न पुग्यो। नेपालले श्रम प्रवासनसम्बन्धी नीतिगत संरचना चरणबद्ध परिष्कृत बनाउँदै आएको छ भने नियमनलाई प्रभावकारी बनाएको छ। नेपाली कामदारको अधिकार र सुरक्षाको सुनिश्चितता गर्न नेपालले हालसम्म ११ देशसँग द्विपक्षीय श्रम सम्झौता गरिसकेको छ।



नेपालबाट हुने प्रवासनको स्तर अचम्मलाग्दो छ। सन् २०२१ को जनगणनाले नेपालमा २२ लाख मानिस अनुपस्थित रहेको देखाएको छ, जसमा मुख्यतः श्रमिक र विद्यार्थी छन्। वैदेशिक रोजगार विभागका अनुसार हाल ४० लाखभन्दा बढी नेपाली विदेशमा कार्यरत छन्। उनीहरू धेरैजसो खाडी मुलुक, भारत, मलेसिया र दक्षिण कोरियालगायत देशमा केन्द्रित छन्। यद्यपि, विदेशमा रहेका नेपाली कामदारको बहुसंख्यक हिस्सा आंशिक सीप वा अकुशल सीप भएको जनशक्तिले ओगटेको छ। विदेशमा रहेका ९ लाखभन्दा धेरै नेपाली सफाइकर्मी, निर्माण मजदुर, घरेलु सहायक जस्ता 'प्राथमिक पेसा' मा संलग्न छन्। करिब ७ लाख २५ हजार नेपाली सेवा क्षेत्रमा कार्यरत रहेको तथ्यांकले देखाएको छ। रोजगारीका लागि देशबाहिर रहेका कुल नेपालीमध्ये मात्र ३५.१ प्रतिशत पुरुष र २८.३ प्रतिशत महिला दक्ष कामदार (सीप भएका) छन्। यस्तै, मात्र ०.१४ प्रतिशत पुरुष र ०.२४ प्रतिशत महिला अत्यधिक कुशल वा व्यावसायिक रहेको देखिएको छ। तसर्थ, नेपाली श्रम बजारलाई बढी व्यवस्थित र प्रभावकारी बनाउन दक्ष, उच्च दक्ष र व्यावसायिक कामदारको संख्या बढाउन जरुरी छ।

## रेमिट्यान्सकै भरथेग

विदेशी मुद्राका स्रोत निर्यात, पर्यटन, प्रत्यक्ष वैदेशिक लगानी, वैदेशिक सहायता तथा अनुदानमा सन्तोषजनक अवस्था छैन। यसकारण पनि नेपालको अर्थतन्त्र जोगाउन रेमिट्यान्सको अहम् भूमिका रहेको छ। सन् २०२२/२३ मा नेपालले १२ खर्ब २० खर्ब रुपैयाँ (९ अर्ब ३३ करोड अमेरिकी डलर) रेमिट्यान्स प्राप्त गरेको थियो। यो नेपालको कुल गार्हस्थ्य उत्पादन (जीडीपी) को अनुपातमा करिब २५ प्रतिशत हो। सन् २०२३/२४ रेमिट्यान्स बढेर १० अर्ब ४६ करोड डलर पुग्ने अनुमान छ। सन् २०२१ को जनगणनाअनुसार ६४ प्रतिशत नेपाली घरपरिवारले आन्तरिक वा बाह्य कुनै न कुनै रूपमा रेमिट्यान्स प्राप्त गर्ने गरेका छन्। यसको अर्थ रेमिट्यान्सले नेपाली अर्थतन्त्रलाई धेरै पटक निकै जटिल आर्थिक संकटको अवस्थाबाट जोगाएको छ। सन् १९९६ देखि २००६ सम्मको दशक लामो माओवादी द्वन्द्व, सन् २०१५ को विनाशकारी भूकम्प, सन् २०१५-१६ को आर्थिक नाकाबन्दी र २०२० को कोभिड महामारी जस्ता संकटमा पनि नेपाली अर्थतन्त्र ध्वस्त हुनबाट जोगिनुको प्रमुख श्रेय रेमिट्यान्सलाई नै जान्छ। नेपालको गरिबी घटाउन रेमिट्यान्सको योगदान धेरै रहेको विभिन्न अध्ययनले देखाएका छन्। विश्व बैंकको एक अध्ययनले सन् २००१ देखि २०११ सम्म खाडी र मलेसियाबाट आएको रेमिट्यान्सले मात्र नेपालको गरिबी करिब ४० प्रतिशतले घटाएको देखाएको छ।

लामो समयको श्रम प्रवासनसँगै पछिल्ला दुई दशकमा उच्च शिक्षाका लागि नेपाली विद्यार्थी विदेश जाने प्रवृत्ति पनि उच्च दरले बढेको छ। संयुक्त राज्य अमेरिका, बेलायत, अस्ट्रेलिया र जापान नेपाली विद्यार्थीहरूको प्रमुख गन्तव्य बनेका छन्। शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालयका अनुसार सन् २०२२ मा मात्र १ लाख १२ हजार विद्यार्थीले नो अब्जेक्सन सर्टिफिकेट (एनओसी) का लागि आवेदन दिएका थिए। यसको अर्थ यो समय अवधिभर दैनिक ३०० भन्दा बढी युवा अध्ययनका लागि नेपालबाट पलायन भए।

अध्ययन र रोजगारीका लागि उच्च दरले युवा बाहिरिनुमा बाध्यता र रहर दुवै (पुस र पुल फ्याक्टर) तत्त्वले काम गरेको देखिन्छ। उच्च बेरोजगारी दर, लामो समयदेखिको राजनीतिक अस्थिरता, सीमित शैक्षिक अवसर जस्ता कारणहरूले नेपाली युवालाई बिदेसिन बाध्य बनाइरहेका छ। राम्रो तलब, सामाजिक सुरक्षा, उच्च जीवनस्तर र भविष्यको सुरक्षाका आशाले उनीहरूलाई विदेशतर्फ तान्ने गरेको छ। ठूलो संख्यामा युवा विदेश पलायन हुँदा नेपालले ठूलो मूल्य चुकाउनुपरेको छ। जनगणना २०७८ अनुसार ६२ प्रतिशत जनसंख्या १५-५९ वर्ष उमेर समूहका छन्। मुलुकको आर्थिक विकासका लागि यो उमेर समूह एक महत्त्वपूर्ण अवसर हो। विज्ञहरूका अनुसार नेपालले यो 'जनसांख्यिकीय लाभांश' लाई सदुपयोग गर्न अर्को २५-३० वर्ष मात्र समय पाएको छ। यो समयमा उक्त अवसरको अधिकतम सदुपयोग गर्दै मुलुकको आर्थिक विकासका क्षेत्रमा उपयोग गर्नुपर्छ।

खाडी र दक्षिणपूर्व/पूर्वी एसियाका परम्परागत गन्तव्यले ठूलो संख्यामा कामदारलाई आकर्षित गर्न जारी राखे पनि अर्को नयाँ प्रवृत्तिमा नेपाली कामदार जापान, दक्षिण कोरिया, अस्ट्रेलिया र युरोपेली राष्ट्रजस्ता उच्च आय भएका देशमा उल्लेखनीय रूपमा जान थालेका छन्। आईआईडीएसले सन् २०२३ मा गरेको एक अध्ययनले विदेशमा रहेका सूचना प्रविधि (आईटी) क्षेत्रमा कार्यरत नेपालीले झन्डै आधा अर्ब डलर बराबरको सेवा निर्यात भएको देखाएको छ। यद्यपि, विदेशमा रहेका नेपालीहरू अब सामान्य मानिएका काममा मात्र सीमित छैनन्। उनीहरूले विस्तारै सूचना प्रविधिलगायत क्षेत्रमा धेरै राम्रा काम गरिरहेका छन्।

अहिले दक्षिण कोरिया, जापानलगायत देशले सूचना प्रविधि (आईटी), स्वास्थ्य सेवा र इन्जिनियरिङ जस्ता क्षेत्रका दक्ष श्रमिक खोजिरहेका छन्। तर अधिकांश नेपाली प्रवासीहरू अझै पनि न्यून सीपयुक्त, श्रम प्रधान रोजगारीमा सीमित छन्। यसले हाम्रो शिक्षा प्रणाली र व्यावसायिक तालिम संरचनामा रहेका कमजोरी उजागर गरेको छ। लैंगिक असमानताले आप्रवास झनै जटिल बनाएको छ। पछिल्लो समय महिला आप्रवासीको संख्या बढ्दै गएको छ। उनीहरू विभेद, शिक्षामा सीमित पहुँच तथा घरेलु कामकाज र यौन शोषणलगायत समस्याबाट पिल्सिरहेका छन्।

युवाको उद्यमशीलता र नवीनतालाई प्रवर्द्धन गर्ने सम्बन्धमा नीति पर्याप्त छैनन्। नेपालका राष्ट्रिय नीति अझै पनि श्रम आप्रवासनको नियमन र नियन्त्रणमै केन्द्रित छन्। जबकि उद्यमशीलता विकासलाई प्राथमिकता दिइएको देखिँदैन। नेपालले सस्तो श्रमिक आपूर्तिकर्ता देशको पहिचानबाट बाहिर निस्केर नवीनता, सूचना प्रविधि र उद्यमशीलताको केन्द्र बन्ने दिशामा अघि बढ्न आवश्यक छ। यसका लागि नीति निर्माणको सोचमा आमूल परिवर्तन आवश्यक छ।

नेपालमा आउने अर्बौं डलर रेमिट्यान्स उपभोगमा मात्र खर्च नगरेर नवीनतम सोच र आर्थिक वृद्धिलाई प्रवर्द्धन गर्ने काममा लगानी गर्न सक्नुपर्छ। मैले हालै अमेरिकास्थित नेपाली डायस्पोराबारे आईआईडीएसले गरेको एक अध्ययनमा सहलेखन गरेको थिएँ। जसले एउटा कठोर यथार्थ देखायो। सन् २०२३ मा नेपालीहरूले अमेरिकाबाट औपचारिक र अनौपचारिक दुवै माध्यमबाट लगभग १.२८ अर्ब डलर रेमिट्यान्स पठाएको देखिन्छ। यसै अध्ययनले के पनि देखायो भने अमेरिकामा बसिरहेका नेपालीमध्ये १३ प्रतिशतले मात्र स्वदेशमा वित्तीय लगानी गरेका छन्। लगानीको दर किन यति कम भनेर सोध्दा उत्तरदाताले जवाफमा उनीहरूलाई चासो नभएर होइन, बरु नेपालमा लगानी गर्ने उचित प्रणाली वा वातावरण असहज भएकाले हो भनेर भने। सरकारको अनावश्यक कागजी झमेला, राजनीतीकरण, सार्वजनिक संस्थाप्रतिको अविश्वास र स्पष्ट प्रोत्साहन नहुनुलगायत कारण अवरोधका रूपमा देखिएका छन्। यसकारण विदेशमा रहेका नेपालीलाई देशमा लगानी गर्ने रहर र क्षमता हुँदाहुँदै पनि हिच्किचाइरहेका छन्।

आईआईडीएसको अध्ययनले विदेशमा रहेका पहिलो र दोस्रो पुस्ताका नेपालीको सम्भावना पनि औंल्याएको छ। ती नेपाली उच्च शिक्षित, अन्तर्राष्ट्रियस्तरमा अनुभव बटुलेका छन्। यसकारण उनीहरूले नेपाललाई विश्वव्यापी अर्थतन्त्रसँग जोड्न सक्ने पुलका रूपमा काम गर्न सक्छन्। उनीहरूमध्ये अधिकांश चिकित्सक, इन्जिनियर, कलाकार, व्यवसायी, सूचना प्रविधि जस्ता विभिन्न पेसामा छन्, जसले नेपालमा लगानी, सीप र नवीनतम सोच भित्र्याउन सक्छन्। तर यसका लागि नेपालले लगानी प्रक्रियालाई सरलीकरण, कर छुट र विदेशी लगानीलाई प्रवर्द्धन गर्ने नीति तथा वित्तीय उपकरणहरू (जस्तै, वैदेशिक ऋणपत्र आदि) प्रयोग र कार्यान्वयन गर्नुपर्छ। नेपालले पनि आफूसँग रहेका तुलनात्मक फाइदाका क्षेत्र पहिचान गरेर त्यसको विकास र विस्तारमा ध्यान दिनुपर्छ।

आप्रवासनलाई 'बौद्धिक पलायन' का रूपमा नभई 'विश्वभर बलियो नेपाली सञ्जाल' का रूपमा निर्माण गरेर अवसरको भरपूर उपयोग गर्नुपर्छ। हामीले डायस्पोरालाई पुनः लगानी गर्न प्रेरित गर्ने नीति, युवालाई चाहिने सीप र अवसर उपलब्ध गराउन सकेमा आप्रवासन नेपालको विकासको एक प्रमुख शक्ति बन्न सक्छ। अहिले युवालाई स्वदेशमै रोक्ने कि विदेश जान दिने भन्ने विषयमा अल्झेर बस्ने बेला होइन। विश्वव्यापीकरणको युगमा आप्रवासन स्वाभाविक प्रक्रिया हो। यदि हामीले समय सान्दर्भिक नीतिगत परिवर्तन, आर्थिक विकासमा विदेशमा रहेका नेपालीसँग हातेमालो र तुलनात्मक फाइदा भएका क्षेत्रहरूमा लगानी गर्न सके आप्रवासनलाई आर्थिक विकासको भरपर्दो इन्जिन बनाउन सकिन्छ।

# किसान-उद्योगमैत्री नीतिको खाँचो



**साकेत संघाई**
निर्देशक, त्रिवेणी ग्रुप

नेपालमा खाद्य उत्पादनको सम्भावना हुँदाहुँदै भारतमा निर्भर हुनुपरेको छ। धेरैजसो चामल र दाल भारतबाट आयात हुन्छ। हामी व्यापार घाटामा छौं, किनकि खाद्यवस्तुको निर्यातभन्दा आयात बढी छ। खाद्यवस्तुको माग बढ्दो छ, त्यही भएर आयात गर्नुपरेको हो। सोयाबिन तेल भने भारत निर्यात हुन्छ। तेस्रो मुलुकबाट कच्चा पदार्थका रूपमा आयात हुने सोयाबिन यहाँ रिफाइन गरी 'भ्यालु एड' पछि भारत पठाएका छौं। निर्यात हुनुको एउटा मात्रै कारण हो, भारतले आयात भन्सार बढाउनु।

भारतले गत भदौ १९ बाट लागू हुने गरी कच्चा र प्रशोधित खाद्य तेलमा आधारभूत भन्सार कर २० प्रतिशत बिन्दुले बढाएको छ। भन्सार बढेपछि भारतले आयात गर्ने कच्चा खानेतेलमा लाग्ने कर साढे २७ प्रतिशत पुगेको छ। नेपालमा ३० प्रतिशत मूल्य अभिवृद्धिसहित उत्पादन भएको वस्तुले भारतीय बजारमा भन्साररहित प्रवेश पाउने गरेका छन्। त्यही कारण तेलको निर्यात बढेको छ। त्यस्तै, भारतबाट धेरै चामल सस्तोमा आयात भएको छ।

धान आयात गर्दा ६ प्रतिशत भन्सार लाग्छ भने चामल आयात हुँदा ९ प्रतिशत। तर धान आयात गरेर कुटान खर्च, ब्याज, लागत, मुनाफासहित बिक्री गर्दा ९ प्रतिशत भन्सारमा आएको चामलसँग प्रतिस्पर्धा गर्न गाह्रो हुन्छ। धान र चामलको ४ प्रतिशत मार्जिनको फरकमा सबै खर्च निकालेर बेच्नुपर्छ। स्वदेशमै धान उत्पादन बढाउन सके स्वदेशी उद्योगका लागि राम्रो हुन्थ्यो। हुन त पछिल्लो समय धान उत्पादन बढेको सरकारी तथ्यांक छ। तर अझै अपुग नै छ। माग पूरा गर्न आयात नै गर्नुपर्छ। तसर्थ, धानको उत्पादन बढाउन सरकारले किसानलाई अनुदान दिनुपर्छ। भारतमा किसानले धेरै अनुदान पाउने भएकाले त्यहाँको उत्पादन सस्तो पनि छ। हामीकहाँ किसानलाई अनुदान दिइएको छैन। सरकारी नीति किसानमैत्री हुन सकेन। अहिले कृषिका लागि अस्थिर नीति छ, अब स्थिर नीति आवश्यक छ, जसले गर्दा उत्पादन बढोस्। यसका लागि सरकार, किसान र कर्मचारीबीच समन्वयकारी भूमिका आवश्यक छ।

कृषिमा नयाँ प्रविधि भित्र्याउन सरकारले सहयोग गर्नुपर्छ। तर अहिले त्यो भएको छैन। खाद्यान्न क्षेत्रमा दक्ष कामदार छन्, तर जुन लेबलमा हुनुपर्थ्यो, त्यो छैन। तराईमा धेरै उद्योग छन्, उत्पादन त्यहीं हुन्छ। तर धेरैजसो कामदार भारतीय छन्। सरकारले विदेशमा रहेका नेपाली युवालाई स्वदेश फर्काउन सोच्नुपर्छ। जनशक्ति उत्पादनमा यहाँका उद्योगले सहयोग पनि गर्नुपर्छ। उद्योगको संख्यामा वृद्धि हुँदा जनशक्तिको माग पनि बढ्छ।

दुई वर्षयता बजारको अवस्था हेर्दा स्थानीय व्यापारमा संकट छ। मन्दीको समय छ। उद्योगसँग पैसा छैन। कर्मचारीलाई तलब खुवाउन पैसा छैन। त्यसकारण सरकारको नीति पनि स्थिर हुनु जरुरी छ। स्थानीय उद्योगलाई सहयोग हुने नीति ल्याएर अर्थतन्त्र 'बुस्ट' गर्नुपर्छ। रोजगारी सिर्जना गर्नुपर्छ। उद्योगसँग राम्रो उत्पादन भए कर्मचारीलाई तलब भुक्तानी गर्न सक्छन्। आजको समयमा पैसाले मात्रै कर्मचारीलाई प्रेरित हुन्छ। कर्मचारीले राम्रो तलब सेवा सुविधा पाए भने कामप्रति स्वतः उत्साहित हुन्छन्। राम्रो तलब पाए युवाहरू विदेश जाँदैनन्। कुनै पनि युवालाई आफ्नो देश छाड्न मन लाग्दैन।



अहिले देखिएको समस्या 'जरा' देखि नै समाधान गर्न सके कोही नेपाली विदेश जाँदैनन्।

नेपालमा चामल उद्योग मात्रै एक सयभन्दा बढी छन्, तर बजारमा प्रतिस्पर्धा राम्रो छैन। खाद्यको मूल्यमा 'वार' छ। भारतसँग परनिर्भर भएकै कारण भारतीय बजारमा हुने सानोतिनो परिवर्तनले यहाँ प्रभाव परिहाल्छ। तेलकै कुरा गर्दा भारतले आयात कर बढायो। त्यसको रिजल्टमा भारतमा निर्यात बढेको छ। भारतले भन्सार घटाएर निर्यात घट्छ। किनभने भारतमा अन्य मुलुकबाट आयात बढ्छ। चामलको हकमा पनि उस्तै हो। धानको निर्यात बन्द गरे नेपालमा उद्योग चल्न सक्दैन। भारतबाट धान चामल आउँछ। त्यसैले भारतसँग निर्भर हुँदा पनि समस्या नै छ।

नेपाल सरकारको कानुन पनि सबै उद्योगका लागि उचित छैन। ४ प्रतिशतको फरकमा भारतीय उत्पादकसँग प्रतिस्पर्धा गर्नुपर्ने बाध्यता छ। यो वर्ष धानमा अग्रिम आयकर पनि लगायो। दालमा पनि १० प्रतिशत थियो। अहिले केही घटाएर २.५ प्रतिशत गर्‍यो। धानमा पनि २.५ प्रतिशत गर्‍यो। यस्तो अवस्थामा ट्रेडर र उद्योगीबीच कसरी स्वच्छ प्रतिस्पर्धा हुन सक्छ? उद्योगका लागि धेरै समस्या भयो। सरकारले यसमा सोच्नुपर्‍यो। उद्योग एउटा मान्छेको मात्रै हुँदैन। उद्योगका पछाडि ५० परिवार आश्रित हुन्छन्। उद्योगको पैसाबाट घरपरिवार चलेको हुन्छ। पछिल्लो समय लगानीको समस्या नभए पनि सरकारको नीति स्पष्ट हुन जरुरी छ।

बजारमा तरलता अभाव छैन। सबै बैंकमा पैसा छ। ब्याजदर घटेको छ। त्यही कारण पनि अहिले समस्या देखिएको छैन। तर सरकारी नीति किसान र उद्योगमैत्री हुन जरुरी छ। सरकार र नीति परिवर्तनले धेरै समस्या हुन्छ। एउटा सरकारले एक थरीको बजेट ल्याउँछ, अर्को सरकार परिवर्तन हुँदा नीतिमा परिवर्तन भइहाल्छ। फेरि जिरो लेबलबाट काम हुन्छ। यसले उद्योगी व्यवसायीमा पनि असर परिहाल्छ। दीर्घकालीन रूपमा आउने लगानी पनि निरुत्साहित बन्छ। एफडीआई ल्याउन समस्या हुन्छ। लगानी गर्न चाहँदैनन्। त्यसकारण राजनीतिक स्थिरता आउन जरुरी छ। देशमा के चाहिएको हो, मुलुकलाई कस्तो बनाउने हो, त्यसका लागि भिजन चाहिन्छ।

आगामी ५/१० वर्षमा खाद्य क्षेत्रमा सम्भावना छ। खाद्य इभरग्रिन क्षेत्र हो। त्यसका लागि सरकारले कृषिलाई प्रोत्साहन हुने गरी नीति ल्याउनुपर्छ। एग्रो उद्योगमा सरकारको पनि लगानी हुनुपर्‍यो। स्थानीय उद्योगलाई प्रवर्द्धन गर्न जरुरी छ। कृषिमा लगानी बढे खाद्य उद्योग स्वतः प्रवर्द्धन हुन्छ। साथसाथै दक्ष जनशक्ति उत्पादनमा सरकारको भूमिका महत्त्वपूर्ण रहन्छ। सरकारले सोही अनुसार काम गरिदिनुपर्छ। स्टार्टअपको कुरा गर्दा धेरै विकास भइराखेको छ। उद्योग वाणिज्य महासंघ र उद्योग परिसंघबाट राम्रो काम भएको छ। स्टार्टअप कमिटी पनि गठन भएको छ। निजीसँगै सरकारी तवरबाट पनि सहयोग साथ जरुरी छ।

# अवैध आयात : समृद्धिको बाधक



**सृष्टि दुगड**
कार्यकारी निर्देशक,
केएल दुगड ग्रुप

मुलुकमा खाद्यान्नको माग र उत्पादनबीच ठूलो खाडल छ। धेरै उपभोग हुने खाद्यान्नमा हामी आयातमै निर्भर छौं। भियतनाम, टर्की, अमेरिकालगायत मुलुकबाट खाद्यान्न आयात गरिरहेका छौं। नेपालमै उत्पादन हुने दाल, तेललगायत खाद्यान्न पनि आयात गर्नुपर्ने अवस्था छ। स्वदेशमा उत्पादन नहुने मसला, चेरी, ओलिभ आयललगायत वस्तु भने आयात गर्नैपर्छ।

कच्चा पदार्थ उपलब्ध भए स्वदेशमै उत्पादन गर्न सकिन्छ। स्वदेशमै उत्पादन हुने सम्भावना भएका वस्तुमा पनि हामी आयातमै निर्भर छौं। यसको प्रमुख कारण भनेको गुणस्तरीय उत्पादन पर्याप्त नहुनु हो। यसको अर्थ स्वदेशमा उत्पादित सबै वस्तु गुणस्तरीय छैनन् भन्ने होइन। गुणस्तरीय वस्तु थोरै मात्रामा उत्पादन भइरहेका छन्।

मूल्यको तुलना गर्ने हो भने स्वदेशी उत्पादनभन्दा आयातित वस्तु सस्तो पर्छन्। अन्य मुलुकमा ठूलो परिमाणमा वस्तु उत्पादन हुने भएकाले लागत कम पर्छ। तर नेपालमा थोरै परिमाणमा उत्पादन हुने भएकाले लागत बढी पर्छ। त्यसले स्वदेशी उत्पादनलाई महँगो बनाउँछ। आयातित वस्तुसँग प्रतिस्पर्धा गर्न गुणस्तरीय उत्पादनतर्फ जोड दिनुपर्छ। साथै धेरै परिमाणमा उत्पादन गर्ने हो भने आयातित वस्तुसँग प्रतिस्पर्धा गर्न सकिन्छ। जस्तै, तराईदेखि पहाडसम्म मह उत्पादन गर्न सकिन्छ। महमा औषधीय गुण हुने भएकाले स्वदेशसँगै विदेशमा पनि यसको माग उत्तिकै छ। किसानसँग मह भए पनि बेच्न सकेका छैनन्। किसानका उत्पादनलाई सुरक्षित गर्न आयातमा रोक लगाउने र बजार सुनिश्चित गर्ने नीति लिनुपर्छ।

चालु आर्थिक वर्षको साउनमा ६० हजार युवा बाहिरिए, तर हामीकहाँ पर्याप्त दक्ष जनशक्ति छैनन्। काम गर्ने उमेर नै १६ देखि ४० वर्ष हो। तर यही वर्षका युवा देश छोड्ने क्रम बढ्दो छ। भएका युवा पनि कृषि पेसा अपनाउन चाहँदैनन्। उनीहरूको सोच विदेश जानेमै बढी केन्द्रित छ। जसका कारण दक्ष जनशक्तिको अभाव चुलिएको हो। तसर्थ दक्ष जनशक्ति उत्पादन गर्न सरकारले विभिन्न नीति ल्याउन जरुरी छ।

नेपालमा अवसर नभएको होइन, सूचना तथा प्रविधि (आईटी) क्षेत्रमा नेपाली युवाले अमेरिकी कम्पनीका लागि काम गरिरहेका छन्। आईटीमा नेपालमै रोजगारी सिर्जना भइरहेका छन्। जलविद्युत् र आधुनिक कृषिलगायत धेरै क्षेत्रमा सम्भावना छ। अन्तर्राष्ट्रिय बजारमा अलैचीको माग बढ्दो छ। निर्यात हुने वस्तुमा अलैची पहिलो स्थानमा पर्छ। तर हामीले अप्रशोधित अलैची बिक्री गरिरहेका छौं। यस्ता वस्तुको पहिचान गरी सरकारले प्राथमिकताका साथ अघि बढाउनुपर्छ। युवालाई रोक्न सरकारले लाभका वस्तु पहिचान गरी ब्रान्डिङ गर्नेलगायत सीप सिकाउनुपर्छ। शिक्षा र रोजगारीको अवसर देखेर युवा विदेश पलायन भइरहेका छन्। उस्तै अवसर र सेवासुविधा नेपालमै पाए उनीहरू विदेश जाँदैनन्। सरकारले त्यस किसिमका नीति ल्याउन सकेको छैन।

मैले अमेरिकामा पढें। अमेरिकामा राम्रै अवसर थियो। नेपालमा केही सम्भावना देखेर नै फर्किएँ। अमेरिकाबाट फर्केर खाद्यान्न क्षेत्रमा लागें। चुनौती लिएर अगाडि बढ्दा नै सफलता मिल्छ। नेपालमा खाद्यवस्तु आयात गर्न खुला सीमा, न्यून गुणस्तर र चोरी निकासीलगायत समस्या छन्।

हामीले वैध रूपमा आयात गरिरहेका छौं। तर खुला सीमाले अवैध आयातलाई प्रोत्साहन गरिरहेको छ। त्यसकारण चोरी निकासीबाट न्यून गुणस्तरीय वस्तु आयात हुने गरेको छ। वैध रूपमा आएको वस्तु अवैध रूपमा भित्रिएका वस्तुसँग प्रतिस्पर्धा गर्नुपर्ने अवस्था छ। भन्सार छलेर आएका वस्तुसँग प्रतिस्पर्धा गर्न सकिन्न। अवैध आयातलाई नियमन गर्न नसक्दा सरकारले राजस्व गुमाइरहेको छ। भन्सार दर समयसापेक्ष र अन्तर्राष्ट्रिय मापदण्डअनुसार परिमार्जन गर्न जरुरी छ। डेढ वर्षअघि सरकारले कडाइ गर्दा अवैध आयात नियन्त्रण भएको छ। अहिले फेरि अवैध आयात बढ्दो छ।

लगानीतर्फ हेर्दा बैंक ब्याजदर कम छ। तरलताको समस्या छैन। अहिले उत्पादन बढी छ तर बजार छैन। त्यसकारण पछिल्लो समय खाद्यान्नको बजार खुम्चिँदै गएको छ। निर्यातमा त्यस्तै समस्या छ। अहिले जापानमा मह निर्यात बन्द छ। निर्यात खोल्न सरकारले पहल गर्नुपर्छ। जापानबाहेक अन्य मुलुकमा पनि निर्यात गर्न सरकारले सहज वातावरण बनाइदिनुपर्छ। यसमा सरकार-सरकारबीच पहल हुनु जरुरी छ। बजार घट्दै जाँदा आयात पनि घट्छ। सरकारले कर बढाउँदा स-साना उद्योगीलाई समस्या हुन्छ। कच्चा पदार्थ र तयारी वस्तुको भन्सार दर एउटै छ। कच्चा पदार्थ आयात गरी उत्पादन गरेर बजार पठाउँदा तयारी वस्तुसँग प्रतिस्पर्धा गर्न सक्दैनौं।

# बामे सर्दै 'कन्टेन्ट क्रिएसन'

## हामी प्रोडक्ट निकाल्छौं, भिडियो डकुमेन्ट्री बनाउँछौं, कथा सुनाउँछौं, सचेतनामूलक सामग्री बनाउँछौं, तर सहयोग कतैबाट छैन



सिर्जना सिज्जु
ट्राभल 'कन्टेन्ट क्रिएटर'

आजको डिजिटल युगमा 'कन्टेन्ट क्रिएसन' प्रभावशाली र आवश्यक क्षेत्र बनेको छ। साना-ठूला संघसस्थादेखि बैक, अस्पताल, कर्पोरेट क्षेत्र सबैले आफ्ना वस्तु तथा सेवाको प्रचारप्रसार, ब्रान्डिङ, विज्ञापनका लागि कन्टेन्ट क्रिएटर, स्क्रिप्ट राइटर र इन्फ्लुएन्सर खोज्न थालेका छन्। ट्राभल कन्टेन्ट क्रिएसनले नेपालमा पर्यटन प्रवर्द्धन, संस्कृति तथा स्थानीय अर्थतन्त्रलाई टेवा पुऱ्याउन महत्त्वपूर्ण भूमिका खेलिरहेको छ। तथापि कन्टेन्ट क्रिएसनलाई औपचारिक पेसाका रूपमा स्विकारिएको छैन।

'कन्टेन्ट क्रिएटर'का रूपमा हामीले जुन लगानी, समय र श्रम खर्च गर्छौं, त्यसको उचित कदर हुँदैन। हामीले तयार गर्ने कन्टेन्ट लाखौंले हेर्छन्, त्यसबाट पर्यटन क्षेत्रलाई फाइदा पुग्छ, स्थानीय व्यवसायहरूलाई प्रवर्द्धन हुन्छ। तर हाम्रो योगदानलाई प्रायः नजरअन्दाज गरिन्छ। अझै पनि धेरैले 'कन्टेन्ट क्रिएसन' भनेको केवल रुचि वा सोखका रूपमा बुझ्नुहुन्छ। यसलाई एउटा व्यावसायिक सम्भावना भएको 'करिअर' वा 'पेशा'का रूपमा बुझ्नेहरूको संख्या निकै कम छ। यसलाई व्यवस्थित व्यवसायका रूपमा पहिचान गरिएको छैन।

कन्टेन्ट क्रिएटरलाई दक्ष जनशक्तिका रूपमा लिइएको छैन। हामीले गरेका काम वा बनाएका कन्टेन्टको समाजले अपनत्व लिने गरेको छैन। यसलाई हाम्रो निजी सम्पत्ति वा क्रिएटरहरूले आफ्नो इच्छाले बनाएका सामग्री मान्ने प्रवृत्ति छ। समय काट्न, रमाइलोका लागि गरेको कामका रूपमा लिइन्छ। कतिपयले हाम्रा सामग्री अनधिकृत रूपमा प्रयोग गरिदिन्छन्। त्यसबाट हामीले श्रम गरेको कामको प्रतिफलसमेत पाउँदैनौं। नेपालमा डिजिटल कन्टेन्ट क्रिएसन प्रारम्भिक चरणमै भए पनि अब व्यावसायिक रूपमा स्थापित हुन थालेको छ। आम्दानीका हिसाबले हेर्दा, ट्राभल कन्टेन्ट क्रिएटरहरूले सबैभन्दा ठूलो भरथेग युट्युबबाटै पाएका छन्। म आफैं पनि एक्लै काम सुरु गर्दा युट्युबकै माध्यमबाट अगाडि बढ्न सकें। यही आम्दानीका आधारले अहिले 'कल कर्णाली प्रोडक्सन' कम्पनी स्थापना गरेर टिम नै बनाउने काम गर्न सक्ने भएकी छु।

औसत रूपमा महिनाको ४०/५० हजार रुपैयाँ मात्र आए पनि यो आम्दानीले टिक्न सघाउँछ। ट्राभल कन्टेन्ट क्रिएटरहरूका लागि मात्र नभएर डिजिटल मिडियामा काम गर्ने सबैका लागि युट्युब सबैभन्दा प्रभावकारी र दिगो प्लाटफर्म बनेको छ। तर युट्युबमा मात्र सीमित भएर बस्न मिल्दैन। आफूले के गरिरहेको छु, कसरी गरिरहेको छु भनेर दर्शकलाई जानकारी दिन फेसबुक, टिकटक र इन्स्टाग्राम जस्ता सामाजिक सञ्जाल प्लाटफर्म पनि उत्तिकै महत्त्वपूर्ण छन्।



बाहिर बस्ने दर्शकको कमेन्टमा अक्सर भावुकता झल्किन्छ। 'यस्तो राम्रो ठाउँ जान पाए हुन्थ्यो', 'घर फर्किएर केही गर्न पाए हुन्थ्यो' वा 'ढुक्कले काम गर्ने वातावरण सरकारले तयार गरिदिए विदेश आउँदैनथ्यौं' भन्ने जस्ता प्रतिक्रिया बारम्बार आइरहन्छन्। यसले देखाउँछ कि विदेशमा रहेका नेपालीहरूमा नेपालको पर्यटन, प्रकृति र संस्कृतिप्रतिको आकर्षण अझै जीवित छ। उहाँहरू उचित अवसर र वातावरण नपाएर बाध्य भएर बाहिर बस्नुपरेको छ। नेपालमै रहेका दर्शकको दृष्टिकोण चाहिँ अलि फरक देखिन्छ। उनीहरू भौतिक रूपमा यात्रा गर्न नसके पनि, हाम्रा भिडियो हेरेरै नयाँ ठाउँको अनुभव लिइरहेको प्रतिक्रिया दिन्छन्। हामीले पत्ता लगाएका होमस्टे, होटल वा अन्य नयाँ गन्तव्यमा जाने निर्णय गर्न उनीहरू हाम्रो कन्टेन्टलाई आधार मान्छन्। धेरैजसो कन्टेन्ट क्रिएटरहरू आफैं ब्रान्ड खोजेर सहकार्य गर्दै यो क्षेत्रमा टिकिरहनुभएको छ।

यतिखेर विदेशमा बसेर नेपालमा लगानी गर्नेहरूको संख्या पनि बढिरहेको छ। विदेशमा रहेका नेपालीले नेपालका जैविक उत्पादन, मह, कोदो, फापर, हस्तकला तथा अन्य स्थानीय उद्यममा लगानी गर्न थालेका छन्। कतिपयले होटल बुकिङ एप्स निर्माण गरेका छन्, ट्राभल गियर उत्पादन गरेर बिक्री गरिरहेका छन्। उनीहरू आफ्ना वस्तु तथा सेवाको प्रवर्द्धनका लागि हामीसँग सहकार्य गर्न चाहन्छन्। हामी पनि यदि उत्पादित सामग्री वा सेवा विश्वसनीय छ भने प्रवर्द्धन गर्न तयार हुन्छौं।

सामाजिक सञ्जाल मनिटाइजेसन नहुँदा हामीलाई अन्याय भएको छ। डिजिटलमा युट्युबको मात्रै भर परेर हुँदैन। हामीले खिचेका भिडियो, बनाएका कन्टेन्ट टिकटक, इन्स्टाग्राम, फेसबुकमा बग्रेल्ती गइरहेका छन्। भ्युज लोभलाग्दो भए पनि त्यहाँबाट आयआर्जन हुँदैन। हाम्रो मिहिनेत व्यर्थ गइरहेको छ। यी प्लाटफर्म नेपालमा पनि मनिटाइज हुने विकल्प खुला गर्न सरकारले सामाजिक सञ्जाल प्लाटफर्मलाई दबाब दिनुपर्छ।

हामी केही गर्छौं, प्रोडक्ट निकाल्छौं, भिडियो डकुमेन्ट्री बनाउँछौं, कथा सुनाउँछौं, जलवायु परिवर्तनसम्बन्धी सचेतनामूलक कन्टेन्ट बनाउँछौं। तर हामीलाई कहीं, कतैबाट कुनै सपोर्ट छैन। गायक, गायिका, कलाकारहरूलाई विभिन्न संघसंस्थादेखि गाडी कम्पनी, बैंक, हस्पिटल सबैले विश्वास गर्छन्, हामीलाई चाहिँ गर्दैनन्। हामीले चाहिँ हाम्रो सबै कुराहरू क्लिएर देखाउनुपर्छ, विश्वासै गर्दैनन्। सेवा सुविधा मागेको होइन, काम सजिलो बनाइदिनुपर्छ भन्नेसमेत छैन। योचाहिँ दुःखलाग्दो कुरा छ।

नेपालमा जति पनि ठाउँमा यात्रा गरिन्छ, स्थानीयको साथ र सहयोग धेरै राम्रो छ। मलाई त लाग्छ, ९९ प्रतिशत मान्छेहरू राम्रा हुन्छन्। यसले गर्दा नेपालमा ट्राभल गर्न सजिलो छ। ट्राभल कन्टेन्ट मात्रै बनाउने, 'हिडेन डेस्टिनेसन' पत्ता लगाउनेहरू नेपालमा धेरै छैनन्। युट्युबमा चार-पाँच वटा मात्रै यस्ता च्यानल छन्। इन्स्टाग्रामका लागि मात्रै ट्राभल कन्टेन्ट बनाउने वा ब्रान्डहरूसँग सहकार्य गरेर बनाउने पनि त्यति धेरै छैनन्। तर डिजिटल कन्टेन्ट क्रिएसनको भविष्य नेपालमा राम्रो हुनेमा हामी ढुक्क छौं।

ट्राभल कन्टेन्ट क्रिएटरका लागि पनि स्कोप बढेको बढ्यै छ। ठुल्ठूला होटलदेखि कैयौं ठाउँमा ऱ्याफ्टिङ, प्याराग्लाइडिङ खुलिरहेका छन्। यहाँ मात्र होइन, विश्वभर नै ट्राभल र एड्भेन्चर मन पराउने मान्छे छन्। सबैलाई जोड्ने सेतु भनेकै डिजिटल प्रविधि हो, भिडियोमार्फत हो, प्रचारप्रसारको माध्यम नै यही हो। चिठी पठाएर घुम्न आउनुस् भन्ने जमाना अहिले छैन र त्यो फर्केर आउने पनि होइन। त्यसकारण यस्तो काम गर्नेलाई अवसर खुल्दै जाने निश्चित छ।

# बिजुली निर्यात होइन, खपत बढाऔं

## निजी क्षेत्रले ठूलास्तरका 'रियल स्टेट' तथा औद्योगिक परियोजनामा लगानी सुस्त बनाए, जसकारण स्टिलको खपत अपेक्षाभन्दा कम भयो



शरद गोल्छा
कार्यकारी निर्देशक, हुलास ग्रुप

दुई दशकयता नेपालको स्टिल र फलाम उद्योगमा उत्पादन उल्लेखनीय वृद्धि भएको छ। आयातित उत्पादनमा निर्भर नेपालको अवस्था फेरिएको छ। स्टिल पाइप, रिबार्स र संरचनात्मक स्टिल स्वदेशमै उत्पादन गरेर नेपालले बलियो आधार विकास गरिसकेको छ।

स्टिल क्षेत्र मुलुकको निर्माण, पूर्वाधार र औद्योगिक वृद्धिसँग प्रत्यक्ष जोडिएको छ। सबैभन्दा ठूलो चुनौती कच्चा पदार्थको अभाव नै हो। नेपालसँग फलाम खानी वा स्थानीय रूपमा कच्चा स्टिल उत्पादन गर्ने स्रोत छैन। एचआर कोइला, बिलेट, स्क्रयाप स्टिलको आयातमा निर्भर छौं। यसले मूल्य उतारचढावको जोखिम बढाएको छ। यसले उत्पादन लागत बढाउँछ। भारत तथा चीनजस्ता ठूला स्टिल उत्पादन गर्ने देशबाट आयातित उत्पादनसँग प्रतिस्पर्धा गर्न कठिन बनाउँछ।

बितेका पाँच वर्षमा धेरै ठूलो पूर्वाधार परियोजनाबाट माग वृद्धि हुने अपेक्षा थियो। सोही अनुसार उद्योगहरूले उत्पादन सुविधा विस्तार गरेका थिए। तर, राजमार्ग, जलविद्युत् र औद्योगिक विकासमा सरकारको खर्च अपेक्षित रूपमा बढ्न सकेको छैन। निजी क्षेत्रले ठूला स्तरका 'रियल स्टेट' तथा औद्योगिक परियोजनामा लगानी सुस्त बनाए। सोही कारण स्टिलको खपत अपेक्षाभन्दा कम भएको छ। बजारमा अत्यधिक आपूर्ति सिर्जना भएको छ। तर खपत छैन। यही कारण स्टिलको मूल्यमा तीव्र प्रतिस्पर्धा उत्पन्न भएको छ।

धेरै स्टिल उत्पादक बाँच्नका लागि न्यून नाफामा बिक्री गर्न बाध्य छन्। जुन दीर्घकालीन रूपमा टिकाउ व्यवसाय मोडेल होइन। स्वस्थ प्रतिस्पर्धाको सट्टा, मूल्ययुद्ध उत्पन्न भएको छ।

नेपालमा उत्पादन पर्याप्त भए पनि निर्यातमा प्रतिस्पर्धी बन्न सकेका छैनौं। केही कम्पनीले भारत र बंगलादेशमा स्टिल निर्यात गरेका छन्। तर हाम्रो उत्पादन लागत महँगो छ। उत्पादन लागत भारत र चीनको तुलनामा अझै उच्च छ। उच्च लागत हुनुका प्रमुख कारण महँगोमा कच्चा सामग्री आयात, अस्थिर ऊर्जा लागत हो। त्यस्तै, सरकारको सहुलियत नहुनु र सीमित औद्योगिक पूर्वाधार हो। यही कारण उत्पादन लागत बढ्दो छ।

स्टिल निर्यात बढाउन सरकारले महत्त्वपूर्ण नीतिगत परिवर्तन गर्न आवश्यक छ। विद्युत् निर्यात गर्नेभन्दा नेपालले यो विद्युत् औद्योगिक उत्पादनमा प्रयोग गर्नुपर्छ। तयारी अवस्थामा रहेको स्टिल निर्यातमा जोड दिनुपर्छ। सरकारले नयाँ उत्पादन प्लान्टको लागत घटाउन पुँजीगत अनुदान प्रदान गर्न जरुरी छ। उद्योग विस्तारका लागि वित्तीय सहायता अनुदान उपलब्ध गराउनुपर्छ। उत्पादन लागत घटाउन उद्योगहरूका लागि प्रतिस्पर्धात्मक विद्युत् शुल्क लागू गर्नुपर्छ। यदि सही नीति लागू गरिएमा नेपाल स्टिल निर्यातका लागि क्षेत्रीय केन्द्रको रूपमा स्थापित हुन सक्छ।

नेपालको स्टिल उद्योगका लागि अर्को ठूलो चुनौती जनशक्ति हो। साधारण श्रमिकको कमी नभए पनि धातु विज्ञान, औद्योगिक स्वचालन, स्टिल उत्पादन र गुणस्तर नियन्त्रण जस्ता क्षेत्रमा दक्ष जनशक्तिको अभाव छ। दक्ष जनशक्ति उत्पादनमा सरकारको भूमिका महत्त्वपूर्ण रहन्छ। नेपालका उत्कृष्ट इन्जिनियर र प्राविधिक विदेशमा काम गर्न रुचाउँछन्। कारण सेवा सुविधा र तलब नै हो। यसले स्थानीय उद्योगमा प्रतिभाको अभाव सिर्जना गरेको छ। कम्पनीहरूलाई योग्य जनशक्ति फेला पार्न कठिनाइ भएको छ। नेपालको शिक्षा प्रणाली उद्योगका आवश्यकतासँग मेल खाँदैन। धेरै इन्जिनियरिङ र प्राविधिक स्नातकसँग स्टिल उत्पादन, प्रि-इन्जिनियरिङ बिल्डिङमा व्यावहारिक अनुभवको कमी छ। यसका लागि तालिम आवश्यक पर्छ।

अनियमित ब्याजदरले उद्योग व्यवसाय क्षेत्रमा हतोत्साहित बनाउँछ। नेपालसँग अतिरिक्त विद्युत् भए पनि प्रसारण र वितरणमा समस्या देखिन्छ। यही कारण उद्योगले पूर्ण रूपमा उपयोग गर्न सकिरहेका छैनन्। सरकारले बारम्बार आयात शुल्क र करको दर परिमार्जन गर्दा पनि समस्या निम्त्याएको छ। यसले व्यवसाय सञ्चालनलाई अनिश्चित बनाउँछ। नीति परिवर्तनको क्रममा सरोकारवाला उद्योगी व्यवसायीसँग परामर्श गर्न जरुरी छ। नेपालमा भ्याट फिर्ता गर्ने प्रभावकारी प्रणाली छैन। ठूला पुँजीगत परियोजनालाई धेरै समस्या हुन्छ। यसले नगद प्रवाहमा समस्या ल्याउँछ।

नेपालको भूमिसम्बन्धी कानुनले पनि औद्योगिक विस्तारमा असम्भव बनाएको छ। उद्योगीहरूले ठूला जग्गा प्राप्त गर्न सकेका छैनन्। औद्योगिक वृद्धिलाई सक्षम बनाउन सरकारले भूमि नीति परिमार्जन गर्नुपर्छ।

सरकारले विकास-निर्माता संस्थासँग सहकार्य गरेर स्टिल केन्द्रित व्यावसायिक तालिम कार्यक्रम सञ्चालन गरिनुपर्छ। विश्वविद्यालय, पूर्वाधार विकास र स्टिल कम्पनीबीच साझेदारीमा प्रोत्साहन गर्नुपर्छ। व्यावहारिक तालिमका लागि सहकार्यलाई बढावा दिनुपर्छ। त्यस्तै, सीप विकासमा लगानी गर्ने कम्पनीलाई कर प्रोत्साहन र अनुदान प्रदान दिनुपर्छ, जसले दक्ष जनशक्ति विकासमा सहयोग पुऱ्याउन मद्दत गर्छ। आयात शुल्क र एक्साइज करमा बारम्बार परिवर्तन रोक्नुपर्छ। औद्योगिक विस्तारलाई समर्थन गर्न भूमि सीमा कानुनमा सुधार ल्याउनुपर्छ। नगद प्रवाहमैत्री अर्थात् भ्याट फिर्ता ढिलाइ हुने समस्या समाधान गर्नुपर्छ। नेपालले विश्वस्तरीय प्रतिस्पर्धी स्टिल उद्योग बनाउन आयात शुल्क र कर स्थिर बनाउनुपर्छ। बारम्बार परिवर्तनले भविष्यको योजना बनाउन असम्भव हुन्छ। कम्पनीलाई छुटयुक्त विद्युत् दर प्रदान गर्नुपर्छ, यसले उत्पादन लागत कम गर्नेछ र प्रतिस्पर्धात्मकता बढाउनेछ।

# फोहोरमा मोहर होइन, डलर

**विदेशमा थुप्रै नेपाली युवाले फोहोर वर्गीकरण गरिरहेका छन्, उनीहरूको सपना स्वदेशमै फोहोर प्रशोधन उद्योग खोल्ने छ, वातावरण बनाउन सके उनीहरू फर्कन्छन्**





सिलसिला आचार्य
संस्थापक निर्देशक,
अभ्नी भेन्चर्स

एसएलसीपछि धेरैको उद्देश्य हुन्छ- साइन्स पढ्ने, चिकित्सक बन्ने। मेरो र परिवारको सपना योभन्दा बाहिर थिएन। तर मेरो बाटो एकाएक मोडियो। एमबीबीएसको तयारीभन्दा वातावरण विज्ञानमा रुचि बढ्यो।

चिकित्सक बन्ने सपना बीचमै छाडेर म वातावरण क्षेत्रतर्फ लागें। चिकित्सक क्षेत्रमा प्रशस्त जनशक्ति छन् या आवश्यकताभन्दा पनि बढी जनशक्ति उत्पादन भइरहेको छ। भीडमा हराउनुभन्दा नयाँ क्षेत्रमा केही काम गर्ने र वातावरण संरक्षणसँगै समाजलाई केही योगदान गर्ने उद्देश्यसाथ वातावरण क्षेत्रमा सक्रिय हुन थालें। सन् २०११ मा नर्वेको युनिभर्सिटी अफ बर्गनबाट जैविक विविधता र वातावरण व्यवस्थापनमा स्नातकोत्तर सकेर नेपाल फर्किएसँगै म वातावरण व्यवस्थापन, प्लास्टिक न्यूनीकरण, फोहोरमैला प्रशोधनदेखि रोजगारी सिर्जनामा रमारहेकी छु।

सन् २०१३ मा 'हाम्री बहिनी सामाजिक उद्यम' मार्फत काम सुरु भएको हो। बेचिएका चेलीबेटीदेखि पछिडिएका समुदायको पुनरुत्थानदेखि आर्थिक सशक्तीकरणमा जोड दिनु यसको उद्देश्य थियो। अहिले 'अभ्नी भेन्चर्स प्रशोधन केन्द्र' मार्फत फोहोरमैला प्रशोधनको काम भइरहेको छ। यस प्लास्टिक रिसाइक्लिङ सञ्जालअन्तर्गत करिब चार सय जना श्रमिकले रोजगारी पाएका छन्। हजारौं टन फोहोर पनि व्यवस्थापन भइरहेको छ। प्लास्टिक न्यूनीकरण र पर्यावरणीय उद्यममार्फत फोहोरमैला व्यवस्थापनमा अग्रसर छु।

वातावरण र मानव स्वास्थ्यमा ह्रास ल्याउने तत्त्व हो, प्लास्टिक। सुरुवातको अभियानका रूपमा प्लास्टिक न्यूनीकरणको अभियान सञ्चालनमा ल्याउनु थियो। हामीले सोचेजस्तो सहज वातावरण थिएन। प्लास्टिकबिना कसरी किनमेल गर्ने भन्ने दुविधा धेरैमा थियो। धेरै मात्रामा प्लास्टिक खपत हुने स्थान थियो भाटभटेनी सुपरमार्केट। यसका लागि दुई नीति लिएर अगाडि बढ्यौं। एउटा, प्लास्टिकबिना किनमेल गर्ने, अर्को, दिदीबहिनीलाई झोला उत्पादनमार्फत स्वरोजगार बनाउने। त्यसका लागि हामीले १०० रुपैयाँको झोला ३० रुपैयाँमा बिक्री गर्‍यौं। यस अभियानमा थुप्रै युवा जुट्नुभयो। केही हदमा प्रभावकारी पनि बन्यो।

अहिले भाटभटेनीलगायत सुपरमार्केटमा प्लास्टिकका झोला पाइँदैनन्। २०७२ वैशाख १ मा काठमाडौं उपत्यकामा प्लास्टिक निषेध घोषणा गर्‍यौं। तर पनि यो अझै पूर्ण न्यूनीकरण हुन सकेको छैन। कानुनको प्रभावकारी कार्यान्वयन नभएसम्म यो अवस्था कायमै रहने देखिन्छ। समयमै न्यूनीकरण गर्न सकिएन भने भविष्यमा यसले भयावह स्थिति ल्याउने देखिन्छ। यसका लागि सम्बद्ध निकाय र सरोकारवालाको चासो हुनु अति जरुरी छ।

पछिल्लो समय फोहोरमैला व्यवस्थापन निकै पेचिलो बन्दै गएको छ। नेपालको संविधानले फोहोरमैला व्यवस्थापनको जिम्मा पालिकालाई दिएको छ। यसका कारण संघीय र प्रदेश सरकार उन्मुक्त देखिन्छन्। स्थानीय तहको जिम्मा हामीले किन हस्तक्षेप गर्ने भन्ने अवस्था छ। तर ७५३ पालिकाको फोहोरमैला व्यवस्थापनमा एकरूपता देखिँदैन।

केही पालिकाले फोहोरमैला व्यवस्थापनलाई प्राथमिकता दिएका छन्। तर धेरैले यसलाई प्राथमिकतासाथ उठान गर्न सकेका छैनन्। बाटो र पूर्वाधार मात्रै विकास हो भन्ने परम्परावादी सोचबाट धेरैजसो पालिका माथि उठ्न सकेको अवस्था छैन। पालिकालाई संघीय र प्रदेश सरकारको खासै सहयोग छैन। पालिकाको जिम्मामा रहेको काम हामीले किन गर्ने भन्ने मानसिकता छ।

काठमाडौं महानगरपालिकाको सन्दर्भमा थुप्रै कम्पनीले फोहोर उठाइरहेका छन्। फोहोरमैला वर्गीकरणलाई नीतिगत रूपमै अघि सारिएको छ। तर हालसम्म कार्यान्वयनमा आउन सकेको छैन। प्लास्टिक बाल्नु हुँदैन भन्ने नीति छ। तर त्यो लागू भएको अवस्था छैन। यसका लागि स्थानीय तह र कम्पनीबीच सहकार्य भएर बाध्यकारी नीति बनाउन आवश्यक छ। वर्गीकरण नगरी फोहोर नउठ्ने नीति बनाएर कठाइसाथ अगाडि बढ्ने हो भने हरेक घर फोहोर वर्गीकरण गर्न बाध्य हुन्छन्। संघ, स्थानीय तह र सरोकारवालाबीचको समन्वय र सहकार्यमा मात्रै दिगो रूपमा फोहोरमैला व्यवस्थापन गर्न सकिन्छ।

फोहोरलाई फोहोरका रूपमा हेर्‍यौं भने त्यो फोहोर नै हुन्छ। फोहोरलाई मोहर भन्ने धेरै पुरानो नारा हो। तर फोहोरबाट मोहर होइन, यसलाई प्रशोधन गरी निर्यात गर्न सक्यौं भने डलर नै कमाउन सकिन्छ। नेपालमा फोहोरबाट आम्दानी गर्न थुप्रै अवसर छन्। तर यसलाई सरकारी तवरबाट नै नीति नियममार्फत प्रोत्साहन गर्न आवश्यक छ। सरकारी स्तरबाट पर्याप्त सहयोग र प्राथमिकता नभएकाले यसलाई अवसरका रूपमा अघि बढाउन सकिएको छैन। भारतीयहरूले फोहोरमा अवसर र रोजगारी पाएका छन्। नेपालीहरू भने रोजगारीका लागि बिदेसिइरहेका छन्। फोहोरबाट नै आम्दानी गर्न सकिने चेतना विकास भइसकेको छैन।

फोहोरको वर्गीकरण गरेर ल्याडफिल साइटमा पठाउने व्यवस्था मिलाउन सके फोहोरबाट नै देशलाई समृद्ध बनाउन सकिन्छ। यसका दुईवटा फाइदा छन्। एउटा त ल्यान्डफिल साइटलाई भार नपर्ने, धेरै फोहोर प्रशोधित भएर जाने र अर्को उद्यमशीलता विकास हुने र राजस्व पनि वृद्धि हुन्छ। फोहोरबाट उद्यमी विकास गर्न सकिने अवस्था छ। तर सरकारी तवरबाट नीति नियममार्फत प्रोत्साहन गर्न सकिएको छैन। जसले गर्दा यो क्षेत्रमा उजागर भएका अवसर पनि पहिल्याउन सकिएको छैन।

विदेशमा नेपाली थुप्रै युवाले फोहोर वर्गीकरण गरिरहेका छन्। उनीहरूको सपना छ स्वदेशमा आएर फोहोर प्रशोधन उद्योग खोल्ने। नीतिगत तहबाट वातावरण बनाउन सकियो भने युवाहरू यस क्षेत्रमा उद्यमशीलताका लागि फर्कने छन्। फोहोर प्रशोधित गर्न मुख्य समस्या नै ठाउँको समस्या छ। सरकारी तवरबाट स्थानका लागि पहल भएको छैन। फोहोर वर्गीकरण गर्ने स्थान नभएर धेरै त गाडीमा नै छान्ने काम हुन्छ। कुनै फर्म वा व्यक्तिले आफैं जग्गा खोजेर लगानी गर्छु भन्दा काम गर्ने वातावरण बनाउन सकिन्न। समुदायदेखि सरकारले नै असहयोगको वातावरण सिर्जना गरिरहेको अवस्था छ।

पढेलेखेका मानिसले फोहोरमा काम गर्नँहुँदैन भन्ने भाष्य चिर्दै अघि बढेकी छु। फोहोर व्यवस्थापन भनेको समाजलाई धेरै योगदान दिन सकिने काम हो। र पढेलेखेका मानिसले पनि गर्ने काम हो भन्ने सन्देश दिन सफल भएकी छु।

वातावरण संरक्षण र फोहोर व्यवस्थापनको क्षेत्रमा १३ वर्षदेखि सक्रिय छु। सुन्दा अचम्म लाग्ला, जति फोहोर फाल्न सहज छ, प्रशोधन गर्न त्यति सहज छैन। तर पछिल्लो समय पालिकाले तोकेको कवाडी करको प्रत्यक्ष असर व्यवसायीले भोगिरहेका छन्। ल्यान्डफिल साइटमा १० टन फोहोर फाल्न जम्मा ४ सय रुपैयाँ लाग्छ। त्यो फोहोरलाई ल्यान्डफिलबाट बचाएर लगानी गरेर प्रशोधन गर्दा १० टन फोहोर उद्योगमा पठाउन कवाडी कर मात्र ११ हजार तीन सय रुपैयाँ तिर्नुपर्छ। फोहोरमा व्यवसायीहरू करले निरुत्साहित भएको अवस्था छ। व्यवसायीलाई प्रोत्साहन गर्नुपर्ने क्षेत्रमा सरकारले निरुत्साहित गरिरहेको छ।। यसले हरित अर्थतन्त्र बनाउने, फोहोरबाट नेपालले डलर कमाउने बनाउने उद्देश्य र सोचमा धक्का दिएको छ। उद्यमीहरूलाई अग्रसर बनाउन र लगानीको वातावरण सुरक्षित गर्न यस्ता कर होइन, छुट र सहुलियत दिन सक्नुपर्छ।

यो काम गर्दा फोहोरमैला उद्यमीहरूले वरिपरिको समाजबाट समर्थनभन्दा बढी समस्या भोग्नुपर्छ। पाइला-पाइलामा चुनौतीको सामना गर्नुपर्छ। तर पनि यो समस्याको समाधान गर्नैपर्छ भन्ने भावनाले निरन्तर लागिरहेकी छु। विदेशमा थुप्रै नेपाली युवाले फोहोर वर्गीकरण गरिरहेका छन्। उनीहरूको सपना स्वदेशमै फोहोर प्रशोधन उद्योग खोल्ने छ, वातावरण बनाउन सके उनीहरू फर्कन्छन्।

जलवायु परिवर्तन पछिल्लो समयको जल्लोबल्दो विषय हो। तर यो अहिलेको समस्या होइन, विगतको समस्या बल्झिँदै आएको हो। नेपालले अहिले अन्तर्राष्ट्रियस्तरमा न्याय र क्षतिपूर्ति माग्न थालेको छ। तर आफ्नो काम र दायित्व पनि पूरा गर्न जरुरी छ। जथाभावी उत्खननले बाढीपहिरोको समस्या बढ्दै गएको छ। स्थानीय तहले ल्यान्डफिल साइटमा आगो लगाउने, प्लास्टिक बाल्ने र डढाउने काम गरिरहेका छन्। त्यसकारण यस्ता काम रोक्न नीतिगत तहबाट नै पहल गर्न आवश्यक छ। अर्को महत्त्वपूर्ण पक्ष हिमालको सरसफाइ पनि हो। पछिल्लो समय धेरै पर्यटकलाई हिमाल आरोहण अनुमति दिन थालिएको छ, जसले गर्दा हिमाल सुन्दरतामा पनि ह्रास आउन थालेको छ।

# रैथाने खानाले बढाउँछ पर्यटन

हामीले 'डेस्टिनेसन वेडिङ' मा ध्यान दिनुपर्छ, भारतीयलाई लक्ष्य गर्दै चितवन, भैरहवा, लुम्बिनी र जनकपुरमा यो सुरु भएको छ, अब हिमाललाई केन्द्रमा राखेर यसलाई व्यापक बनाउनुपर्छ

सुप्रिया कुँवर
संस्थापक प्रबन्ध निर्देशक,
गाँसबास को एन्ड सपर क्लब

नेपालको विकासका लागि प्रमुख र महत्त्वपूर्ण आधार पर्यटन नै हो। यस क्षेत्रमा हामीले केही गरेका छौं। तर यति मात्र पर्याप्त छैन। मैले केही वर्ष विभिन्न होटलमा नेतृत्व तहमा काम गरें। त्यहाँ काम गर्दा खासगरी दक्षिण एसिया र दक्षिण पूर्वी एसियाली देशका पर्यटक र पर्यटकीय गतिविधिलाई बुझ्न र अनुभव गर्न पाएँ। पछिल्लो समय भने म खासगरी सहरी र रात्रिकालीन पर्यटनमा केन्द्रित छु।

सहरी र रात्रिकालीन पर्यटनमा ठमेल नेपालको केन्द्र नै हो। पछिल्लो समय नेपालमा पनि घरका सबै जनाले काम गर्ने चलन बढेको छ। खासगरी टिनएजर पनि आफ्नो सामान्य खर्चका लागि बाबुआमा वा अभिभावकको भर पर्न छाडेका छन्। कामलाई सम्मान गर्न थालिएको छ। पछिल्लो समय युवा वर्ग पनि सानोतिनो नभनी काममा खटिने गरेका छन्। सबैले काम गर्न थालेकै कारण घुम्न जाने, आउटिङ जाने वा मनोरञ्जनका लागि खर्च गर्ने चलन बढेको छ। करिब एक दशकयता त 'फुड कल्चर' निकै बढेको छ। विदेशतिर जस्तो पब वा बार कल्चर पनि बढेको छ।

थाइल्यान्ड, इन्डोनेसिया, कम्बोडिया, लाओसलगायत देशबाट हामीले सिक्नुपर्छ। ती देशले सबै प्रकारका पर्यटकलाई लक्ष्य गर्दै आफ्ना पूर्वाधार विकास गरे। र, त्यहीअनुसार कम खर्च हुनेदेखि महँगा तथा विलासी होटलको व्यवस्था गरे। ती देशका सरकारले पनि भिसा प्रक्रिया निकै सहज बनाइदिए। पर्यटकलाई पनि व्यक्तिगत रुचिअनुसारका विकल्पको व्यवस्था छ। तर ती देशभन्दा हामी निकै हिसाबले धनी छौं। खालि हामीसँग समुद्र छैन। इन्डोनेसियाको बालीमा दुईवटा मात्र सिजन छन् भन्दा हुन्छ। कि पानी परेको परेकै हुन्छ, नत्र घाम लागेको लाग्यै। थाइल्यान्ड पनि लगभग उस्तै हो। तर हामीसँग ६ ऋतु छन्। तर त्यसअनुसार उपयोग गर्न सकिएको छैन।

हामीले 'डेस्टिनेसन वेडिङ' मा ध्यान दिनु जरुरी छ। पछिल्लो समय भारतीयलाई लक्ष्य गर्दै चितवन, भैरहवा/लुम्बिनी तथा जनकपुरमा यो सुरु भएको छ। हिमाललाई नै केन्द्रमा राखेर यो योजना अघि सार्नुपर्छ। सोलुखुम्बु, पोखरा, मुस्ताङलगायत क्षेत्रलाई यसका लागि भरपुर सदुपयोग गर्न सकिन्छ।

लुम्बिनी पोखरालगायतका स्थानमा विमानस्थल बनेका छन्। तर हामीले त्यसलाई सदुपयोग गर्न सकेको जस्तो लाग्दैन। भारतमा हाल भइरहेको कुम्भ मेलालाई नै हेरौं न। करोडौं पर्यटक त्यहाँ पुगे। नेपालबाटै लाखौं पुगेका छन्। त्यसरी नै हामीले लुम्बिनीलाई पनि बौद्ध धर्मसँग जोडेर त्यस्तै फेस्टिभल आयोजना गर्न सकिन्छ। यसमार्फत बौद्ध धर्म मान्ने वा त्यसप्रति आस्था भएका मानिसलाई विश्वभरबाट



ल्याउन सकिन्छ। त्यस्तै, पोखरालाई भारतीय हाई एन्ड टुरिस्टलाई केन्द्रित गरेर पर्यटन प्रवर्द्धन गर्न सकिन्छ। पोखरा र आसपासमा हुने साहसिक पर्यटनसम्बन्धी गतिविधि पनि पर्यटक आकर्षित गर्नका लागि प्रयोग गर्न सकिन्छ।

पर्यटकको सख्या त केही बढेको छ तर कोभिडअघिको जस्तो भने भइसकेको छैन। मार्चदेखि खासगरी चिनियाँ र अन्य एसियाली देशका पर्यटकको आवागमन बढ्ने अपेक्षा छ। तर त्यसरी आउने पर्यटकमा पनि कति खर्च गर्ने पर्यटक आउँछन् र काठमाडौंबाहिर वा हिमाली क्षेत्रसम्म पुग्छन् भन्ने हाम्रा लागि निकै महत्त्वपूर्ण छ।

त्यसमाथि उनीहरूले कति खर्च गर्छन् भन्ने पनि महत्त्वपूर्ण छ। यसमा हामीले भुटानबाट सिक्न सक्छौं। भुटानले 'सस्टेनेबल डेभलपमेन्ट फि' अन्तर्गत दैनिक कम्तीमा एक सय अमेरिकी डलर खर्च गर्नुपर्ने नियम बनाएको छ। त्यति नै नभए पनि हामीले पनि मापदण्ड बनाउन जरुरी छ। तिनै पर्यटकले भुटान, थाइल्यान्ड, भारतमा राम्रो खर्च गर्न सक्छन् भने हाम्रोमा पनि सक्छन्। मापदण्ड नभएकै कारण पनि हामीले काठमाडौं, पोखरालगायत सहरमा 'बजेट टुरिस्ट' हरूको सख्या बढी देखेका छौं।

हाम्रोमा सरचना बनाउँदा प्राकृतिक सुन्दरता बिगार्ने काम भएका छन्। कतिपय पर्यटक ट्रेकिङ तथा हिमाल आरोहणका लागि नेपाल आउने भएकाले त्यसमा ध्यान दिनुपर्छ। हवाई उडानका विषयमा पनि हाम्रो सेवा त्यति प्रभावकारी देखिँदैन। त्यसमाथि पछिल्लो समय भएका विभिन्न हवाई दुर्घटनाले पनि पर्यटनमा प्रभाव परेको छ। ठमेल विश्वकै उत्कृष्ट नाइटलाइफ भएको स्थान हो। यहाँ लाइभ म्युजिक गर्ने पर्पल हेज, सिसादेखि क्लबमा एलओडीलगायतले फरक गरिरहेका छन्। पर्पल हेजमा हरेक दिन दुईवटा ब्यान्डले ३/३ घण्टा प्रस्तुति दिन्छन्। एलओडी ठमेलकै अर्को उदाहरण हो। विश्वकै उत्कृष्ट मध्येको क्लब हो। यसको जस्तो सेटअप र एम्बियन्स एसियामै छैन।

पब, बार, क्लब, दोहोरी साँझ, डान्सबार सबै फरक-फरक प्रकृतिका व्यवसाय हुन्। तर हाम्रो प्रशासनले सबैलाई एउटै टोकरीमा हालेर हेर्छ। यसकारण पनि व्यवसायीलाई असर पुग्छ। हामीले यी सबैलाई फरक-फरक स्थानमा सञ्चालन गर्ने व्यवस्था मिलाउन सक्दा राम्रो हुन्थ्यो। तर ठमेलमा यत्रतत्र छन्। त्यसकारण अब विकास हुने सहरमा भने सुरुबाटै योजना बनाउनुपर्छ। सुरुसुरुमा प्रहरी प्रशासनले अनावश्यक दुःख दिन गरेको थियो। यसमा अहिले भने सुधार भएको छ।

हामीसँग भेग अनुसारका निकै धेरै खाना छन्। तर तिनलाई विश्वव्यापी बनाउन सकेका छैनौं। भारतको बटर चिकेन र नान विश्वव्यापी बनेको छ। हाम्रो देशमा पनि विभिन्न संस्कृतिसँग जोडिएका दर्जनौं खाना छन्, जसलाई हामीले विश्वव्यापी बनाउन सक्छौं। पछिल्लो समय मास्टर सेफ सन्तोष शाहले नेपाली खानालाई विश्वव्यापी बनाउन निकै राम्रो योगदान पुर्‍याइरहनुभएको छ। सम्भावना हुँदाहुँदै पनि हामीले हाम्रो परम्परा र संस्कृतिसँगै हाम्रो खानालाई विदेशमा प्रवर्द्धन गर्न सकेका छैनौं। स्थानीय खानालाई रैथाने स्वादसँगै प्रवर्द्धन गर्न सके खानासँगै हाम्रो कला संस्कृतिको पनि प्रचारप्रसार हुन्छ। र, आन्तरिकसँगै बाह्य पर्यटक आकर्षित गर्न सकिन्छ।

काठमाडौं उपत्यकामा नै युवाले सञ्चालन गरेका 'टुसा' र 'रैथाने' ले निकै राम्रो गरिरहेको छ। जुजु धौलगायत स्थानीय उत्पादनलाई डिजर्टका रूपमा प्रयोग गर्ने प्रवृत्ति बढेको छ। किम्बु, लालीगुराँस, भुइँचुक, डालेचुकलगायत स्थानीय उत्पादनबाट विभिन्न ककटेल, मकटेल बनाउन सकिन्छ।

रोल्पा, डोल्पातिर हुने डालेचुकमा अमला वा सुन्तलामा भन्दा करिब पाँच गुणा बढी भिटामिन 'सी' हुन्छ। हामीले 'गाँस बास को' मा पनि डालेचुक (सी बक्थोर्न) प्रयोग गरेर 'ग्रेट हिमालयन' ककटेल बनाएका छौं। एक हिसाबले सानै भए पनि यो हामीले गरेको प्रयास हो। हामीले सी बकथोर्न काठमाडौं अर्गानिक्सबाट ल्याउने गर्छौं। कहिलेकाहीं किसानबाट पनि लिन्छौं।

'गाँस बास को' तथा १९७० को डिस्को थिममा सञ्चालित सपर क्लबमा हामीले अधिकांश ड्रिक्स रैथाने र अर्गानिक प्रयोग गर्छौं। हामीले 'गाँस बास को टनिक' सिग्नेचर ड्रिक्स नै नेपाली ब्रान्ड चियाबाट बनाउँछौं। त्यसका लागि हामीले सुइरोको 'बटरफ्लाई पी फ्लावर टी' प्रयोग गर्छौं। तर हामीले यस्ता स्थानीय उत्पादनलाई खासै बढावा दिन सकेका छैनौं। निजी क्षेत्रबाट केही प्रयास र योगदान त भएको छ। तर सरकारी तहबाट केही भएको छैन।

गाँजा भन्यो भने यसलाई प्रतिबन्ध लगाउनैपर्छ भन्ने सोच विकसित भयो। हेम्प भनेको निकै धेरै तरिकाबाट प्रयोग हुन सक्ने बोट हो। यसबाट जुत्ता, चप्पल, झोलाका साथै सर्ट-प्यान्टलगायत कपडा पहिरन बनाउन सकिन्छ। 'क्यानाबिज आयल' औषधीय गुणका रूपमा पनि प्रयोग भएको छ। यसको उचित नियमन हुनुपर्नेमा प्रतिबन्ध लगाइरहेका छौं।

पछिल्लो समय युवाले निकै 'क्रिएटिभ र इनोभेटिभ आइडिया' अघि सारेका छन्। विभिन्न क्षेत्रमा नयाँ काम गरेका छन्। तर हाम्रो नेतृत्व परम्परागत सोचबाट माथि उठ्न सकेको छैन। यसको मुख्य कारण उनीहरूको हुर्काइ, अध्ययन र सोच हो। उनीहरूले गाजा भन्नेबित्तिकै खराब कुरा हो र बिग्रेका मानिसले मात्र प्रयोग गर्ने भन्ने सोच्छन्। त्यसैले यसलाई बन्द होइन, नियमन गर्नुपर्छ।

नेपाललाई साहसिक पर्यटनको गन्तव्यका रूपमा पनि विकास गर्न सकिन्छ। स्काई जम्प, बन्जी जम्प, प्याराग्लाइडिङ, जिपलाइन, ऱ्याफ्टिङ, हट एयर बलुनलगायत साहसिक पर्यटनलाई हिमाली क्षेत्र र पहाडी हरियालीसँग जोडेर प्रवर्द्धन गर्न सकिन्छ। निजी क्षेत्रबाट केही काम भएका पनि छन्। तर यसमा पनि सुरक्षा र नियमनका विषयमा समस्या देखिने गरेको छ।

हामीले 'मेडिकल टुरिजम' का रूपमा पनि विकास गर्न सकिने सम्भावना उत्तिकै छ। खासगरी सीमाक्षेत्रमा भारतीय पर्यटकलाई लक्ष्य गरेर 'मेडिकल टुरिजम' को प्रवर्द्धन गर्न सके यसले देश विकासमा पनि उल्लेखनीय योगदान पुर्‍याउन सक्छ।

विश्व बजारका हिसाबले नेपाल सानो ठाउँ हो। त्यसैले निजी क्षेत्रबाट मात्र सम्भव हुँदैन। यसमा सरकारी पहल नितान्त आवश्यक छ। हालै बेलायतका राजकुमार तथा एडिनबर्गका ड्युक एडवार्डले नेपाल भ्रमण गरे। केही समयअघि साउदी अरबका राजकुमार फैसल बिन फहरान अल साउद नेपाल आए।

भारतीय कंग्रेसका नेता राहुल गान्धी व्यक्तिगत भ्रमणमा आए। अझ कतारका राजकुमार मोहम्मद विन अब्दुल्लाह अल थानीले कोभिडकै बेला आएर सोलुखुम्बुको अमादब्लम हिमाल आरोहण गरे। तर हामीले यस्ता महत्त्वपूर्ण घटनालाई विश्वभर पुर्‍याउनबाट चुक्यौं। सरकारी नेतृत्वमा निजी क्षेत्रलाई पनि समेट्दै यस्ता विषयको प्रचारप्रसार गर्न सके हाम्रो बोलीसँगै भोलि पनि फेरिनेछ।

# पर्यावरणमैत्री प्रविधिबाट यातायातमा उन्नति

**निम्न वर्गलाई बैंकको पहुँचसम्म पुग्नै गाह्रो छ, उनीहरूलाई किन पत्याइँदैन, वित्तीय सहयोग झन्झटिलो बन्दा उनीहरूको सीप र जाँगर कसरी खेर जान्छ, मैले बुबाको दुःखबाट थाहा पाएँ**

**सोनिका मानन्धर**
कम्प्युटर इन्जिनियर एवं सहसंस्थापक, एलोई

कोभिडका कारण लकडाउन भएपछि यसै घरमा बसेर इमेल हेर्दै थिएँ। त्यसमा एउटा इमेल थियो, नेसनल जियोग्राफिकको। त्यहाँ मलाई भिडियो कलमा जोडिन भनिएको थियो। किन हो, केका लागि हो ? थाहा थिएन।

जब म भिडियो कलमा जोडिएँ, एउटा अप्रत्याशित खुसीले मलाई पर्खिरहेको रहेछ। खासमा म नेसनल जियोग्राफिकको 'इमर्जिङ एक्सप्लोरर' अवार्डका लागि मनोनीत भएछु। र, सन् २०२० को 'क्लास अफ इमर्जिङ एक्सप्लोरर' अवार्ड प्राप्त गरें। यो सम्मान मूलतः वातावरणीय परिवर्तनसम्बन्धी उत्कृष्ट काम गरेका विश्वभरका युवामध्ये छनोट गरी प्रदान गरिन्छ।

यस्ता अवार्डले मनोबल बढाउने रहेछन्। र, आफ्नो कर्ममा थप बलियो भएर लाग्न प्रेरित गर्ने रहेछन्। त्यसबेला म महिलालाई प्रविधि र पर्यावरणसँग जोड्दै उद्यमी बनाउन एउटा सहयोगी भूमिकामा थिएँ। खासगरी लेखपढ नगरेका, कुनै उद्यमका लागि आधार नभएका, बैंक वा वित्तीय सहयोगको मेलोमेसो नपाएका महिलालाई उद्यमशील बनाउने जुक्ति थियो यो। यसअन्तर्गत कुनै पनि महिलालाई उद्यम-व्यवसाय गर्न बैंक वा वित्तीय संस्थाबाट ऋण लिएर लगानी गर्ने व्यवस्था मिलाइन्छ। विशेषतः वातावरणमैत्री लघु उद्यमका लागि यस्ता वित्तीय परियोजना सञ्चालन गरिन्छ। बैंकबाट ऋण कसरी लिने ? कसरी लगानी गर्ने ? कसरी त्यसको प्रतिफल लिने भन्ने आधारभूत वित्तीय ज्ञान नभएकाका लागि हामीले साँघुको काम गर्छौं।

साथी टिफनी टोडले यस कामका लागि मलाई साथ दिएकी थिइन्। उनीसँग मेरो भेट अमेरिकाको सिलिकन भ्यालीमा भएको थियो। प्रविधि जगत्‌को केन्द्र मानिने सिलिकन भ्यालीमा म नेपालबाट छात्रवृत्ति पाएर तालिमका लागि पुगेकी थिएँ। मैले कम्प्युटर इन्जिनियरिङमा स्नातक गरें। त्यसपछि नासा एमिसभित्र रहेको सिंगुलरिटी युनिभर्सिटीमा ग्लोबल सोलुसन्स कार्यक्रममा भाग लिने अवसर पाएर सिलिकन भ्याली गएँ। सानैदेखि मलाई अन्तरिक्षसम्बन्धी जान्न र त्यस क्षेत्रमा करियर बनाउन मन लाग्थ्यो। तर, सिलिकन भ्यालीमा टिफनीसँग भेट भएपछि मेरो बाटो मोडियो। त्यहाँ चार महिना तालिम लिएपछि हामी नेपाल फर्किएर 'एलोई' संस्था स्थापना गर्‍यौं। यो सन् २०१९ को कुरा हो।

एलोईको शाब्दिक अर्थचाहिँ कुनै वस्तुलाई बलियो बनाउन दुईवटा धातुको प्रयोग गरेर अथवा मिश्रणबाट बनेको एउटा मेटल हो। यही कुरालाई व्यावसायिक रूपमा दुई पक्ष वित्त र प्रविधि मिलेर बलियो बन्ने अर्थसहित कम्पनीको नाम एलोई राखियो। यस संस्थामार्फत 'ग्रास रुट' मा रहेका महिलालाई वित्तीय पहुँचमा पुऱ्याउने र कुनै न कुनै उद्यमका लागि आवश्यक प्रक्रिया मिलाइदिने काममा जुट्यौं। खेतीपाती, दुग्ध उत्पादन, कफी उद्यममा केही गर्न चाहनेहरू हाम्रो प्राथमिकतामा थिए।

कृषि क्षेत्रमा काम गरियो भने सामान्य स्तरका मान्छेसम्म पुग्न सकिन्छ भनेर सन् २०१७ मा सिलिकन भ्यालीमा हामीले माटो परीक्षण गर्ने प्रविधिको विषयमा काम सुरु गरेका थियौं। तर यो प्रविधि किसानका लागि खर्चिलो पर्ने देखियो। त्यसैले कुनै सामान्य किसानका लागि आवश्यक लगानीका लागि पैसा नै सबैभन्दा ठूलो समस्या रहेछ भन्ने थाहा पायौं।

मानिस उद्यम व्यवसाय गर्न चाहन्छन्। तर, उनीहरूसँग लगानी गर्ने पैसा हुँदैन। पैसा परिचालन गर्ने उपाय हुँदैन। त्यस्ता व्यक्तिलाई बैंक एवं वित्तीय सहयोग लिन हामीले सफ्टवेयर तयार गर्‍यौं। त्यसमार्फत उनीहरूको आवश्यक कागजात तयार गरेर वित्तीय संस्थामा पेस गर्ने संयन्त्र बनाइयो। यसले गर्दा उनीहरूलाई बैंकसम्म पुग्न र वित्तीय सहयोग प्राप्त गर्न सहज भयो। त्यससँगै हामीले उनीहरूलाई वित्तीय साक्षरता तालिम दियौं। यसबाट उनीहरूले प्राप्त ऋणलाई सही समयमा, सही ठाउँमा, सही ढंगले लगानी गर्न सक्ने अवस्था भयो।



खासमा यी सबै काममा हामीले प्रविधिलाई जोडेका थियौं। उनीहरूले पाउने पैसा पनि टोकनका रूपमा प्राप्त हुन्थ्यो। त्यसलाई खर्च गर्न पनि डिजिटल प्रणालीमा प्रवेश गर्नुपर्ने हुन्थ्यो। यसो गर्दा उनीहरूले जथाभावी खर्च गरेर ऋणमा डुब्ने जोखिम मात्र कम हुँदैनथ्यो, कारोबार प्रस्ट र पारदर्शी पनि हुन्थ्यो।

मैले यो काम नै किन गरें ? के कुराले मलाई यसतर्फ डोऱ्यायो ? त्यसको छुट्टै कथा छ।

खासमा म सामान्य परिवारमा जन्मिएँ। मेरो बुवाआमाले पढ्न-लेख्न पाउनुभएन। बुवाले परिवारको गर्जो टार्न गार्मेन्ट व्यवसाय सुरु गर्नुभयो। त्यसअघि बुवाले जे-जति कमाउनुभयो, त्यो सबै गार्मेन्टमा लगाउनुभएको थियो। तर, गार्मेन्ट व्यवसाय डुब्यो।

त्यसपछि बुवाले गुजाराका लागि विक्रम टेम्पो चलाउने योजना बनाउनुभयो। तर टेम्पो किन्ने कसरी ? उहाँसँग पैसा थिएन। बैंकबाट ऋण लिनुभयो तर त्यस क्रममा अनेक झन्झट खेप्नुपऱ्यो। जसोतसो ऋण लिएर टेम्पो चलाउन सुरु गर्नुभयो। त्यसको कमाइबाट अर्को टेम्पो पनि जोड्नुभयो। यद्यपि सरकारले उक्त विक्रम टेम्पो प्रदूषणको कारण चलाउन बन्देज लगायो। हुँदाछँदाको मेलो पनि खोसिएपछि उहाँले माइक्रोबस किनेर चलाउने तयारी गर्नुभयो। यसका लागि पनि बैंकबाट ऋण लिनुपर्ने हुन्थ्यो। यतिबेला उहाँले बैंकबाट सस्तो ब्याजमा ऋण पाउनुभएको थियो।

'ग्रास रुट' का मान्छेलाई बैंकको पहुँचसम्म पुग्न कति गाह्रो छ, बैंकले उनीहरूलाई किन पत्याउँदैन, वित्तीय सहयोग झन्झटिलो बन्दा उनीहरूको सीप र जाँगर कसरी खेर जान्छ ? मैले बुवाको दुःखबाट सबै थाहा पाएँ। त्यसैले मेरो बुवा जस्तै मान्छेलाई म साँघु बनेर सहयोग गर्न चाहन्थें, ताकि उनीहरूले बुवाले जस्तो सास्ती खेप्न नपरोस्। उनीहरूलाई बैंक एवं वित्तीय संस्थाबाट सजिलै ऋण प्राप्त गर्न, सो ऋणलाई सही ढंगले परिचालन गर्न र आफ्नै बलबुतामा उद्यमशील बन्न सहयोगी बन्न चाहन्थें।

मेरा बुवाले जस्तै समस्या भोगिरहेका कति टेम्पो चालक अझै पनि त्यहाँ होलान् भनेर म टेम्पोको कार्यालयमै पुगें। तर, अन्तर्मुखी स्वभावकी भएकाले मलाई आफ्नो कुरा राख्न अहसज भयो। त्यसैले त्यहाँबाट निस्किएर म रत्नपार्क नजिक पुगें र एउटी दिदीले चलाएको टेम्पुमा बसें।

उनीसँगै केही समय यात्रा गरेर मैले उनको दुःखसुख बुझ्ने कोसिस गरें। उनी खाना खाने समयमा ग्यारेजमा गएर ब्याट्री चार्ज गर्दै रहिछन्। त्यहाँ अरू टेम्पो चालक दिदीहरूसँग भेट भयो। भलाकुसारी गर्दै जाँदा थाहा पाएँ, उनीहरूले टेम्पोको ब्याट्रीबाट हुनसम्मको दुःख पाएका रहेछन्। जति ब्याट्री परिवर्तन गरे पनि ६ महिनाभन्दा बढी टिक्दै नटिक्ने। राम्रो ब्याट्री लगाउन पैसाले नपुग्ने। एउटा ब्याट्रीको १०-१२ लाख रुपैयाँ पर्ने रहेछ।

यत्तिका पैसा खर्चेर ब्याट्री कसरी किन्ने ? न आफूसँगै पैसा छ ? न कुनै सहकारी वा बैंकले ऋण दिन्छ ?

त्यहाँबाट फर्केपछि हामीले योजना बनायौं– सफा टेम्पोमै लक्ष्य गरेर केही गरौं। खासगरी ब्याट्रीका लागि आवश्यक पैसा जुटाउन हामीले वित्तीय संस्थासँग सहजीकरण गर्ने गरी एउटा संयन्त्र बनायौं। त्यसअन्तर्गत जसलाई पैसा चाहिएको हो, उनीहरूको कागजात हाम्रो संस्थामार्फत तयार गर्ने व्यवस्था मिलाइयो। सो कागजात सम्बन्धित बैंक वा वित्तीय संस्थामा पेस गरेर ऋणको सहज पहुँचमा पुग्न र ऋणको सदुपयोग सुनिश्चित गर्ने प्रविधिबाट सहयोग गरिदियौं।

यी सबै कामलाई व्यवस्थित गर्न हाम्रो एलोई नामक फिनटेक नामक कम्पनीबाट कृषाला र बिजुली पावर नामक सफ्टवेयर छ। कुनै उद्यम गर्न चाहनेको विवरण यस सफ्टवेयरमा राखिन्छ। उनीहरूको विवरण हेरेर बैंकले ऋण दिन्छ। यसबाट लघु उद्यमीलाई पारदर्शी ढंगले ऋण उपलब्ध गराउन सकिन्छ। ऋण लिने क्रममा ठगी वा झन्झट हुन नदिन यो काइदा अपनाइएको हो। सो ऋण डिजिटल टोकनका रूपमा प्राप्त हुन्छ।

काठमाडौंमा चल्ने सफा टेम्पोका महिला चालकले डिजिटल टोकन प्रयोग गर्दै आएका छन्। टेम्पो चलाउन सिकेर आफैं उद्यम गर्न चाहनेलाई पनि यसले साथ दिएको छ। जसले गर्दा यस क्षेत्रमा महिलाहरूको सहभागिता बढ्दो छ। फलस्वरूप काठमाडौंबाहिर, धादिङ, नुवाकोट, सिन्धुपाल्चोक, मकवानपुर, चितवन, नवलपरासी, तनहुँ, कास्की, रसुवा, काभ्रेपलाञ्चोकसम्म यसको विस्तार भएको छ।

एलोईले साना उद्योग गर्न चाहने महिलालाई वित्तीय सहयोगका लागि सम्पूर्ण स्रोत र साधन जुटाइदिने काम गर्छ। वित्तीय सहयोग मात्रले नपुग्ने रहेछ। उनीहरूलाई प्रविधिमैत्री पनि बनाउनुपर्ने थियो। जबकि उनीहरूले एसएमएस गर्न पनि जानेका हुँदैनन्। इन्टरनेट प्रयोग गर्न, एप चलाउन डराउँछन्। त्यसैले हामीले कम्पनीमार्फत सबैभन्दा पहिले उनीहरूलाई एसएमएस प्रयोग गर्न सिकायौं।

अहिले उनीहरूको सहजतालाई हेरेर हामीले प्रविधिलाई अरू सहज बनाउँदै लगेका छौं। अहिले अफलाइन एप पनि सञ्चालनमा आइसकेको छ। अब मुख्य प्रश्न हो, कसरी कुनै साधारण व्यक्ति हामीसँग जोडिने त ? कसरी हाम्रो सेवा प्राप्त गर्ने त ?

कुनै पनि व्यक्तिले हाम्रो सीमाभित्र रहेका पेसा उद्यम गर्न एलोईमार्फत ऋणको आवेदन दिन सक्छन्। हामीले आवश्यक प्रक्रिया पूरा गरी कम्पनी सम्बद्ध बैंक तथा वित्तीय संस्थासँग ऋणका लागि प्रक्रिया सुरु गर्छौं।

ऋणी व्यक्तिको ऋणको इतिहास तथा अन्य कागजात मूल्यांकन गरेर बैंकले ऋणका लागि स्वीकृति दिन्छ। एलोईले बनाएको टोकन ऋणीको मोबाइल म्यासेजमार्फत पठाइन्छ। उक्त टोकन लिएर एलोई सम्बन्धित विक्रेताकहाँ गएर ऋणीले आफ्नो सामग्री लिन सक्छन्। यसपछि सो टोकन लिएर विक्रेता बैंकमा जान्छन् र टोकन बराबरको रकम झिकेर ल्याउन सक्छन्। यसले गर्दा ऋणको दुरुपयोग नहुने र ऋण प्राप्त गर्न पनि सहज हुन्छ।

बैंकहरूले विद्युतीय गाडीको ब्याट्री किन्न बिनाधितो ऋण दिन्छन्। विद्युतीय टेम्पोको हकमा भने ऋण तिर्ने प्रक्रिया अलि फरक छ। त्यसमा ऋण लिने व्यक्तिले ऋण निकाल्नुभन्दा अगाडि कुनै एउटा सहकारीमा प्रतिदिन केही पैसा जम्मा गर्ने सम्झौता गरेको हुन्छ। उक्त ऋणीले जम्मा गरेको रकम सहकारीले बैंकमा लगेर ऋणको किस्ता तिरिदिन्छ। यस किसिमको प्रक्रियाबाट अहिले धेरै जना लाभान्वित छन्। सामान्य मान्छेमाथि गरिएको यो लगानी नै हाम्रो ऊर्जा र उत्साहका स्रोत हुन्।

# स्थिर नीति, तीव्र विकास

बेलाबेलामा हुने सरकार परिवर्तनले उद्योगी व्यवसायी समस्यामा छन्, स्थिर सरकार बनेर दीर्घकालीन नीति लिइदिए राम्रो



हिमांशु गोल्छा
निर्देशक,
दिवाकर गोल्छा अर्गनाइजेसन

नेपालमा स्टिल र आल्मुनियम क्षमताभन्दा बढी उत्पादन भएको छ। धेरै उद्योग स्टिल उत्पादनमा लागेकाले यहाँ खपतभन्दा उत्पादन बढी भएको हो। स्टिलमा विभिन्न उत्पादन छन्। टीएमटी मात्रै वार्षिक १० लाख टन आवश्यक पर्छ। जस्तापाता र पाइप दुई/ढाई लाख टन उत्पादन हुन्छ। यिनको बजार माग भने १ लाख २० हजार हाराहारी छ।

भूकम्पपछि बजारमा जस्तापाताको माग ह्वात्तै बढ्यो। आयात सजिलो बनाउन सरकारले जस्तापाताको नेपाल गुणस्तर चिह्न (एनएस चिह्न) पनि खारेज गर्‍यो। तर हालसम्म एनएस चिह्न लागू भएको छैन। यसकारण कतिपयले गलत मार्केटिङ गरिरहेका छन्।

बढी उत्पादन भएको जस्तापाता निर्यातको पहल पनि भएको छ। नेपाल र भारतबीच यस विषयमा बैठक बसेको थियो। अहिले भारत निर्यात गर्दा ब्युरो अफ इन्डियन स्ट्यान्डर्स (बीआईएस) को समस्या छ। बीआईएस पहिला नवीकरण भएकै थियो। पछिल्लो समय भारतले आन्तरिक उद्योग फस्टाऊन् भनेर बीआईएसमा केही कडाइ गरिरहेको छ। हामीले भारतबाटै कच्चापदार्थ ल्याएर भारतमै निर्यात गर्ने हो, त्यसैले भारतले समस्या पार्नु नपर्ने हो। यस्ता समस्या समाधानमा सरकारको गम्भीर पहल जरुरी छ। बीआईएसको अवरोध चार महिनादेखि जारी छ। यसले निर्यातमा पनि असर पारेको छ।

उद्योगीका पनि केही समस्या छन्। बजार बनाउन सकेका छैनन्। गुणस्तरीय उत्पादन गर्न सकेका छैनन्। प्रतिस्पर्धी बनाउन सरकारले नेपाली उद्योगलाई २४ घण्टा विद्युत् दिने नीति ल्याउनुपर्छ। सरकारको नीतिमा पनि समस्या छ। उसले बजेट ल्याउँछ, कार्यान्वयन हुँदैन। ठूला उद्योग सञ्चालन गर्न पनि समस्या छ। किनकि १० बिघाको हदबन्दी छ।

उद्यमीलाई भारत र चीनको भन्दा राम्रो सेवासुविधा दिन सके देश 'उद्यमको हब' बन्न सक्छ। यसमा गृहकार्य जरुरी छ। राजस्व पूर्वाधारमा खर्च गर्नुपर्छ। मुख्यत: स्टिल क्षेत्रमा गर्नुपर्छ। विश्वको अभ्यास पनि यही हो। भारतमा स्टिल मन्त्रालय नै बनेको छ। हामीले पनि यसैगरी काम गरे समग्र अर्थतन्त्रलाई नै राम्रो हुन्छ। पूर्व-पश्चिम रेलमार्ग र काठमाडौंमा मेट्रोको काम सुरु भए धेरै विकास हुन्थ्यो। यसले धेरै क्षेत्रमा प्रभाव पार्छ।

आउँदा २०/२५ वर्षसम्म नेपालमा धेरै अवसर छ। यसका लागि सरकारले युवाहरूलाई स्वदेशमै राख्न केही काम गर्नुपर्छ। नेपालमा २० वटा रोलिङ मिल छन्। मुलुकभित्र पाँच उद्योगले जस्तापाता उत्पादन गर्दै आएका छन्। पहिलो उद्योग भने हुलास स्टिल नै हो। नेपालमा एचआर कोइलाको वार्षिक खपत ४/५ लाख टन हो। प्लान्ट लगाउँदा खर्च ५ गुणा बढ्छ। लगानी पनि त्यहीअनुसार गर्नुपर्छ। विद्युत् धेरै चाहिन्छ। अहिले पनि ट्रान्समिसन लाइनको नेटवर्क बलियो नहुँदा समय-समयमा लोडसेडिङ खेप्नुपरेको छ। सरकारले यसतर्फ ध्यान दिनुपर्छ।

औद्योगिक क्षेत्रका लागि कोरिडोरै तोकेर कम्तीमा १० वटा क्षेत्र पहिचान गरे रोजगारी बढ्छ।

# ग्रासरुटबाटै खेलाडी हुर्काउने जिम्मेवारी

**जुनियर खेलाडीलाई राम्रो क्रिकेटर बन्नु छ भने नियमित प्रशिक्षण जारी राख्नुपर्छ, नेपाली क्रिकेटमा अवसर एकदम कम पाइन्छ तर वर्षमा एक-दुई प्रतियोगिता खेल्न पाउने भए पनि आफूलाई तयारी अवस्थामा राख्नुपर्छ**

**अनिल साह**
राष्ट्रिय क्रिकेट खेलाडी

गाउँघरमा दाइहरूले क्रिकेट खेलेको देखेरै नै मैले पनि क्रिकेट खेल्न थालेको थिएँ। एसएलसीपछि प्लस टु अध्ययनका लागि कलैयाबाट हेटौंडा गएपछि क्रिकेटप्रति बढी नै लगाव भयो। निरन्तर खेल्न थालें। यू-१६ का प्रतियोगितामा मैले मकवानपुर जिल्लालाई प्रतिनिधित्व गर्दै खेलेको थिएँ। क्रिकेटमा अहिले धेरै परिवर्तनहरू भएका छन्।

सुरुआती कुरा गर्नुपर्दा स्कुलस्तरीय क्रिकेट खेल्दा कलैयाको सिद्धेश्वर क्रिकेट मैदानको अवस्थामा जुन थियो, अहिले त्योभन्दा पनि खस्किएको छ। त्यो बेला मैदानको लेभल बराबर थियो। घाँससमेत हरियो देखिन्थ्यो। क्रिकेट खेल्न तीनवटा टर्फ विकेट थिए। अहिले एउटामात्र टर्फ विकेट छ। मैदानको अवस्था झन् बिग्रिँदै गएको छ। बाउन्ड्री वाल नभएकाले मैदानको बीच भागबाट मान्छेहरू हिँडडुल गर्ने गर्छन्। कलैयामा यसबाहेक अरू कुनै मैदान नहँदा अन्य खेलका खेलाडी पनि यही खेल्न आइपुग्छन्। जसले गर्दा मैदानको व्यवस्थापनमा समस्या देखिएको छ। बिहान र साँझ युवाहरू मैदानमा फुटबल खेल्छन्। दिउँसो क्रिकेटका खेलाडी अभ्यास गर्छन्। बिदाको दिन स्कुलका विद्यार्थीको खेल्ने थलो पनि यही एउटा मैदान हो।

खेल मैदान जोगाउन सर्वप्रथम चारैतर्फ बाउन्ड्री वाल निर्माण गर्नुपर्ने आवश्यकता छ। मैदानको व्यवस्थापन बारा क्रिकेट संघलाई दिइँदा राम्रो हुन्छ। टर्फ विकेट निर्माण, ग्राउन्डको रेखदेखका लागि कर्मचारी नियुक्त गर्न आवश्यक छ। कलैयाका अन्य ठाउँमा खेलमैदान नभएकाले बिदाको दिन स्कुले विद्यार्थी क्रिकेट र फुटबल खेल्न यही मैदानमा पुग्ने गर्छन्। मैदानको उचित व्यवस्थापनका लागि स्थानीय खेलाडीलाई छुट्टै खेल्ने ठाउँको व्यवस्था मिलाउन सक्नुपर्छ। जुन बेला हामीले क्रिकेट सुरु गरेका थियौं, त्यो बेला मैदानको अवस्था अहिलेभन्दा धेरै राम्रो थियो। त्यसबेला स्थानीय क्लब र जिल्लाको छनोट खेल हुँदा मात्र यहाँ खेल्न पाउँथ्यो। कलैया घर आउँदा अभ्यास गर्ने यही मैदान हो।

राष्ट्रियस्तरको कुरा गर्ने हो भने नेपाल क्रिकेट संघ (क्यान) बाट अहिले खेलाडीहरूले राम्रै सेवासुविधा पाएका छन्। पहिला कुनै प्रतियोगिता हुँदा साता १० दिनको क्याम्प राखेर खेलाडीले गर्थे। अहिले चाहिँ कुनै ठूलो प्रतियोगिता हुँदा ४० देखि ४५ दिनसम्मको क्याम्प राखिन थालेको छ। प्रोफेसनल स्टाफहरूको समेत व्यवस्था छ। ब्याटिङ कोच, बलिङ कोच, फिल्डिङ कोच, स्ट्रेन्थ एन्ड फिजिकल कोच, फिजियोलगायतका सपोर्टिङ स्टाफको व्यवस्था गरिएको छ। जसले गर्दा खेलाडीले धेरै नै सुविधा पाएका छन्। विगतको तुलनामा अहिले घरेलु क्रिकेटका प्रतियोगिता धेरै हुन थालेका छन्। दुई वर्षअघिसम्म घरेलु क्रिकेट प्रतियोगिताको नाममा पीएम कपमात्र थियो। अहिले एनपीएल, जय ट्रफी, अर्जुन ट्रफी, निधि कप, वीर गणेशमान कपलगायतका प्रतियोगिताले घरेलु क्रिकेट खेलाडीलाई राम्रो अवसर दिइरहेको छ।

सन् २०१८ मा पहिलो पटक म राष्ट्रिय टिममा प्रवेश गर्दा र अहिलेको तुलनामा खेलाडीले धेरै नै अवसर र सेवासुविधा पाएका छन्। त्यसबेला सपोर्ट स्टाफ एक जना मात्र हुन्थ्यो। एक प्रशिक्षक र एक म्यानेजर मात्र हुन्थ्यो। त्यसबेला न क्याम्प धेरै दिनको हुन्थ्यो न त छनोट प्रतियोगिता नै धेरै हुन्थे। राष्ट्रियस्तरको प्रतियोगिता गराएर अहिले खेलाडी छनोट गर्न थालिएको छ। विगतमा सिधै क्याम्पमा बोलाएर अधिकांश खेलाडी छनोट गरिन्थ्यो। खेलाडीले अहिले आफ्नो क्षमता प्रदर्शन गर्ने भरपूर मौका पाएका छन्। पहिला त खेलाडीले तलब पनि पाउँदैनथे। अहिले त खेलाडीले वर्गीकरणअनुसार नियमित तलब पाउने व्यवस्था छ। क्यानकै आयोजनामा तीन महिनाअगाडि सम्पन्न नेपाल प्रिमियर लिग (एनपीएल) ले खेलाडीलाई व्यावसायिक बन्न अझ धेरै प्रेरित गरेको छ। खेलाडीले अन्तर्राष्ट्रिय खेलाडीसँगै अभ्यास गर्ने मौका पाएका छन्। ड्रेसिङ रुम सेयर गरेका छन्। अन्तर्राष्ट्रिय एक्सपोजर पाएका छन्। यी सब कुराले नेपाली खेलाडीको मनोबल बढेको छ। एनपीएल जस्ता 'फ्रेन्चाइज' लिगले नेपाली खेलाडीलाई आत्मनिर्भर बन्न सजिलो पारेको छ।

क्यानले अहिले प्रत्येक प्रदेशमा प्रशिक्षक नियुक्त गरेको छ। हरेक जिल्लामा एउटा प्रशिक्षक राखेर नियमित अभ्यास गराउन सकियो भने अझ धेरै राम्रा खेलाडी उत्पादन हुन्छन्। ग्रासरुटमा अझ राम्रो संरचना बनिसकेको छैन। घरेलु क्रिकेटलाई बलियो बनाउन क्लबस्तरीय क्रिकेट प्रतियोगिता सञ्चालनमा ल्याउन आवश्यक छ। क्लबस्तरीय क्रिकेटमा स्थानीय खेलाडीले प्रदर्शन गर्ने अवसर पाउँछन्।

विगतमा कलैयामा क्रिकेट प्रतियोगिता खेल्न मुम्बई र कोलकाताबाट क्लबहरू आउने गर्दथ्यो। भैरहवा, विराटनगर र काठमाडौंका टिमसमेत प्रतियोगिता खेल्न कलैया क्रिकेट मैदानमा पुग्थ्यो। तर, अहिले त्यो स्थिति छैन। अहिले कुनै पनि क्लब क्रिकेट प्रतियोगिता आयोजना हुन सकेको छैन। जसले गर्दा खेलाडीले धेरै खेल्ने अवसर पाएका छैनन्। स्थानीय खेलाडीमा क्रिकेटप्रति त्यति उत्साह देखिँदैन। मिहिनेत मात्र गरेका छन्। तर, समयमा प्रतियोगिता खेल्ने अवसर पाउँदैनन्। त्यसले गर्दा उनीहरू निरुत्साहित हुन्छन्।

वर्षमा एकचोटि यू-१६, यू-१९ र पीएम कपको छनोट प्रतियोगिता भएमात्र खेलाडीले खेल्न पाउने हुन्छ। स्थानीयस्तरमा अरू प्रतियोगिताहरू पनि हुनुपर्छ। पहिला स्कुल र कलेजस्तरीय प्रतियोगिता धेरै हुन्थे, तर, अहिले ती प्रतियोगिताहरू पनि हराएर गएका छन्। यी प्रतियोगिताहरू सञ्चालन भएमा सानै उमेरदेखि खेलप्रति उत्साह हुन्थ्यो। उनीहरूले खेल प्रदर्शनको एउटा प्लेटफर्म पाउँथे। सानो उमेरदेखि खेल्ने त्यही खेलाडी पछि सिनियर टिमबाट खेल्थे। आजकल ती प्रतियोगिताहरू भएका छैनन्। पहिला स्थानीयस्तरमा समेत क्लबहरूबीच प्रतियोगिता हुन्थे। अहिले ती क्लबहरूसमेत लोप भएका छन्। बारामै गन्जभवानीपुर, प्रसौनी, भलुहीतिर प्रतियोगिता हुन्थ्यो। खेलाडीले प्रतियोगिताहरू खेल्न पाएन भने प्रशिक्षण गरेर मात्र केही फाइदा नै हुँदैन। आफ्नो खेल प्रदर्शन गर्न कुनै प्लेटफर्म त हुनुपर्छ नै। प्रतियोगिता हुँदै हुँदैन, खेलाडीले सिधै छनोट खेल खेल्ने बाध्यता छ।

वर्षमा एकचोटि छनोट खेलमात्र हुने र अरू प्रतियोगिता नहुने हो भने त परिवारबाट पनि खेलाडीले साथ र सहयोग पाउन गाह्रो हुन्छ। प्रतियोगितामा राम्रो प्रदर्शन गरेपछि परिवारले थाहा पाउँछ अनि 'प्राउड' फिल गर्छन्। आफ्नो बच्चालाई खेल्न परिवारले पनि प्रोत्साहन दिन्छ।

मेरो गाउँ पतौरामा समेत त्यतिबेला टेनिस बलको क्रिकेट खेल्ने दुई टिम हुन्थे। तर, अहिले एउटा टिमका लागि समेत खेलाडी अपुग हुन्छ। गाउँमा पहिला जस्तो क्रिकेट खेलिँदैन अहिले। क्रिकेट मात्र हैन, अन्य खेलकुद गतिविधि पनि शिथिल अवस्थामा पाउँछु। क्रिकेट मात्र हैन पहिला फुटबल, भलिबल जस्ता खेल पनि गाउँमा युवाले अत्यधिक रुचाउँथे। यसबारे जिल्ला खेलकुद विकास समितिले गम्भीर भएर विचार गर्नुपर्ने अवस्था आइसकेको छ।

खेलकुदप्रति नयाँ पुस्ता किन आकर्षित नभएका हुन् भन्ने विषयमा गहन विचारविमर्श गर्नुपर्छ। यस क्षेत्रमा खेलकुद पूर्वाधार निर्माण नहुँदा पनि खेलकुदप्रति आकर्षण नभएको हो जस्तो लाग्छ। कलैयामात्र नभई यहाँबाट १२ किलोमिटरको दूरीमा रहेको आर्थिक तथा व्यापारिक नगरी वीरगन्जमा समेत खेलकुद पूर्वाधार निर्माण हुन सकेको छैन। झन्डै एक दशकदेखिको जग्गाको मुआब्जा विवाद समाधान नहँदा नारायणी क्रिकेट मैदानको स्तरोन्नति हुन सकेको छैन। छेउमै रहेको नारायणी फुटबल मैदान पनि लामो समयदेखि जीर्ण छ। पुनर्निर्माणका लागि सरकारले बजेट उपलब्ध नगराउँदा निर्माण कार्यले गति लिन सकेको छैन।

नेपाली क्रिकेटमा अहिले पनि अवसरहरू कम नै छन्। जुनियर खेलाडीलाई राम्रो क्रिकेटर बन्नु छ भने नियमित प्रशिक्षण जारी राख्नुपर्छ। नेपाली क्रिकेटमा अवसर एकदम कम पाइन्छ। वर्षमा एक दुइटा प्रतियोगिता भए पनि त्यसका लागि आफूलाई तयार राख्नुपर्छ। त्यसका लागि कति अभ्यास गर्नुपर्छ, कति मिहिनेत गर्नुपर्छ, आफूलाई कसरी फिट राख्नुपर्छ भन्ने विषयमा सिनियरले जुनियरलाई सिकाउन आवश्यक हुन्छ। जिल्लामा प्रशिक्षक नियुक्त गरिएका छैनन्। छनोट खेलका लागि मात्र प्रशिक्षक नियुक्त गरिन्छ। त्यही भएर जिल्लामा सिनियर खेलाडीले नै जुनियरको रेखदेख र बढावा गर्नुपर्छ। अन्तर्राष्ट्रियस्तरमा नेपाली क्रिकेट अगाडि बढिरहेको छ। तर, ग्रासरुटमा घरेलु क्रिकेटको संरचना अझ कमजोर छ। त्यसका लागि खेलाडीहरू आफैंले नियमित अभ्यास गरेर प्रतियोगिताका लागि तयार राख्न सक्नुपर्छ। जुन बेला मौका आउँछ, त्यतिबेला खेलाडीले आफ्नो क्षमता प्रदर्शन गर्न सक्नुपर्छ।

क्यान

# खेलकुदको फराकिलो दायरा

**मलाई लाग्छ हिजोका दिनमा खेलकुद एउटा रुचि र प्रतिष्ठाको क्षेत्र मात्रै थियो होला तर अहिले विश्व बजारमा खेलकुदको परिभाषा फराकिलो बनिसकेको देख्न सक्छौं**

**एरिका गुरुङ**
रजत विजेता,
१९ औं एसियाली खेलकुद

नेपाल कराते महासंघका अध्यक्ष युवराज सर (लामा) ले हालै करातेको दुई वर्षको कार्यप्रगति विवरण सार्वजनिक गर्नुभएको थियो। ती ऐतिहासिक उपलब्धिहरूको मुख्य पात्रका रूपमा मैले आफूलाई पाउँदा अत्यन्तै गौरव अनुभूति भयो। नेपाली करातेले यस अवधिमा ठूलाठूला सफलता आत्मसात् गरेको छ भने करातेबाट देशको सान र मान पनि उँचो भएको छ।

सन् २०२३ मा चीनमा भएको हाङझाउ एसियाडबाट मैले देशलाई रजत पदक दिलाउन सफल भएँ। त्यो नेपाली करातेले एसियाडमा जितेको पहिलो ठूलो पदक थियो। देशकै यति ठूलो सफलताको पात्र हुन पाउँदा मैले आफूलाई भाग्यशाली ठानेको छु। यसभन्दा २५ वर्षअघि मात्र नेपालले एसियाली खेलकुदमा रजत पदक जितेको रहेछ। सन् १९९८ को बैंकक एसियाली खेलकुदमा तेक्वान्दोकी सविता राजभण्डारीले व्यक्तिगततर्फ रजत जित्नुभएको रहेछ। जतिबेला त म जन्मेको पनि थिइनँ। अहिले मैले त्यही सफलता दिलाउन पाउँदा गौरव महसुस भयो।

एसियाडमा चीन पुग्नु एक महिनाअघि इन्डोनेसियामा भएको एसियन सितोरियो कराते च्याम्पियनसिपमा स्वर्ण पदक जित्न सफल भएँ। त्यो मेरो पहिलो अन्तर्राष्ट्रिय सहभागिता थियो। पहिलो सहभागितामै देशलाई स्वर्ण दिलाएको थिएँ। एसियन सितोरियोमा पनि नेपालले पहिलो पटक स्वर्ण जितेको थियो। त्यसले मलाई थप ऊर्जा दिलायो, मेरो आत्मविश्वास बलियो बनायो। गुरुहरूले पनि हौसला बढाउनुभयो। एसियाली खेलकुदमा पनि स्वर्ण जित्न सक्छौं भनेर प्रेरित गरिरहनुभयो। त्यही प्रेरणा र आत्मविश्वासले हाङचाउमा पुगेकी थिएँ। सुरुका खेलहरूमा राम्रो प्रदर्शन दिएँ। नतिजा पनि आयो। तर, फाइनलमा थुप्रै अन्तर्राष्ट्रिय पदक जितिसकेकी विपक्षीको सामना गर्नुपर्दा उनको अनुभवसामु मेरो कुनै जोर चलेन र स्वर्ण गुमाएँ। तर, त्यो स्वर्ण जित्ने अठोट बरकरार छ। राष्ट्रिय खेलकुद परिषद्ले अघि सारेको 'मिसन २०२६' को लक्ष्यमा दत्तचित्त भएर लागेको छु। २० औं एसियाली खेलकुद २०२६ मा जापानको नागोयामा हुनेछ। त्यसका लागि परिषद्ले मिसन २०२६ भनेर विभिन्न खेलको राष्ट्रिय टिमलाई प्रशिक्षणमा राखेको छ।

एसियाडमा पदक जितेपछि मेरो परिचय नै बदलियो। एउटी कराते खेलाडीमात्र रहिनँ। एसियाडमा ऐतिहासिक रजत पदक जित्ने खेलाडीका रूपमा चिनिन पुगें। यो मेरो मात्र उपलब्धि थिएन। समग्र नेपाली कराते र खेलकुदको थियो। कराते खेल नै पुनर्ताजगी बन्यो। देशको इतिहास रच्ने खेल बन्छ भन्ने सन्देश दिन कराते सफल भयो।

त्यसपछि मैले थुप्रै अन्तर्राष्ट्रिय प्रतियोगिता खेल्ने अवसर पाएँ। आफूले सहभागिता जनाएका सबै प्रतियोगिताबाट पदक दिलाउन सकेको छु। चाहे त्यो अमेरिकामा भएको यूएसए ओपन च्याम्पियनसिपको स्वर्ण होस् कि हाङझाउमै भएको २० औं एसियन सिनियर कराते च्याम्पियनसिपमा जितेको रजत। यसमा पनि नेपाली खेलाडीकै पहिलो ठूलो उपलब्धिको हकदारको रूपमा मैले आफूलाई उभ्याउन पाएको छु। यति छोटो अवधिमै यी सारा उपलब्धि प्राप्त गर्नु मेरो लागि त विशेषभन्दा पनि विशेष रह्यो। नेपाली करातेका लागि पनि यी उपलब्धिहरूले पक्कै ठूलो अर्थ राख्ने विश्वास छ।

नियमित प्रशिक्षणले खेलाडीहरू खारिन पाउँछन्। पछिल्लो समय हामीले राष्ट्रिय तथा अन्तर्राष्ट्रिय प्रतियोगिता खेल्ने अवसर पनि पाइरहेका छौं। त्यसले एकपछि अर्को प्रतियोगितामा आफ्नो प्रदर्शनमा सुधार गर्न पाइरहेका छौं। पछिल्लो समय कराते महासंघको ट्रेनिङ प्लान र सुविधाले आफूहरू पनि मिहिनेत गर्न खेलाडी प्रोत्साहित भइराखेका छन्। जसले मिहिनेत गर्छ, उसले नै राम्रो गर्न सक्छ भन्ने छ। त्यसले गर्दा म जस्ता धेरै खेलाडीले मिहिनेत गरिरहेका छन्। सफलता पनि पाइरहेका छन्। भविष्यमा करातेमा अझ राम्रो नतिजा ल्याउन सक्छौं भन्ने विश्वास छ।

●●●

उपलब्धि एक ठाउँमा छ, त्यसलाई जोगाउने चिन्ता अर्को ठूलो चुनौतीको पाटो हुन्छ। मैले जे उपलब्धि पाएँ, त्यसपछि मबाट करातेले, समर्थकले वा राज्यले थप आशा गर्छ नै। त्यो मेरा लागि अवसर हो भने उपलब्धि जोगाउने चुनौती पनि।

त्यसका लागि म तयार छु। मैले गर्न सक्ने मिहिनेत करातेमा कहिल्यै कम हुने छैन। जस्तो कि एसियनपछि वर्ल्ड च्याम्पियनसिप वा ओलम्पिक जस्ता ठूला प्रतियोगितामा पदक जित्ने सपना वा योजना मैले बुन्नैपर्छ। त्यो सपना पूरा गर्न पहिला तयार हुनुपर्ने त म आफू नै हो। मिहिनेत गर्ने त मैले नै हो।

तर, त्यसका लागि मलाई आडभरोसा र हौसला भने चाहिन्छ। त्यो भनेको सुविधा हो। सुविधा प्रविधिमा होस् वा अत्यावश्यक सामग्री या नियमित प्रशिक्षण। त्यसमा राज्यले कन्ज्युस्याइँ गर्न पाइन्न।

कहिलेकाहीं मन विचलित हुन खोज्छ। मैले आदर्श मानेका, नजिकबाट चिनेका, प्रशिक्षणमा सँगै सहभागी भएका साथीहरू, सिनियर दाइ-दिदीहरू विदेश पलायन भइरहेको देख्छु। त्यसले मन अमिलो मात्र हुँदैन, कहिलेकाहीं आफूलाई पनि कमजोर बनाउन खोज्दो रहेछ। तर, लक्ष्यको अगाडि म कत्ति पनि विचलित छैन।

युवाहरूको नजरबाट हेर्ने हो भने देशकै स्थिति पनि ठिक देखिँदैन। झन् खेलकुदको कुरा गर्ने हो भने त राम्रो अवस्थामा छ भन्न गाह्रै हुन्छ। अहिले पनि कतिपय खेलमा देख्छु, खेलाडीहरूले प्रतियोगिता नभएर आफ्नो क्षमता देखाउन पाइरहेका छैनन्। उत्साहित खेलाडीहरू राम्रो वातावरण नपाउँदा खेल क्षेत्रबाटै टाढिरहेको देख्छु।

१० औं राष्ट्रिय खेलकुद प्रतियोगिता एउटा उदाहरण हुन सक्छ। थुप्रै खेलका जिल्लादेखि नै म जस्ता हजारौं खेलाडीहरू प्रतियोगिता आयोजना हुन्छ भनेर पर्खिरहे। तर, निश्चित मितिमा नहुँदा उनीहरू निराश मात्र भएको पाएकी छैन, पलायनकै बाटोमा पुगिसकेको देखेको छु। राष्ट्रिय खेलकुद नयाँ-नयाँ खेलाडी निस्कने मार्ग हो। जुन मार्ग नै बन्द छ भने कसरी नयाँ र राम्रो खेलाडी पहिचान गर्न सक्छौं? मैरै कुरा गर्ने हो भने नवौं राष्ट्रिय खेलकुदबाटै उदाएकी खेलाडी हुँ म। त्यसैले प्रतिभा खोजका लागि राष्ट्रिय खेलकुद हाम्रा लागि ठूलो प्लेटफर्म बन्न सक्छ। त्यो राज्यले गम्भीर भएर बुझ्नुपर्छ।

यस्तो विषम परिस्थितिका बीच पनि नेपालमा प्रतिभाशाली खेलाडीको भने कुनै कमी देखिँदैन। सबै खेलमा त्यत्तिकै प्रतिभावान् खेलाडीहरू छन्। म उनीहरूलाई सफलता पाउनु अगाडि धैर्य, मिहिनेत वा आफ्नो खेलमा साधना गर्न भन्छु। त्यो धैर्य नगुमाउन अपिल गर्न चाहन्छु। किनकि हामी युवाहरू नै देशको उदाहरण बन्ने हो। बन्नुपर्छ। आजको मितिमा मैले त्यस्तो अभाव भोगेको छैन। तर, म देख्छु नेपाली खेलकुदमा म जस्ता धेरै एरिका छन्। जसलाई हौसला दिन सके भोलिका दिनमा नेपाली खेलकुदले अन्तर्राष्ट्रियस्तरमा ठूलो उपलब्धि प्राप्त गर्नेछ।

●●●

मलाई लाग्छ हिजोका दिनमा खेलकुद एउटा रुचि र प्रतिष्ठाको क्षेत्रमात्रै थियो होला। तर, अहिले विश्व बजारमा खेलकुदको परिभाषा फराकिलो बनिसकेको हामी देख्न सक्छौं। खेलकुद अहिले प्रतिष्ठामात्र होइन। अर्थतन्त्र, व्यापार, मनोरञ्जन, आपसी सम्बन्ध, देशको गौरव, कूटनीतिको मुख्य खम्बा बनिसकेको छ।

हाङचाउमा मैले करातेको राम्रो हल वा सुविधासम्पन्न व्यवस्थापनमात्र देखिनँ। त्यहाँ आउने दर्शक। उनीहरूले देशप्रति देखाएको समर्थन देखें। एसियाली खेलकुद ठूलो व्यापार हो भन्ने महसुस गरें। समृद्धिको मानक रहेछ भन्ने ठानें। पर्यटनको प्रचुर सम्भावना बोकेको क्षेत्र रहेछ बुझें। त्यसैले उनीहरूले खेलकुदमा प्रशस्त लगानी गरेका छन्। सानैदेखि खेलाडी बनाउन राज्यले लगानी गरिरहेको छ।

नेपाल पनि कमजोर त छैन। दक्षिण एसियाली खेलकुदमा त्यसको झलक देखेको थिएँ। तर, एसियाली खेलकुदमा जस्तो ठूलोचाहिँ थिएन। हामीले पनि त्यस्ता खेलकुद आयोजना गर्न सके देशको अर्थतन्त्र र पर्यटनमा टेवा पुग्ने विश्वास छ। क्रिकेटको एनपीएल जस्तो प्रतियोगिता हुँदा कैयौं देशका खेलाडीहरू आएर खेले। क्रिकेट ठूलो उद्योग बनेको सबैको मुखबाट सुन्न पाइयो। ठूलो प्रतियोगिता आयोजनाका साथै उपलब्धि हासिल गर्न सके हरेक खेलमा त्यो सम्भावना छ। नेपाली खेलाडीमा पनि प्रचुर क्षमता पनि छ।

त्यसका लागि सरकार र खेलकुद निकाय गम्भीरचाहिँ हुनैपर्छ। खेलकुद क्षेत्र के हो? किन लगानी गर्ने? भन्ने विषयलाई गहन रूपले बुझ्न जरुरी छ। खोक्रो आश्वासन वा कुराहरूले मात्र खेलाडीहरू दीर्घकालीन रूपमा प्रेरित हुन सक्दैनन्।

सफलता भन्ने कुरा एकैचोटि आउने होइन। सफल खेलाडी बन्न निरन्तर मिहिनेत र साधना चाहिन्छ। पारिवारिक सपोर्ट आवश्यक पर्छ। खेलाडी, प्रशिक्षक र सम्बन्धित संघको मिहिनेत मात्र भएर पुग्दैन। त्यसका लागि राज्यस्तरबाट सहयोग र पहल हुनुपर्छ। खेलाडीलाई निश्चिन्त भएर खेल्ने वातावरण बनाइदिनुपर्छ। हाम्रो जस्तो मुलुकमा खेलेर मात्र गुजारा चल्ने स्थिति छैन। त्यसले गर्दा आफ्नो रोजीरोटीका लागि अन्यत्र ध्यान दिनुपर्दा खेलाडीले आफ्नो खेलमा प्रगति गर्न सक्दैनन्। खेलाडीको प्रगति हुन नसक्नु भनेको ऊबाट राज्यले सफलता लिन नसक्नु पनि हो।

KANTIPUR DAY
32nd ANNIVERSARY
FALGUN 7TH

ekantipur.com
नयाँ पुस्ता
सपना र सम्भावना

३२औं वार्षिकोत्सव

Wednesday, 19 February, 2025

बुधबार, ७ फागुन २०८१



# महिला विश्वकप : जुनियरको अनुभव, सिनियरको अपेक्षा

**यू-१९ विश्वकपमा खेलिसकेपछि नेपालको महिला क्रिकेटले एउटा स्तरमा पुग्ने संकेत देखाएको छ, मलेसियामा सम्पन्न त्यो विश्वकपमा हाम्रो इनर्जी निकै राम्रो थियो**

पूजा महतो
सदस्य,
राष्ट्रिय महिला क्रिकेट टोली

तीन वर्षअघि जब म दिल्लीबाट पहिलो पटक क्रिकेट खेल्न नेपाल आएको थिएँ, त्यति बेलासम्म महिला क्रिकेटको खासै चर्चा पाएको थिइनँ। जब हामी आईसीसी यू-१९ विश्वकपमा पुग्न सफल भयौं, त्यसपछि यो चर्चाको विषय भएजस्तो लाग्छ। पुरुष क्रिकेट त यसअघि नै स्थापित भइसकेको थियो। यसको चर्चा परिचर्चा भइरहन्छ। तर, नेपाली महिला क्रिकेट नतिजा नभएर हो कि जुन चर्चा पाउनुपर्ने हो त्यो नपाइरहेको मैले महसुस गरेको थिएँ। नेपालको यू-१९ महिला टोली विश्वकपमा छनोट भएपछि नेपाल क्रिकेट संघ (क्यान) ले पनि यसलाई अलि बढी नै प्राथमिकतामा राखेको छ। अझै यस्तो खाले नतिजा दिने हो भने महिला क्रिकेटलाई अन्य खाले सहयोग पनि आउन सक्छ।

नेपालको महिला क्रिकेटको विकास गर्ने हो भने क्रिकेट एकेडेमीहरू हुन निकै जरुरी छ। त्यो चाहे क्यानले खोलेको होस् वा व्यक्तिले। म दिल्लीमा क्रिकेट सिकेर हुर्किएको हुँ, त्यहाँ एकछिनकै फरकमा क्रिकेट एकेडेमीहरू भेटिन्छन्। यसले क्रिकेटको संस्कार बुझाउन धेरै सहयोग गर्छ। नेपालमा पनि विभिन्न स्थानमा एकेडेमीहरू हुने हो भने महिला, पुरुष दुवैको क्रिकेट विकास धेरै नै हुन्छ। थोरै मात्र एकेडेमी भएका कारण पुरुष क्रिकेटको पनि खासै विकास भइसकेको छैन। मेरो गृहजिल्ला महोत्तरीमा त एउटा पनि क्रिकेट एकेडेमी छैन। म्याचहरू जिल्लाका प्रतियोगितामा खेल्न पनि सकिन्छ। तर, बेसिक कुरा एकेडेमीमै सिक्ने हो। बेसिक प्राविधिक सिकाइ एकेडेमीले मात्र दिन सक्छ। हाम्रो क्रिकेटको आधार बनाउन पनि एकेडेमी आवश्यक छ।

भारतमा पैसा तिरेपछि राम्रो एकेडेमीमा राम्रो सुविधाहरू पाइन्छन्। तर साना-साना एकेडेमीमा पनि बेसिक कुराहरूमा धेरै फोकस गरिन्छ। त्यही भएर होला भारतीय क्रिकेटरहरू 'स्किलफुल' हुन्छन्। मैले पनि क्रिकेटको ए-बी-सी-डी दिल्लीमै सिकेकी हुँ। डिफेन्स, ड्राइभ, कोनमा कसरी खेल्ने कुराहरू एकेडेमीमै सिकेको हो। जहाँ एउटा शटको अभ्यास हजार पटक गर्नुपर्छ। मैले एकेडेमी भर्ना भएपछि स्याडो प्रशिक्षणमात्र एक महिना गरेको थिएँ। कोन लगाएर डिफेन्स शटमा दिनभर प्रशिक्षण गरिरहनुपर्थ्यो। अर्को दिन ड्राइभको स्याडो हुन्थ्यो, ब्याटिङ होल्ड गर्न। बलिङमा पनि नेटिङ मैले धेरै पछाडि गरेको थिएँ। पहिला बल कसरी फाल्ने, थ्रो कसरी फाल्ने भनेर प्रशिक्षण गरेको थिएँ। त्यही भएर सुरुमा एकेडेमिक हिसाबमै क्रिकेट अगाडि बढ्नुपर्छ। नेपालमा अहिले पनि स्ट्रेट ब्याटले खेल्ने महिला क्रिकेटर धेरै कम छन्।

भारतका धेरै ठाउँमा म्याटिङ लगाएर खेल्छन्। वर्षाको धेरै समयमा म्याटिङमै खेल्ने गरिन्छ। हरेक स्थानमा राम्रो मैदान हुनुपर्छ भन्ने छैन। नेपालमा चाहिँ हरेक स्थानमा मैदान कम छन्। हाम्रो जिल्ला, प्रदेशको छनोट क्रिकेट खेल्दा मैले एउटै राम्रो मैदानमा खेल्न पाएकी छैन। कुनै पनि मैदानमा घाँस देखेको छैन। मैदानभित्रै ढुंगाहरू छरिएका हुन्छन्। विकेटको स्तर पनि निकै कमजोर पाइन्छ। स्कुलस्तरसम्म त यो ठीकै हुन्छ। तर जिल्ला, प्रदेशमा यो सुधारोन्मुख हुनुपर्छ। महिलाको मात्र नभएर देशको पूरै क्रिकेटलाई स्तरीय विकास गर्ने हो भने मैदानका सुविधाहरू थप्नुपर्छ।

नेपालको महिला क्रिकेट अझै राम्रोसँग खुल्न नसक्नु कारण घरेलु म्याचहरू पनि हो। घरेलु प्रतियोगिता लामो खालको हुनुपर्छ। अन्य प्रतियोगिता पनि थपिनुपर्छ। एउटा मात्र प्रतियोगिताले महिला क्रिकेट माथि आउन गाह्रो छ। अहिलेको स्थितिमा १-२ खेलबाटै महिला टोली छानिनुपर्ने अवस्था छ। कम्तीमा ४ वटा जति लामो समयसम्म चल्ने लिग खालका प्रतियोगिताहरू आयोजना गर्नुपर्छ र त्यसमा प्रधानमन्त्री कप, मेयर कप जस्ता अन्य प्रतियोगिताहरू थपिँदा राम्रो हुन्छ। लिगमा एउटा टोलीले अर्को ८ टोलीसँग खेल्न पाउनुपर्छ। प्रतियोगिता अभावका कारण खेलाडीहरूले कम खेल्न पाउँछन्। कम खेल्न पाउँदा खेलाडीहरू मिहिनेतका साथ प्रशिक्षण गर्न जोस देखाउँदैनन्। अभ्यास खेलहरू पनि ४० ओभरको खेल्यो भने खेलाडीको स्किल विकास हुन्छ। अहिले त हामीलाई ट्वान्टी-२० ओभर टिक्नै गाह्रो भएजस्तो देखिन्छ। हप्तामा एक दिन भए पनि ४० ओभरसम्मको खेल खेल्ने हो भने यसले हाम्रो खेलमा धेरै सुधार ल्याउँछ। यसले धैर्यसाथ खेल्न सिकाउनुका साथै स्किलहरू सुधारिन्छ।

यू-१९ विश्वकपमा खेलिसकेपछि नेपालको महिला क्रिकेटले पनि एउटा स्तरमा पुग्ने संकेत देखाएको छ।


फाइल तस्बिर

मलेसियामा सम्पन्न विश्वकपमा हाम्रो इनर्जी निकै राम्रो थियो। युवा टिम भएकाले होला फिटनेस र रनिङ राम्रो थियो। तर, हामी ब्याटिङमा अलिक कमजोर देखियौं। किनकि हाम्रो ब्याटिङको आधार नै थिएन। एउटा स्किलफुल खेलाडीले १-२ वटा खेलमा रन नहान्ला, तर तेस्रो खेलमा उसले रन बनाउँछ नै। त्यो खेलाडी लामो समयसम्म चल्छ। स्किल सधैंका लागि हो। यो हामीले बुझ्न जरुरी छ। यू-१९ विश्वकप खेलेका खेलाडीहरू निकै फुर्तिला थिए, राम्रा प्रयासहरू गर्थे तर ब्याटिङ त्यहीअनुरूप थिएन। हाम्रो बेस राम्रो बनाउनुपर्‍यो अनि तब न स्किल बढ्दै जान्छ। त्यसपछि हामी ठूला टोलीलाई हराउन पनि सक्छौं। नेपालले सन् २०२७ मा बंगलादेशसँग मिलेर यू-१९ विश्वकप आयोजना गर्दै छ। त्यसका लागि हामीले अहिलेदेखि बेस बनाउनुपर्छ र स्किल सिकाउनुपर्छ। आयोजकका हिसाबले हामीले आउने टोलीलाई सबै सुविधा दिनुपर्छ। मलेसियाले यू-१९ विश्वकप आयोजना गर्दा ३ वटा राम्रो मैदान बनाएको थियो। होटल, बसहरू पनि निकै राम्रो थियो। हामीले यो पक्षमा निकै ध्यान दिनुपर्छ। अस्ट्रेलिया, दक्षिण अफ्रिका राम्रो सुविधामा बसिरहेका टोली हुन्। उनीहरूले त्यहीअनुरूप यहाँ पनि सुविधा खोज्छन्। हामीले त्यो सुविधा प्रदान गर्न सकेनौं भने भोलिका दिनमा अन्य आईसीसीका प्रतियोगिताहरू आयोजना गर्न गाह्रो पर्न सक्छ। ठूला राष्ट्रहरूको आवश्यकता के के हुन्छन्, त्यसमा हामीले अहिलेदेखि गृहकार्य गर्नुपर्छ।

महिला राष्ट्रिय क्रिकेट टोलीमा म पनि भर्खर आएको छु। धेरै कुरा बुझ्दै छु। नेपाली महिला टोलीले अझै कुनै प्रतियोगिता जित्न सकेको छैन। हाम्रो महिला टोलीको मानसिकता पनि धेरै फरक छ। ठूलो टोली भनेर हामी खेल्नुअघि नै हार मानिसकेका हुन्छौं। जबकि हामीले यू-१९ मा एक पटक पनि त्यस्तो सोचेनौं। यूएईको त्यही टोली हो जसको यू-१९ टोलीमा राष्ट्रिय टोलीबाट खेलिसकेका ७ खेलाडी थिए। तर, हामीले कहिल्यै उनीहरू ठूलो हो भनेर सोचेनौं। त्यही यूएईलाई हराएर हामी विश्वकपमा पुग्यौं। दुई वर्षअगाडि मात्र यूएईले नेपाली यू-१९ टोलीलाई ८ रनमा अलआउट गरेर ७ बलमा खेल जितेको रहेछ। हामीले यो कुरा पनि खेल्दाखेरि दिमागमा राखेनौं। जब हामी यूएई, पाकिस्तानलाई हराउन सक्छौं भने विश्वकप खेल्न सक्दैनौं भनेर किन सोच्ने ? हामी विश्वकप खेल्न सक्छौं भन्न पहिला खेलाडीहरूमा जितको मानसिकता आउनुपर्‍यो। मलाई यो पटक हामी विश्वकपमा पुग्छौं जस्तो लाग्छ। यू-१९ मा एउटा सिनियर खेलाडीको हिसाबमा मैले जति गर्न सक्थें गरें, म्याचहरू पनि जिताएँ। राष्ट्रिय टोलीमा पनि आफ्नो तर्फबाट अझ राम्रो खेलेर महिला टोलीलाई विश्वकपमा पुर्‍याउने म हरदम प्रयास गर्नेछु।

एसिया कप छनोटमा हामी मलेसियासँग अन्तिम ओभरमा हार्नुको कारण पनि यही थियो। हामी सकारात्मक सोचका साथ खेलेका थिएनौं। हामीले जितिसकेको खेल हारेर मलेसियालाई उपहार दिएका थियौं। अहिलेदेखि नै प्रशिक्षणमा जितको मानसिकता लिएर आउनुपर्छ। बूढीऔंलामा चोट लागेर मैले त्यो खेल खेल्न सकेको थिइनँ। बाहिर बसेर हेर्दा मैले धेरै कुरा गहिरिएर बुझ्ने अवसर पाएँ। दबाबको स्थितिमा खेलाडीले आफैंलाई शान्त बनाएर राख्न सक्नुपर्छ। मलेसियासँगको त्यो खेलमा हामीले पूरै धैर्य गुमाउन पुग्यौं। महिला टोलीमा फिटनेसको धेरै समस्या छ। हामीले खानपिनमै धेरै ध्यान दिनुपर्छ।

क्याम्प नभएका बेला आ-आफ्नो क्षेत्रमा भए पनि प्रशिक्षण गरेर बस्नुपर्छ। वर्षभर फिटनेसमा केही नगरेर १४ दिनको क्याम्पले केही हुनेवाला छैन। त्यही भएर खेलाडीले आफैं फिटनेसमा ध्यान दिनुपर्छ, आफ्नो जिम्मेवारी आफैं लिनुपर्छ। वर्षभर फिटनेस गर्दै आएका छौं भने क्याम्पमा खेलमै मात्र ध्यान दिन पाउँछौं। प्रशिक्षकले पनि यस्तो बेला केही गर्न सक्दैन। प्रशिक्षकले जति गरे पनि मैदानमा गएर खेल्न सक्दैन। एउटा खेलाडी भएर बुझ्नुपर्छ, राम्रो प्रशिक्षक आए नि नराम्रो प्रशिक्षक आए पनि खेल्ने खेलाडीले नै हो। हामीले राम्रो गरेपछि खेलाडीको नाम नै तुरुन्तै आइहाल्छ। टिमले नराम्रो गर्‍यो भने तुरुन्तै प्रशिक्षकको नाम आउँछ। हामी भने त्यहीं गल्ती गरिरहेका हुन्छौं।

क्यानले आफ्नोतर्फबाट महिला क्रिकेटलाई माथि उठाउन प्रयासहरू गरिरहेकै छ। विभिन्न देशका टिमलाई नेपालमा खेल्न बोलाइरहेको छ। सरकारले क्यानको कदममा साथ दिनुपर्छ जस्तो लाग्छ। हामी विश्वकप खेल्न सक्छौं। त्यो हाम्रो लक्ष्य हो। त्यसका लागि हामी दृढ पनि छौं।

# फुटबललाई लयमा फर्काउन लिग प्रतिस्पर्धा

**नेपाली फुटबललाई चलायमान बनाउन लिग नियमित हुनुपर्छ, हामीले त अब उमेर समूहको लिग पनि चलाउनुपर्ने हुन्छ, कम्तीमा यू-१६ र यू-१८ स्तरमा अहिले लिग हुन थालेको छ**

**विक्रम लामा**
अध्यक्ष, फुटबल खेलाडी संघ

नेपाली फुटबल अहिले ठ्याक्कै कहाँनिर छ त ? आजभोलि प्रायः चर्चा हुने गर्छ। केहीले भन्ने गरेका छन्, अचेल नेपाली फुटबल त्यस्तो रहेन, जस्तो पहिले थियो। साँच्चै नेपाली फुटबलको स्तर कस्तो छ त ? यसको उत्तर भने हामीसँग छैन। एक प्रकारले स्तर नाप्ने सही औजार पनि छैन। राष्ट्रिय पुरुष फुटबल टिमले कहिलेकाहीं बलियो प्रतिद्वन्द्वीविरुद्ध पनि राम्रो खेलिदिन्छ अनि कहिलेकाहीं कमजोर टिमविरुद्ध कमजोर नै प्रदर्शन हुने गर्छ।

सायद केही हदसम्म लोकप्रियतामा कमी आएको हो कि भन्ने अनुमान गर्न सकिन्छ। अझ भनौं, नेपाली फुटबलले पछिल्लो समय केही लय गुमाएको छ। यसमा दुविधा छैन। यसका पनि स्पष्ट कारण छन्। जति बेला नियमित फुटबल हुन छाड्छ, त्यसको सबैभन्दा पहिलो नकारात्मक प्रभाव भनेकै यसले आफ्नो लय गुमाउँछ। त्यसैले अहिले नेपाली फुटबललाई लिएर आलोचना पनि भइरहेको छ। सबै के तथ्यमा एकमत छन् भने नेपालमा फुटबल अझै पनि उत्तिकै मन पराइन्छ।

मिहिनेत गर्ने हो भने यो खेललाई मज्जाले अगाडि बढाउन सकिन्छ। नेपालमा फुटबलको साँच्चै विकासका लागि अहिले तत्काल के गर्ने आवश्यकता छ त ? अब सबैको ध्यान यसमै केन्द्रित हुनुपर्छ, विशेषतः नेतृत्व तहले यसमा ध्यान दिनु नै पर्छ। अन्तर्राष्ट्रिय रूपमै फुटबलको विकास कसरी हुन्छ, त्यसको सटीक उत्तर कोहीसँग पनि छैन। तर, यसका लागि बाटो भने छन्, यसलाई पद्धति नै भन्न सकिन्छ। फुटबलमा विकासका मोडल छन्।

यसमा सबैभन्दा पहिले आउँछ, दीर्घकालीन र अल्पकालीन योजना। हामीले अहिले कुरा गरिरहेको पुरुष फुटबलमा केन्द्रित रहेर हो। नेपाली फुटबलले पनि के बुझ्न आवश्यक छ भने हाम्रो उद्देश्य के हो, हामी कहाँसम्म पुग्नुपर्छ ? विदेशतिर पनि आफ्नो फुटबल विकासका लागि यसरी निश्चित उद्देश्य राखेर दीर्घकालीन योजना बनाउने चलन छ। नेपालले पनि त्यसलाई पछ्याउन आवश्यक छ। विकसित देशका लागि फुटबलमा विश्वकपको छनोट प्रमुख उद्देश्य हुन सक्छ।

हाम्रा दुई छिमेकी चीन र भारतका लागि यो उद्देश्य हुन सक्छ। चीनले एकैपल्ट मात्र विश्वकप खेलेको छ भने भारतले त्यति उपलब्धि पनि हात पार्न सकेको छैन। तर उनीहरूले यस्तै योजना बुनेका छन्। चीन र भारत दुवै आर्थिक रूपमा विश्वकै शक्तिका रूपमा छन्। तर तिनीहरूले अपेक्षाअनुसार सफलता प्राप्त गर्न सकेका छैनन्। विशेषतः चीनले करोडौं डलर त्यहाँको फुटबलमा लगानी गरेको छ, तर उपलब्धि शून्यकै स्थितिमा छ।

यसले पनि देखाउँछ, यो कति गाह्रो काम हो भनेर। फुटबलको सिद्धान्त नै हो, पैसाले सफलता किन्न सकिन्न, यो त केवल साधन मात्रै हो। हाम्रा लागि विश्वकप छनोट नै उद्देश्य हुनुपर्छ भन्ने छैन। हामीले योभन्दा केही तल्लो उद्देश्य बनाउन सक्छौं र त्यसका लागि दीर्घकालीन योजना बनाउन सक्छौं। नेपाली पुरुष फुटबल टिमले अहिलेसम्म दक्षिण एसियाली फुटबलको सबैभन्दा ठूलो प्रतियोगिता साफ च्याम्पियनसिप पनि जित्न सकेको छैन।

हाम्रो सबैभन्दा ठूलो सफलता भनेकै फाइनलसम्म पुग्नु हो। साफ च्याम्पियनसिप प्रत्येक दुई वर्षमा एकपल्ट आयोजना हुन्छ। यसअघिको तुलनामा यो उपाधि जित्नु अझ कठिन हुने गरेको छ। यस्तो हामीले निश्चित समयमा साफ च्याम्पियनसिप जित्ने ठोस योजना बनाउन सक्छौं। यहाँनिर हामीले के बुझ्नु आवश्यक छ भने अन्य क्षेत्रमा जस्तै फुटबलमा पनि रातारात केही दिनको मिहिनेतले केही पनि सफलता प्राप्त गर्न सकिन्न, केहीले प्राप्त गर्छ भने त्यो क्षणिक मात्र हुन्छ।



साफ च्याम्पियनसिपकै उपाधि जित्न हामीले १० वर्ष वा त्योभन्दा बढी समयको योजना बनाउनुपर्ने हुन्छ। यस्तै हामीले एसिया कपमा छनोटको पनि उद्देश्य बनाउन सक्छौं। एसिया कप एसियाली फुटबलको सबैभन्दा ठूलो प्रतियोगिता हो। अहिले यो प्रतियोगिता पनि विस्तार हुने क्रममा छ, त्यो भनेको यसमा सहभागी टिमको संख्या बढाएर २४ पुर्‍याइएको छ। एसियाली फुटबल महासंघ (एएफसी) सँग ४७ यस्ता देश छन्, जसले अहिले छनोट खेल्न सक्छ।

त्यसको सिधासिधा हिसाब के हो भने हामीले आफ्नो फुटबल स्तर एसियाको मध्यबिन्दुसम्म पुर्‍याउन सक्छौं भने हाम्रा लागि एसिया कपको बाटो सम्भव देखिन्छ। साफ च्याम्पियनसिप जित्नुभन्दा एसिया कपमा छनोट गाह्रो हुन सक्छ, वा समान दुवै हुन सक्छ। यी दुवै उद्देश्यलाई समान रूपमा अगाडि बढाउन सकिन्छ। यसका लागि फुटबलको तल्लो स्तरबाटै विकास आवश्यक हुन्छ, त्यो भनेको 'ग्रास रुट' स्तरको फुटबल।

नेपाली फुटबलले पछिल्लो समय एउटा काम गर्नै सकेको छैन। त्यो भनेको खेलाडीको व्यवस्थित उत्पादन हो। अथवा भनौं, यो काम रोकिएको छ। जति पनि खेलाडी अहिले अगाडि आइरहेका छन्, ती आफ्नै मिहिनेतले अगाडि आएका छन्, यसका लागि व्यवस्थित काम भएको छैन। खेलाडी उत्पादनका लागि एकेडेमी नै आवश्यक पर्न सक्छ। उमेर समूहको फुटबल भन्नु नै कुनै पनि देशमा यो खेलको आधार हुने गर्छ। उमेर समूहको फुटबलको मद्दतमा एकपछि अर्को पुस्ताका खेलाडीलाई अगाडि बढाउन सकिन्छ।

यस्तोमा नेपाली फुटबलले भन्न सक्नुपर्छ, हामीले अबको यति यति वर्षमा यस्तो यस्तो गर्ने उद्देश्य बनाएका छौं अनि यसका लागि हामीसँग यो यो कार्यक्रम छ। यो दीर्घकालीन योजना सफल बनाउन अल्पकालीन योजना पनि उत्तिकै आवश्यक छ। अझ यसलाई त्यसको आधार भन्दा हुन्छ। अल्पकालीन योजना भन्नु नै एक प्रकारले प्रतियोगिताको नियमित आयोजना हो। अहिले देखिएको सबैभन्दा ठूलो समस्या भनेकै नियमित प्रतियोगिता नहुनु हो।

अझ भन्दा नेपाली फुटबल चलायमान नै हुन सकेको छैन। हामी हाम्रा फुटबल खेलाडी विदेश पलायन भएको धेरै चर्चा त गर्छौं, तर यसको कारण खोज्न बिर्सन्छौं। नियमित फुटबल हुने हो भने नेपालमा अझै पनि खेलाडीका लागि आर्थिक रूपमा समस्या छैन। फुटबल खेलेर आफ्नो करियर बनाउने आधार अझै पनि नेपालमा छ। यसमा दुविधा नराखे हुन्छ। जति बेला प्रतियोगिता नै हुँदैन, यस्ता आधार खोसिने र हराउने सम्भावना त हुन्छ नै।

सबैभन्दा पहिले लिग नियमित हुनुपर्छ। नेपाली घरेलु फुटबलको सबैभन्दा सर्वोच्च स्वरूप भनेकै सहिद स्मारक लिग हो। यसका चार तह छन्, 'ए', 'बी', 'सी' र 'डी' को छनोट। लिग फुटबल पिरामिडको स्वरूपमा चल्छ। तर दुर्भाग्य के भन्दा नेपालमा माथिल्लो 'ए' डिभिजनको फुटबल नभएको पनि लामै समय भइसकेको छ, लगभग दुई वर्ष छुने क्रममा छ। अहिले खेलाडीको नदेखिनु, देखिए पनि माथिल्लो स्तरको नहुनुको कारण यही लिग नहुनु नै हो।

त्यसैले नेपाली फुटबललाई चलायमान बनाउन लिग नियमित हुनुपर्छ। हामीले त अब उमेर समूहको लिग पनि चलाउनुपर्ने हुन्छ। कम्तीमा यू-१६ र यू-१८ स्तरमा अहिले लिग हुन थालेको छ। यो निकै सकारात्मक पक्ष हो। ती लिगलाई गम्भीरतापूर्वक हेर्नुपर्छ। प्रस्ट देखिन्छ, नेपालमा प्रतिभाशाली खेलाडीको कुनै कमी छैन। ती खेलाडीले नियमित र माथिल्लो दर्जाको प्रशिक्षण र खेल अनुभव बटुल्न पाउने हो भने नतिजा ढिलोचाँडो आउने नै छ।

सहिद स्मारक लिगको स्वरूपसँगै हामीसँग फ्रेन्चाइज फुटबलको अस्तित्व छ। नेपाल सुपर लिग (आईएसएल) को नाममा फरक खाले लिग हुने गर्छ। अहिलेसम्म यसको सकारात्मक प्रभाव देखिएको छ। हामीले एकै सिजन सहिद स्मारक लिग र आईएसएललाई अगाडि बढाउन सक्ने हो भने पूरा वर्ष फुटबल नियमित हुनेछ। त्यसमाथि मोफसलका ठूला नकआउट गोल्डकप फुटबललाई पनि व्यवस्थित गर्ने हो भने खेलाडीले खेल्न पाएनौं भनेर गुनासो नै गर्ने ठाउँ हुन्न।

यसरी हामीले दीर्घकालीन र अल्पकालीन योजना समानान्तर रूपमा अगाडि बढाउन सक्छौं। हामीले यहाँनिर के पनि बुझ्न आवश्यक छ भने नेपाली फुटबलका लागि अन्य प्राविधिक पक्षको जनशक्तिको उत्पादन र प्रवर्द्धनको पनि उत्तिकै जरुरी छ। यी जनशक्ति सबैभन्दा पहिले प्रशिक्षक हुन सक्छन्, त्यसपछि निर्णायक। निर्णायक भनेको रेफ्रीदेखि म्याच कमिस्नरसम्म। त्यतिमात्र होइन, हामीलाई उच्च दर्जाका खेल चिकित्सक र फिजियोथेरापिस्ट पनि आवश्यक हुन्छ।

भौतिक पूर्वाधारलाई पनि हामीले उत्तिकै महत्त्व दिनुपर्छ। नेपाली फुटबल पछाडि पर्नुको कारण भौतिक पूर्वाधारको कमी पनि हो। हामीसँग त्यस्ता भौतिक पूर्वाधारको पूरै कमी छ, जसमा खेलाडीलाई चाहिने सबै प्रकारका सुविधा हुनुपर्छ। त्यसको अर्थ के होइन भन्दा हामीलाई एक-एक लाखदेखि ५०-५० हजार दर्शक अटाउने रंगशाला चाहिन्छ भन्ने होइन। केही हदसम्म यस्ता ठूल्ठूला निर्माण परियोजना हाम्रा लागि बोझ हुन सक्छ।

बरु हामीलाई चाहिएको भनेका उच्च सुविधासम्पन्न मैदान हो। प्रत्येक प्रदेशमा यस्ता सुविधासम्पन्न मैदान हुने हो भने यसले नेपाली फुटबल विकासमा धेरै योगदान पुर्‍याउने निश्चित छ। यस्तो मैदानको निर्माणका लगि धेरै ठूलो आर्थिक स्रोत पनि नचाहिने हुन सक्छ। यस्ता मैदान प्रत्येक प्रदेशमा मात्र नभएर सहर सहरमै हुन सक्छ। कम्तीमा ठूला सहरले यसको प्रयास गर्नुपर्ने हुन्छ। दीर्घकालीन योजना र खेलाडी उत्पादनमा यस्ता मैदान निर्णायक हुन्छन्।

पछिल्लो समय नेपाली फुटबलमा दर्शकको कमी हुन थालेको तथ्य छ। केही खास सहरमा बाहेक नेपाली फुटबलमा दर्शकको अभाव छ भन्न पनि सकिन्न। अझै पनि फुटबल मात्र हुनुपर्छ, नेपाली फुटबललाई दर्शकको कुनै अभाव हुन्न, तर बरु धेरै दर्शक आएर समस्या हुने गर्छ। यहाँनिर एउटा तथ्य के स्वीकार गर्न सकिन्छ भने नेपाली फुटबललाई अहिले स्टार खेलाडीको कमी छ। जति माथिल्लोस्तरका खेलाडी छन्, तिनले आफ्नो स्टारडम बनाउन र कायम राख्न सकेका छैनन्।

कुनै समय त्यस्तो पनि थियो, जति बेला राष्ट्रिय टिममा स्टार खेलाडीको बाक्लो उपस्थिति हुने गर्थ्यो। एउटा ठूलै क्लबमा समेत एकभन्दा बढी स्टार खेलाडी हुने गर्थे। यस्ता खेलाडीको खेल हेर्न दर्शक लोभिने हुँदोरहेछ। अहिले राष्ट्रिय टिममा पर्ने खेलाडीलाई समेत धेरैले नचिन्ने समस्या हुने गर्छ। यस्तोमा दर्शकलाई फुटबलको मैदानसम्म तान्न समस्या हुने रहेछ। त्यसैले नेपाली फुटबलले स्टार खेलाडीलाई जन्माउन सक्नुपर्छ।

# महिला फुटबलको सुन्दर सम्भावना

**सबै अर्थमा देशले नेपाली महिला फुटबलमा लगानी गर्ने हो भने त्यसको प्रतिफल चाँडै आउनेछ, अन्तर्राष्ट्रिय महिला फुटबलमा नेपालको सम्भावना हुनु एउटा सुन्दर पक्ष नै हो**



**प्रीति राई**
खेलाडी, महिला फुटबल



महिलाको विश्वकप फुटबल खेल्ने हामी सबैको सपना हो। मेरो आफ्नै पनि। हामीले अहिलेसम्म साफ च्याम्पियनसिप पनि जित्न सकेका छैनौं। त्यसैले विश्वकपको सपना अलि धेरै नै महत्त्वाकांक्षी भयो भन्ने हुन सक्छ। तर हामीले राम्रोसँग योजना बनाउने र त्यसलाई कार्यान्वयन गर्ने हो भने यो असम्भव जस्तो छैन। कम्तीमा महिलाको एसिया कप खेल्ने सपना त हामीले बुन्नुपर्छ। यसको त पूरा सम्भावना छ भन्दा नै हुन्छ।

अन्तर्राष्ट्रिय फुटबलमा पुरुषको तुलनामा हाम्रो महिला फुटबलको सम्भावना धेरै छ। पुरुष फुटबलको तुलनामा महिला फुटबलको अन्तर्राष्ट्रिय समीकरण बेग्लै छ। अबको आउने वर्षमा विश्वकप र एसिया कपमा सहभागी हुने देशको संख्या केही बढाउने हो भने नेपालको सम्भावना अत्यधिक हुने गर्छ। पुरुष फुटबलमा अगाडि बढ्न जति गाह्रो हुन सक्छ, महिला फुटबलमा यही काम गर्न उत्तिकै गाह्रो नहुन सक्छ। अझ सजिलो नै हुनेछ भन्दा हुन्छ।

यसका लागि चाहिने भनेको कडा मिहिनेत नै हो। अहिले घरेलु मैदानमा फोर नेसन्स कप खेल्दैछौं। हाम्रा लागि यो ठूलो परीक्षा रहनेछ। नेपाली महिला फुटबलमा यसरी चार देशसम्मिलित प्रतियोगिता यहाँ हुन लागेको पहिलो पटक हो। हामीलाई चाहिने यस्तै खाले प्रतियोगिता हो। हाम्रो दक्षिण एसियाबाहिर गएर खेल्ने अवसर धेरै बन्नुपर्छ। यस्ता अवसर नेपाली महिला फुटबललाई उकास्ने एउटा राम्रो विकल्प हुन सक्छ। नेपाली महिला फुटबलको एउटा राम्रो पक्ष के भन्दा हामीलाई हाम्रा समर्थकले असाध्यै धेरै माया गर्छन्। अन्तर्राष्ट्रिय प्रतियोगिता हुनुपर्छ, रंगशालामै पुगेर फुटबल हेर्न रुचाउनेको कुनै कमी छैन। विशेषतः वाफ च्याम्पियनसिप २०२४ ले पनि महिला फुटबलको लोकप्रिता बढेको छ। यो प्रतियोगितामा नेपाली टिमले जस्तो प्रदर्शन गरेको थियो, त्यसले धेरैको मन जितेको छ। अझै पनि त्यस प्रतियोगितालाई लिएर चर्चा गर्ने प्रवृत्ति घटेको छैन।

मैले आफैंले यस्तो प्रत्यक्ष महसुस गरेकी छु। अहिलेको फोर नेसन्स कपमा हाम्रो प्रदर्शन आधार मानेर पनि योजना बुन्न सक्छौं। महिलाको विश्वकप र एसिया कप दुवैको छनोट अबका तीन चार महिना पछि छ। अहिलेसम्म छनोटको 'ड्र' त निस्केको छैन। हामीले यसमै केन्द्रित भएर फोर नेसन्स कप पछि पनि थप केही मैत्रीपूर्ण अन्तर्राष्ट्रिय खेल खेल्न पाउँदा राम्रो हुन्छ। हामीलाई माथिल्लो स्तरका टिमहरूविरुद्ध मैत्रीपूर्ण अन्तर्राष्ट्रिय खेलहरू पनि उत्तिकै आवश्यक छन्।

कुनै पनि देशमा फुटबलको विकास त्यसै हुने हुँदैन। यसका लागि चाहिने सबैभन्दा ठूलो आधार भनेको उमेर समूहको फुटबल नै हो। फिफाले 'ग्रासरुट' फुटबललाई धेरै महत्त्व दिएको कारण यही नै हो। मेरो सबैभन्दा ठूलो मत के छ भने नेपालले महिला उमेर समूहको फुटबलमा सक्दो बढी ध्यान दिनुपर्छ। म भाग्यमानी रहें, किनभने मैले उमेर समूहबाटै सिक्दै खेल्दै यहाँसम्मको यात्रा तय गर्न पाएँ। उमेर समूहको फुटबलले खेलाडीलाई धेरै ठूलो शिक्षा दिने गर्दछ।

मैले फुटबल सिकेको भनेको लगभग एकेडेमी जस्तैबाट हो। त्यसैले उमेर समूहको फुटबलकै लागि भने एकेडेमी स्थापना गर्नुपर्ने हुन्छ। लहरले खेलेको फुटबल र एकेडेमीमा सिकेको फुटबलमा फरक हुन्छ नै। आजभोलिको फुटबल भनेको निकै प्राविधिक खेल हो। फुटबल खेल्ने शैली, यसका प्राविधिक पक्ष र दर्शन बुझ्न आवश्यक नै हुन्छ। त्यसैले एकेडेमी सबैभन्दा ठूलो आवश्यकता हो। उमेर समूह-समूहमै लिगहरू पनि आवश्यक हुन्छ।

दक्षिण एसियाकै अन्य देशमा महिला फुटबलकै लागि भनेर एकेडेमी बनिसकेका छन्। उमेर समूहको लिग फुटबल सुरु भइसकेको छ। हामीले यसमा ढिला गर्नुहुन्न। यू-१४, यू-१६ वा यू-१८ स्तरमा हुने लिगले खेलाडीलाई परिपक्व बनाउने गर्छ। यस्तै लिगबाट त हो, प्रतिभाशाली नयाँ नयाँ खेलाडी आउने। मलाई के लाग्छ भने हाम्रो महिला फुटबलका लागि प्रतिभाशाली खेलाडीको कुनै कमी छैन, तिनलाई अवसर र सुविधामात्र दिन सक्नुपर्छ।

हाम्रो महिला घरेलु लिग पनि आफैंमा बलियो छैन। कतिपय अवसरमा हामीसँग खेल्न अवसर नै हुन्न। यो वर्ष भने महिला फुटबलका लागि सुखद नै रह्योभन्दा हुन्छ, किनभने यसपल्ट महिलाको लिग लामै भयो। धेरै खेल भए। हामीलाई चाहिने भनेको यस्तै लिग नै हो। खेलाडीले धेरैभन्दा धेरै खेल्ने अवसर पाए। यसपल्ट जस्तो लिग भएको छ, त्योभन्दा पनि राम्रो लिग अबको वर्षमा हुनुपर्छ। यो क्रम रोकिनुहुन्न, यसलाई अझ बृहत् बनाउँदै जानुपर्छ। लिगलाई फुटबलको मेरुदण्ड त्यसै भनिएको होइन। हामीलाई बढीभन्दा बढी महिला टिम पनि आवश्यक हुन्छ। प्रदेश-प्रदेश र सहर-सहरको आफ्नै टिम भयो भने त्यो त अद्वितीय नै हुने गर्छ। सानै स्तरमा भए पनि प्रदेश प्रदेश पनि आफ्नो छुट्टै लिगको आयोजना सुरु गरे हुन्छ। नेपाली महिलाका लागि अन्य नकआउट प्रतियोगिता पनि चाहिन्छ।

सबै अर्थमा देशले नेपाली महिला फुटबलमा लगानी गर्ने हो भने त्यसको प्रतिफल चाँडै आउनेछ। यो अरू क्षेत्रमा जस्तो लगानी गर्दा खेर जाने डर हुन्न। मैले जति समय खेल्ने अवसर पाएकी छु। विदेशमा गएर अनुभव बटुलेकी छु, त्यसको निचोड के हो भने साँच्चै नै नेपाली महिला फुटबलको सम्भावना धेरै छ। हामीले अलिकति मात्रै बढी मिहिनेत गर्नुपर्छ, हाम्रा उपलब्धि त्यसको अनुपातमा धेरै हुनेछ। अन्तर्राष्ट्रिय महिला फुटबलमा नेपालको सम्भावना हुनु एउटा सुन्दर पक्ष हो।



आश्माकुमारी केसी
मिस नेपाल वर्ल्ड २०२४

# सौन्दर्य प्रतियोगिता 'ब्युटी विथ ब्रेन'

**मिस नेपाल भनेपछि सौन्दर्य प्रतियोगिताको कोणबाट मात्र हेर्छौं, तर यो प्रतियोगिता आफ्नो देशको झन्डा र नाम बोकेर अन्तर्राष्ट्रियस्तरमा देशलाई चिनाउन जाने अवसर हो, सौन्दर्य मात्रै नभएर बौद्धिकतालाई पनि उत्तिकै प्राथमिकता दिने प्रतियोगिता हो यो**

नेपालमै बसेर केही गर्न मन थियो। त्यही भएर सानै उमेरमा अनलाइनमार्फत व्यापार सुरु गरें। काठमाडौंकै थोक विक्रेताबाट सौन्दर्य सामग्री र विभिन्न सौन्दर्यका सामग्री किनेर त्यसैलाई अनलाइनमा बिक्री गरेर व्यवसाय सुरु गरेको थिएँ।

सुरुमा केही गर्छु भन्ने इखले आफ्नो बुद्धिले भ्याएसम्म बुद्धि लगाएर व्यापारमा होमिएकी हुँ। पछि मलाई आयात र निर्यातमा रुचि भयो। बिस्तारै अनलाइनबाट त्यता प्रवेश गरें। अहिले म नेपालमा व्यवसाय गर्न चाहने तर सामान बाहिरबाट ल्याउन नसक्ने वा सामान ल्याउनका लागि 'इम्पोर्ट सोर्सिङ' को काम गर्छु। हामीले 'बी टु बी' र 'बी टु सी' लगायत धेरै प्रकारका आयातको काम गर्छौं।

मैले विशेष गरेर सेवाग्राहीसँगको सम्बन्ध हेर्छु। कानुनी पाटा हेर्न छुट्टै टिम छ। व्यापारीकै आवश्यकताअनुसार चीनबाट सामान आयात गरिदिन्छौं। यहाँका व्यापारीका लागि सामान ल्याइदिन सहयोग गर्छौं। मैले सुरुमा कस्मेटिक प्रोडक्टबाट अनलाइन व्यापार सुरु गरेकाले यसको काम धेरै हुन्छ। यसका लागि चीन र नेपाल दुवैतर्फका व्यापारीसँग मेरो सम्बन्ध राम्रो छ। म नेपालमा बनेका तयारी सामग्री पनि निर्यात गर्छु। आयात धेरै पहिलादेखि गर्न थाले पनि दुई वर्षयता निर्यातलाई पनि बढाइरहेको छु।

नेपालबाट बनेका हस्तकलाका सामानहरू विदेशमा निर्यात गर्छौं। अहिले मेरो रुचि निर्यात व्यापारमा बढेको छ। नेपाली सामानलाई विदेशी बजारसम्म पुर्‍याउन लागिपरेको छु। कुन सामग्रीको माग कहाँ छ भनेर आफैंले अध्ययन पनि गरिरहेको हुन्छु। नेपाली मौलिकता र पहिचान बोकेका सामग्रीको विश्व बजारमा माग राम्रो छ। हामीले त्यो क्षेत्रमा बजार सिर्जना गर्न सक्छौं। काम गर्न सजिलो छैन तर गर्ने जोस र आँट भए असम्भव पनि छैन। नेपालमा धेरै अवसरहरू देख्छु। समग्रमा अहिले प्रायः सबै नेपाली निराश छन्। नेपालको प्रणाली युवामैत्री नभएकैले धेरै विदेशिएका छन्। व्यवसाय सञ्चालन गर्न पनि कठिन नै छ। करहरू बढिरहेको हुन्छ। अहिले मेरो व्यवसाय पनि ओरालो लागेको छ।

अरूले काम दिएपछि मात्रै मेरो काम बढ्ने हो। अहिले निकै सुस्त छ। सायद हाम्रो अर्थतन्त्र नै तल झरेकाले होला। तर केही समययता अर्थतन्त्र उकासिने खोजेको भान भइरहेको छ। नेपालमा युवा उद्यमीलाई जतातत कठिनाइ छ। सुरुमा कसैले विश्वास नै नगर्ने परिपाटी छ। सानो उमेरमा महिलाले व्यापार सुरु गरेकाले पनि धेरैले पत्याएनन्। सामान खरिद गरेर बिक्री गर्छुभन्दा धेरै प्रश्नहरू गरिन्थे। तर, अगाडि बढ्दै जाँदा अप्ठ्याराहरू सहज हुँदै गए। अर्थतन्त्रमा सबैभन्दा महत्त्वपूर्ण भूमिका उद्यमीले खेल्छौं। नेपालमा उद्यममैत्री नीतिहरू हुनुपर्छ। नेपालमा केही गर्छु भन्नेले वातावरण र अवसर नपाएर बिदेसिने गरेका हुन्। नेपाल सरकारले मात्रै रोजगारी सिर्जना गर्न सक्दैन। उद्यमलाई प्रवर्द्धन गरे रोजगारीका अवसरहरू बढ्छन्। मैले नै १२-१३ जनालाई रोजगारी दिएको छु।

युवा उद्यमीहरूलाई सहयोग पुग्ने गरी आर्थिक नीतिहरू बनेमा नेपालको समग्र अर्थतन्त्रलाई नै सहयोग पुग्छ। म नेपालमा सम्भावना र अवसरहरू देख्छु। पर्यटन क्षेत्रमा नेपालका लागि प्रचुर सम्भावनाहरू छन्। पर्यटकीय सुन्दरताका लागि हामीले वरदान नै पाएका छौं। संस्कृति, कला र ऐतिहासिक सम्पदामा हामी निकै धनी छौं। यसलाई पुँजीमा रूपान्तरण गर्न सक्नुपर्छ। नेपालको अर्थतन्त्रमा पर्यटनले धेरै नै योगदान गरेको छ। यस्तो 'प्रिमियम टुरिज्म डेस्टिनेसन' लाई बढावा दिन धेरै युवा उद्यमीहरू लागेका छन्। त्यसलाई प्राथमिकता दियौं भने अर्थतन्त्रमा ठूलो सहयोग हुन्छ। नेपालको अर्थतन्त्र रेमिट्यान्सको भर परेको छ। यो राम्रो होइन। रेमिट्यान्सबाट प्राप्त भएको रकमलाई सदुपयोग गरेर यहाँ अवसरहरू सिर्जना गर्नु जरुरी छ।

नेपालमा सूचना प्रविधि (आईटी) को क्षेत्रमा पनि प्रचुर सम्भावना छ। हामीले नेपाललाई पनि आईटी हब बनाउने गरी नीतिहरू निर्माण गर्न जरुरी छ। हाम्रा युवाहरूको विश्वको आईटी क्षेत्रमा ठूलो माग पनि छ र उनीहरूले योगदान पनि गरेका छन्। नेपालमा अहिले पनि सफ्टवेयरसम्बन्धी धेरै कामहरू हुन्छन्। त्यसलाई संगठित बनाएर अझ बृहत् बनाउँदै लैजान सक्नुपर्छ।

नेपालको अर्थतन्त्र युवामैत्री र लगानीमैत्री बनाउन सकियो भने यो देश सुन्दरसँगै समृद्ध पनि हुन्छ। नेपाली युवाले विदेश पलायन हुनुपर्दैन। म महिलाको शक्तिमा असाध्यै विश्वास गर्ने मान्छे हुँ। नेपालको जनसंख्या हेर्ने हो भने पनि महिलाको संख्या धेरै छ। तर अर्थतन्त्र र उद्यमको सवालमा महिलाको योगदान पुरुषको तुलनामा कम देखिन्छ। त्यही भएर पनि महिलालाई उद्यमशील बनाएर अगाडि ल्याउन जरुरी छ। महिलाको आर्थिक क्षमतालाई अगाडि बढाउन चाहेकाले मिस वर्ल्डको 'ब्युटी विथ द प्रपोज' प्रोजेक्टका लागि यसै क्षेत्रमा काम गरिरहेको छु।

उक्त प्रोजेक्टअन्तर्गत हामीले देशको कुनै पनि समुदायमा सकारात्मक प्रभाव पर्ने, जीवनमा सुधार हुने, समाजमा केही परिवर्तन आउने काम गर्नुपर्छ। मिस वर्ल्डमा सौन्दर्य मात्र होइन आफ्नो देश र समाजमा के गर्नुहुन्छ भन्ने कुराको असाध्यै ठूलो महत्त्व हुन्छ। मैले यसअघि 'शक्ति' भन्ने प्रोजेक्टमा काम गरेको थिएँ। जहाँ मैले ५ जना महिला दिदीबहिनीसँग काम गरेको थिएँ। जसलाई जेमा रुचि छ त्यहीअनुसार प्रोजेक्टमार्फत सहयोग गरेको थिएँ। उहाँहरूसँग काम गर्ने जाँगर थियो तर सीप, पैसा र आर्थिक सहयोगको अभाव थियो। उहाँहरूलाई मैले आफ्नै बलबुतामा तालिम दिएँ। तालिम पाएकामध्ये पाँचै जना अगाडि बढ्नुभयो भनेर भन्न सक्दिनँ। तर गोरखाको एक जना दिदीले आफ्नो गाउँमा 'टेलर' खोलेर छोरालाई पढाइरहनुभएको छ। एक जना मात्रै आत्मनिर्भर भएको देख्दा पनि खुसी मिलेको छ। अन्यलाई पनि अगाडि बढाउन सक्दो कोसिस गरिरहेको हुन्छु।

अहिले हामी मिस नेपाल भनेपछि सौन्दर्य प्रतियोगिताको कोणबाट मात्र हेर्छौं। तर यो प्रतियोगिता आफ्नो देशको झन्डा र नाम बोकेर अन्तर्राष्ट्रियस्तरमा देशलाई चिनाउन जाने अवसर पनि हो। सौन्दर्य मात्रै नभएर बौद्धिकतालाई पनि उत्तिकै प्राथमिकता दिने प्रतियोगिता हो यो। त्यही भएर यो मञ्चले मलाई तान्यो। आफ्नो आवाजलाई सबैमाझ पुर्‍याउने अवसर दियो। म समाज सेवाको विद्यार्थी भएकाले पहिला पनि समाजलाई उपयोगी हुने कामहरूमा सहभागी हुन्थें। अहिले मैले गर्ने कार्यलाई धेरैले सहयोग र समर्थन गर्नुहुन्छ। मैले थप नयाँ अवसर पाइरहेको छु। अझै धेरै संघसंस्थासँग जोडिएर काम गरेर यसलाई ठूलो र प्रभावकारी बनाउन सक्छु।



# मूल प्रवाहमा आदिवासी नाटक

**हालै एक अग्रज दाजुले सामाजिक सञ्जालमा लेख्नुभयो, 'सामुदायिक नाटक बनाएर हलमा दर्शक भरे ।' उनीहरूले गरेको नाटकलाई हामी कलाकै रूपमा हेर्छौं । तर, हाम्रो नाटकलाई उनीहरू सामुदायिक देख्छन् ।**

**अनिल सुब्बा**
रंगकर्मी

घरका दाजुदिदीहरू चुलाचुली रंगमञ्चतिर, फिल्मतिर राजेश हमालहरू ! हाम्रो घरभित्र सबै कलाकार नै । जेठा दाजु फर्निचरतिर, माइला गाउन सक्ने, स्केच पनि गर्ने । अभिनय राम्रो गर्ने । तर, दाजुले अभिनयलाई निरन्तरता दिनुभएन । देउसी नाच्ने दिदीहरूले पनि केही सिरियल खेलेर यो क्षेत्र छाड्नुभयो ।

के गरिहिँडेको ? नाटकमा लाग्दा धेरैले भन्थे । तर, एक दिन माइला दाजुलाई पत्र लेखें, 'म स्केच गर्न सक्छु, अभिनय पनि गर्न सक्छु ।' विस्तारै चेतन आङ्थुप्पोहरू भेटिए । यसरी साथीसंगतले रंगमञ्चको यात्रा सुरु भयो ।

शिल्पीको दोस्रो ब्याचलाई एक जना कलाकार चाहियो भन्ने खबर सुन्यौं । चुलाचुलीमा रंगमञ्च गरिरहे पनि केन्द्रमा हाम्रो पहुँच थिएन । हाम्रो सबैभन्दा टाढाको पहुँच नै दमक थियो । त्यहाँ प्रकाश आङदेम्बे हुनुहुन्थ्यो । शिल्पीलाई इलामबाट एक जना विद्यार्थी चाहियो भन्ने जनाउ आयो । त्यतिबेला मैले जान्छु भनेर आँटें । भाडा थिएन, चेतना नाट्य समूह इलामले ५ हजार भाडा दिएर पठायो । २०७१ सालतिर काठमाडौं आएँ । शिल्पीको तीनमहिने कक्षा सकियो । हाम्रो ब्याचले नाटक प्रस्तुत गर्‍यो ।

सोलो प्रस्तुतिमा मैले बाल्यकालमा दिदीको पैसा चोरेको कथामा अभिनय गरें । त्यसपछि सुशील पोखरेलको 'ज्ञ'को तेस्रो ब्याचमा आबद्ध भएँ । त्यसपछि अभिनय र नाटक निर्देशन गरिरहेको छु । 'जिउँदो आकाश' दर्शकले धेरै रुचाइदिनुभएको नाटक भइहाल्यो । जोखना, लाटो पहाड, हरियो ढुंगा, मिडसमर नाइट्स ड्रिमलगायतका नाटक गरियो । निर्देशन पनि थालियो । 'चोरको सोर', 'स्याडो पपेट्री', 'मेषीदण्ड', 'मुक्कुम्लुङ' सम्म आइपुगियो । नाम भइदियोस्, मलाई अरूले चिनिदियोस् भन्ने लोभले यहाँसम्म आइपुग्दा कलाले झनै छोप्दै आयो । यो क्षेत्रमा १५-१६ वर्ष बितेको पत्तै भएन ।

यति समय बितेपछि मलाई थाहा भयो, रंगमञ्चभित्रको राजनीति । राजनीति त ठिकै हो । तर, अहिले कला वा नाटक, कति व्यवसाय हो वा कति कला हो ? भन्ने छुट्याउन नसकेको देख्छु । कला र व्यवसाय अझै पनि यो क्षेत्रमा छुट्टिन सकेको छैन । पुस्ताबीच अन्तर ठूलो छ । पछिल्लो समय मलाई लागिरहेको छ, हामी त त्यहीं अट्किएका छौं, जहाँनिर सुनील सर अड्किनुभयो । त्योभन्दा माथितिर जानै सकेका छैनौं । दक्षताकै मामिलामा पनि उहाँलाई उछिन्न सकेका छैनौं ।

निर्देशक त होइन, हरेक नाटक गरिसकेपछि मलाई आफूभित्रको सिर्जना हराएको अनुभूति हुन्छ । अभिनयकै सवालमा पनि कसैले 'म तपाईंको फ्यान' भनिदिएपछि हामी त्यहीं रोकियौं भन्ने लाग्छ । हामी त्यहाँनिर रोकियौं, त्यत्तिमै अल्झिएछौं । अभिनय दक्षताका मामलामा हामी हराएछौं । हाम्रो पुस्ता र नयाँ पुस्ता माथि उठ्नै सकेका छैनौं । रंगमञ्चको अहिलेको सबैभन्दा ठूलो समस्या यही हो ।

यो क्षेत्रको अर्को समस्या हामीलाई दिइने 'ट्याग' हो । त्यो ट्यागसँग हामीले हाम्रै गुरुवर्ग, शिक्षकसँग लड्नुपर्छ । पछिल्लो समय एउटा नयाँ थिएटर खोल्ने तयारीमा थियौं । १५-१६ वटा बैठकमा लगभग तय भइसकेको थियो । त्यतिबेला हामीलाई कारण दिइयो, फलानो थिएटर पनि समुदाय केन्द्रित छ । फिल्महरूमा त्यही आदिवासी अनि हाम्रो चाहिँ के ? भनेर प्रश्न गर्दै नयाँ थिएटर सञ्चालनमा ल्याउन दिइएन । तर, हामी जात हेरेर आएका त होइनौं ! अरूले आफ्नो कथा भन्दै आउँदा त हामीले केही भनेनौं ।



हाम्रा २/४ कथा आउन थाल्दा आपत्ति किन ? अहिले फिल्ममा पनि फरक कथाहरू आउन थालेका छन् । उनीहरूको फिल्म चलाउन त दयाहाङ (राई)कै अनुहार चाहिन्छ । तर, आदिवासीको कथा धेरै आयो भनिदिन्छन् । नदेखिने तरिकाले यो विषय रंगमञ्चमै पनि देख्छु ।

हालै एक अग्रज दाजुले सामाजिक सञ्जालमा लेख्नुभयो, 'सामुदायिक नाटक बनाएर हलमा दर्शक भरे ।' उनीहरूले गरेको नाटकलाई हामी कलाकै रूपमा हेर्छौं । तर, हाम्रो नाटकलाई उनीहरू सामुदायिक देख्छन् । हाम्रो नाटकलाई नाटक नै मान्दैनन् । साम्प्रदायिकता जोडेर हेरिदिन्छन्, हाम्रो नाटक किन नेपाली हुँदैन ? हाम्रो समस्या जातसँग होइन वादसँग हो ।

हाम्रो कथामात्र सुनिनुपर्छ भनेका होइनौं । हामीसँग कथा छ, हाम्रो कथा पनि सुनियोस् । हाम्रो कथा हेरौं है, भनेका मात्र हौं । तर, यत्तिमै हाम्रा अग्रज रंगकर्मीहरू आत्तिनुपर्ने के कारण छ । मेषीदण्डको एउटा कविता विवादमा आयो । भूपाल राईले लेख्नुभएको उक्त कविताको नियत निकै खराब छ भन्ने आयो । त्यो भन्नेहरू हाम्रै अग्रज रंगकर्मी । त्यही अग्रज रंगकर्मीले विभिन्न प्रोजेक्टमार्फत आदिवासीका कथामाथि नाटक बनाउने ! हाम्रो कथालाई बेच्न उनीहरूलाई आनन्द हुने तर, हाम्रो आन्दोलनमा बोल्न समस्या हुने ?

जब-जब हामीले नाटक गर्छौं, हाम्रा अग्रज रंगकर्मीले लेख्नुहुन्छ- फलानो आदिवासी नाटक । उहाँहरूले हाम्रो नाटकलाई नेपाली मान्नु नै भएन । केही समय अगाडि नवीन सुब्बा निर्देशित फिल्म 'गाउँ आएको बाटोमा' प्रदर्शनताका उहाँहरूले भने राईहरूको फिल्म हामीले किन हेर्नु ? हामीले कहिल्यै अनमोल केसीको फिल्मलाई बाहुनको फिल्म भन्यौं त ? यस्तो किसिमको बहस आउन आवश्यक होला । हामी पनि माझिन बाँकी छौं, छानिन बाँकी हुँला । तर, अग्रजले हाम्रो आयु पनि तोकिदिएको देख्दा अचम्म लाग्छ । ५-१० वर्ष उफ्रन्छ जान्छ । तर, अबको ५-१० वर्षमा किरण चाम्लिङ र मैले प्रण गरेका छौं, हामी दुईले हामीजस्ता १० जना प्रतिभा जन्माउँछौं । यस्ता नदेखिने कुराहरूसँग हामी लडिरहेका छौं ।

आदिवासीका कथा पनि नेपाली कथा हुन्, नेपाली नाटक हुन् भन्ने कुरा स्वीकारिन चाहिँ 'एप्रिसिएसन' नै होला । हाम्रो नाटकलाई नाटक नमान्दा हामीले पनि उस्तै व्यवहार उनीहरूसँग गर्नु पनि हुँदैन । एक न एक दिन हाम्रा गुरुवर्गले हाम्रो नाटकलाई नेपाली नाटक मान्नु होला । मलाई त विवादभन्दा पनि निरन्तर काम गर्नुपर्छ भन्ने पक्षको हुँ । तपाईंले जति दिनुहुन्छ त्यति पाउनुहुन्छ भनिन्छ नि ।

कला सबैका लागि सहज हुनुपर्छ, सुन्दर हुनुपर्छ भन्ने लाग्छ । तर, यहाँ त हाम्रै गुरुवर्ग पनि बाटो भड्किएका छन् । गुरुचेला भन्ने भाव जबसम्म हुन्छ, तबसम्म गुरुप्रति आदर त भइरहन्छ । तर, गुरुहरू नै बाटो भड्किएर जानुहुन्छ भने हामीले पनि केही न केही सोच्नुपर्छ होला । अहिले भइदियो यस्तै । सबैले समान तरिकाले बाँच्न पाउनुपर्छ है भन्ने नाटक गर्नेहरूले नै नाटकको भवन बनाइसकेपछि त्यहींका टोली खेदे । नाटकको भवन निर्माण गरिसकेपछि अधिकांशसँग यही भयो ।

हामीले आफैंलाई फर्केर हेर्न बिर्सियौं कि ? दामी छ नाटक भनेर कसैले भनिदियो भने बुरुक्क उफ्रिन्छौं कि ? कसैले खत्तम छ नाटक भनिदियो भने डिप्रेसनमा जाने, विदेश जाने गरिरहेका छौं कि ? पछिल्लो समय रंगकर्मी बन्नेहरू ह्वाररर आए । तर, उनीहरू कहाँ गए त ? यत्रो उत्पादन कहाँ खपत भइरहेको छ । सायद उनीहरूका लागि उचित स्थान भइदिएन । कति त हिँड्न पनि सकेनन् । सबैले हेर्दा दयाहाङ देखे । सौगात मल्ल, विपिन कार्की, विजय बराल हेर्दै आए । लहैलहैमा स्टार हुन्छु भनेर आउँछन् । यहाँ आइपुगेपछि थाहा हुन्छ, मिहिनेत र संघर्ष । ती कलाकारले गरेको संघर्ष, यात्रा देख्दैनन् । सायद कतिले त्यही यात्रा गर्न सकेनन् । थाके होलान् ? हो थाकिन्छ । तर, थकाइ मारेर बस्नुमात्र भएन । निरन्तर लागिरहनुपर्‍यो ।

हो, रंगमञ्च व्यावसायिक छैन । अझै पनि हुँदैन । अझै १०/२० वर्ष नाटक गरेरै बाँच्न सकिन्छ भन्न सकिन्न । नाटक नै गरेर बाँच्ने माहोल छैन । एउटा नाटक गर्न कम्तीमा ३ महिना लाग्छ । तीन महिनामा त्यही एउटा नाटकले कलाकारलाई कति पारिश्रमिक देला । २५ हजार ? यो क्षेत्रमा टिक्न गाह्रो छ । कसरी टिकिरहेको छ रंगकर्मीहरू ? म आफैं पनि छक्क पर्छु । अनि अग्रज दाजुहरू भन्नुहुन्छ, हामीले चिउरा खाएर रंगमञ्च गर्‍यौं, तिमीहरूले पनि त्यसै गर । कोही मानिस स्टार हुँदैन भन्ने गुरुहरू नै एक्टिङ स्टारको निर्णायक हुनुहुन्छ । समस्या त्यहाँ छ, होला उहाँ आफू बाँच्नका लागि त्यो बाटो समाउनु भो होला । तर, जसले भूमिका सानो-ठूलो हुँदैन भन्नेहरूकै नाटक चलाउन राजेश हमाल चाहिन्छ । फिल्मको स्टार चाहिन्छ । हाम्रा गुरुहरूलाई नाटक गर्न स्टार चाहिने भयो । अघिल्लो साता मात्रै स्टारमाथि एउटा बहस भयो । तिमीभन्दा उसको फलोअर्स धेरै छ, त्यसैले उसलाई लिन्छौं । जतिबेला रंगमञ्चमा महिला थिएन, त्यतिबेला पशुपति राईहरू थिए । उनीहरूले जीवन नै रंगमञ्चमा बिताए । तर, कुनै फिल्ममा उनीहरूलाई लिंदा ती नै गुरुहरूले उनीहरूको दक्षता नहेरी फलोअर्स हुनेका पछाडि लाग्छन् । आफ्नै विद्यार्थीमाथि विश्वास छैन भने कि गुरुमै समस्या छ कि त विद्यार्थीमा । मोफसल र राजधानीबीच पनि एकदमै ठूलो खाडल छ । रंगमञ्च त मोफसलमा राम्रो छ । त्यहाँ सपनाले काम भइरहेको छ ।

## ब्याट्री स्टोरेजको साथ सौर्य ऊर्जा : गेम चेन्जर

सौर्य ऊर्जा उत्पादन पछिल्ला समयहरूमा सबैभन्दा धेरै खोजी गरिएको ऊर्जा स्रोतका रूपमा देखा परेको छ । कम लागत, न्यून वातावरणीय प्रभाव, छोटो निर्माण अवधि र छोटो समयमा सेटअप गर्न सकिने कारण यसले ठूलो लोकप्रियता हासिल गरेको छ।

विश्व व्यवस्था हरित ऊर्जातर्फ अगाडी बढिरहेको छ र कार्बन उत्सर्जनको समस्याले मानव जातिको अस्तित्वलाई नै खतरामा पारेको छ । पृथ्वीमा रहेका प्रत्येक मानवको लागि कार्बन फुटप्रिन्ट कम गर्नु एउटा महत्वपूर्ण कार्य हो । यस परिस्थितीमा ऊर्जा कार्बन प्रदूषकहरूको प्रमुख स्रोत हो र सफा हरित नवीकरणीय ऊर्जा तर्फ अघि बढ्ने हरेक प्रयास अपरिहार्य रहेको छ । विश्वको ऊर्जा उत्पादन कोइला र ग्याँसहरूको नेतृत्वमा जीवाश्म इन्धनहरूले प्रभुत्व जमाएको थियो । जब सौर्य ऊर्जा विकासको प्रारम्भिक चरणमा थियो, त्यसबेलाको प्रतिफल प्राप्त गर्ने अवधि (पेब्याक अवधि) निकै लामो थियो र कसैले त्यसलाई गम्भीर रूपमा लिँदैनथे। तर पछिल्लो दशकमा सौर्य ऊर्जा प्रविधिमा भएको प्रविधिगत क्रान्तिले सबै सीमाहरू पार गर्दै यसलाई स्पष्ट रूपमा मुख्य स्थानमा स्थापित गरिदिएको छ ।

सौर्य फोटोभोल्टाइक (पीभी) प्रणालीहरूको दक्षता हाल झण्डै २५% पुगेको छ । सौर्य पीभी मोड्युलहरूको आकार दिनप्रतिदिन बढ्दै गएको छ, जसको हालको क्षमता प्रति मोड्युल ७०० वाट पार गरिसकेको छ, जसको क्षेत्रफल करिब ३ वर्ग मिटर रहेको छ । मोड्युलहरूको आयु ३० वर्ष नाघिसकेको छ र पोलिसिलिकन हाफ-कट सेलहरूको प्रयोगले यो सम्भव बनाएको छ। यसअघि एक मेगावाट बिजुलीको लागि ५ हेक्टरभन्दा बढी जमिन चाहिन्थ्यो तर हाल यो घटेर एक हेक्टर मात्र पुगेको छ । इन्भर्टरहरू यति कुशल छन् की डाइरेक्ट करेन्टलाई वैकल्पिक करेन्टमा रूपान्तरण गर्दा केही लिकेज हुँदैन । सफ्टवेयर र एप्लिकेसनहरू यस्तो स्तरमा पुगेका छन् कि तपाईंले आफ्नो सौर्य प्रणालीलाई भर्चुअल रूपमा स्क्यान गरेर कुनै पनि खराबी र सुधार पत्ता लगाउन सक्नुहुन्छ। मोड्युल सफा गर्ने प्रणाली, उच्च गुणस्तरका केबलहरू, डाटा लगरहरू, स्मार्ट ट्रान्सफर्मरहरू र उच्च ऊर्जा कुशल युपीएसको प्रयोगले सौर्य पीभी उत्पादनको दक्षतालाई अझ बढाएको छ । यी सबै पछिल्लो दुई देखि तीन वर्षमा भएको छ र यस्तो क्रान्तिकारी प्राविधिक प्रगतिले आउने दिनहरू धेरै आक्रामक हुने संकेत पनि गर्दछ । यदि हामी २०२६ सम्ममा १ किलोवाटको सौर्य पीभी मोड्युलको अपेक्षा गर्छौं भने त्यो गलत हुने छैन र २०३० मा सौर्य प्रविधि कस्तो देखिनेछ भनेर कसैले कल्पना गर्न सक्दैन । हरित ऊर्जामा आएको परिवर्तनलाई द्रुत गतिमा अघि बढाउने आवश्यकता र प्रेरणाले सौर्य पीभी क्षेत्रमा प्राविधिक नवाचारलाई नयाँ उचाईमा पुर्याएको छ, जसले अपेक्षाका सबै स्तरहरू पार गर्दै कल्पनाभन्दा बाहिरको परिणाम दिन सक्छ

तर सैद्धान्तिक रुपमा भनेझैं हरेक कुराको एक वा अर्को सीमा हुन्छ र सौर्य ऊर्जाको सन्दर्भमा, २४ घण्टामा सूर्य उदाएको समयमा ऊर्जा उत्पादन गर्न सक्छ । यसबाहेक सौर्य ऊर्जाबाट हुने विद्युत उत्पादन सबैभन्दा अनियमित हुन्छ र सूर्य उदाउँदै जाँदा बढ्छ, दिउँसो सूर्य हाम्रो टाउकोमा हुँदा शिखरमा पुग्छ, सूर्य अस्ताउँदै जाँदा अस्ताउँछ र रातमा उत्पादन हुँदैन । घरपरिवार र उद्योगहरूको लागि दिनमा बिजुली खपत लगभग समान हुन्छ, तर धेरैजसो अवस्थामा २४ घण्टा बिजुली उत्पादन हुन्छ । हरेक समस्याको समाधान हुन्छ भनेजस्तो, सौर्य ऊर्जाको सीमितताको समाधान पनि ब्याट्री स्टोरेजमा छ । हामीले ब्याट्रीहरूलाई हाम्रो घरमा प्रयोग हुने सामान्य लिड एसिड ब्याट्रीको रूपमा कल्पना गरेका छौं, तर संसार धेरै विकसित लिथियम आयन ब्याट्रीहरूमा परिवर्तन भएको छ । ब्याट्रीहरूमा एसिड परिवर्तन गर्ने र तिनीहरूलाई २-३ वर्षभन्दा बढी प्रयोग गर्न संघर्ष गर्ने दिनहरू अब सकिएका छन् । ऊर्जाको संसारमा पछिल्लो प्रवेशकर्ता यो लिथियम आयन ब्याट्री हो र निकट भविष्यमा सोडियम ब्याट्रीहरू हुन सक्छ । यी ब्याट्रीहरूको आयु २० वर्षभन्दा बढी छ, यति कम्प्याक्ट छन् कि २० फिट कन्टेनरले ५ मेगावाट घण्टा पावर स्टोरेज गर्न सक्छ र यसको लागत पनि व्याबहारिक रुपमा समान्य नै रहेको छ । नवीनतम तरल शीतलन प्रविधि, ब्याट्री प्याक अनुसार अप्टिमाइजेसन, आगो सुरक्षा सुविधाहरू, धेरै कम क्षेत्र, धेरै कम इनपुट आउटपुट पावर हानि र प्लग एण्ड प्लेको साथ प्रयोगमा सहजताले फेरि पनि प्रयोगकर्ताहरूको सबैखाले अपेक्षालाई पुरा गरेको छ । यी ब्याट्रीहरूले भोल्टेज, हार्मोनिक्स र प्रतिक्रियाशील पावर समाधानहरूको साथ स्थिर शक्ति पनि प्रदान गर्दछ । यी ब्याट्रीले भोल्टेज स्टेबिलाइजरलाई प्रतिस्थापन गर्न सक्छन्, स्थिर प्रतिक्रियाशील पावर प्रदान गर्न सक्छन र पावरको गुणस्तर सुधार गर्न सकने क्षमता राख्दछन् ।

यी ब्याट्रीहरूमा भोल्टेज स्टेबलाइजरको ठाउँ लिन सक्ने, स्थिर प्रतिक्रियात्मक शक्ति प्रदान गर्ने र विद्युतको गुणस्तर सुधार गर्ने विशेषताहरू छन् । यद्यपि यी विशेषताहरू अतिरिक्त लाभका रूपमा रहेका छन्, प्रमुख पक्ष भनेको–यी ब्याट्रीहरूमा ऊर्जा सञ्चय गर्न सकिन्छ र आवश्यकतानुसार प्रयोग गर्न सकिन्छ। ब्याट्री प्रविधिमा हरेक वर्ष तीव्र रूपमा सुधार हुँदै गएको छ, जसले अझ प्रभावकारी र उच्च दक्षताका समाधानहरू प्रदान गर्ने अपेक्षा गर्न सकिन्छ । यी ब्याट्रीहरू विद्युत् सञ्चयका लागि इलेक्ट्रिक सवारीसाधनहरूले प्रयोग गर्ने ब्याट्रीहरू सरह तुलना गर्न सकिन्छ, जसले सौर्य ऊर्जाको स्थायित्व र उपयोगितालाई नयाँ उचाइमा पुर्‍याउनेछ ।

सबैभन्दा सस्तो र वातावरणमैत्री ऊर्जा स्रोतको रूपमा रहेको सौर्य ऊर्जालाई यी ब्याट्रीहरूमा सञ्चय गरी २४७३६५ अबाधित विद्युत् आपूर्तिको सुनिश्चितता गर्न सकिन्छ । सौर्य ऊर्जा र ब्याट्री स्टोरेज प्रणाली (बिइएसएस) को संयोजनले सम्पूर्ण सीमाहरू पार गर्दै स्पष्ट रूपमा विजयी स्थान हासिल गरेको छ । यसक्रममा, हावा र जलविद्युत क्षेत्रमा संलग्न व्यक्तिहरू सौर्य ऊर्जा र बिइएसएस प्रविधिमा भइरहेको तीव्र प्रगति देखेर अचम्मित हुन सक्छन्। तर, जबसम्म तिनीहरूले यी प्रविधिगत परिवर्तनहरूको पूर्ण रूपमा अध्ययन र बुझाइ गर्छन्, तबसम्म सौर्य र बिइएसएस संयोजनले अर्को ठुलो छलाङ मारिसकेको हुनेछ ।

सौर्य ऊर्जाको संसारमा तपाईँलाई स्वागत गर्दै तपाईंको छानाको माथिल्लो भाग र तपाईंको जमिनलाई उज्यालो पार्नुहोस् । ऊर्जाको सबैभन्दा सस्तो, सबैभन्दा सफा र जिम्मेवार स्रोतको साथ ऊर्जा प्राप्त गर्नुहोस् । आफ्नो दैनिक जीवनमा तपाईंको ऊर्जा आवश्यकताहरू मिलाउनको लागि स्मार्ट ब्याट्री स्टोरेज प्रणाली प्रयोग गर्नुहोस् । यस ब्याट्रीको प्रयोगले तपाई हरित ऊर्जाको क्षेत्रमा योगदान गर्दै यस संसारलाई बस्नको लागि राम्रो ठाउँ बनाउने एक असल व्यक्ति बन्न सक्नुहुनेछ ।

**आशिष गर्ग**
अध्यक्ष, ऊर्जा विकास परिषद्
नेपाल उद्योग परिसंघ (सिएनआई)

# अनुहारलाई होइन, अभिनयलाई महत्त्व

**कम्फर्ट जोनमा बसेपछि नयाँ चरित्र बन्न छुट्छ, छुट्नु भनेको मैले गरेका काम उस्तै देखिनु हो, मैले कतिपय फिल्मको कथा सेटमै गएर पढेको पनि छु, त्यो हाम्रै दोष हो, कहिलेकाहीँ परिबन्धमा परिन्छ, कहिलेकाहीँ साथीहरूलाई दिएको वचन टार्न नसकेर त कहिलेकाहीं अर्थकै लागि पनि यस्तो गल्ती गरिन्छ**



**विजय बराल**
अभिनेता



मलाई लाग्थ्यो, 'कुनै पनि इतिहास एक समयपछि टुट्छ ।'

सिनेमा क्षेत्रमा संकटकाल लागिरहेकै बेलामा 'लुट' आयो । 'लुट'बाट फिल्म क्षेत्रमा नयाँ आयामाको सुरुवात भयो । त्यसपछि म आफैंले अभिनय गरेको फिल्म 'कबड्डी' आयो । 'लुट' र 'कबड्डी'हरूले फिल्ममा भएको नवीन प्रयोगलाई स्थापित गरे । त्यसपछि हिरोको मानक पनि भत्कियो । खासमा चरित्रहरू हिरो हुन थाले । त्यतिबेला नै अनुमान गरेको थिएँ, 'फेरि कुनै न कुनै बेलामा कोही आउँछ अनि यो ट्रेन्डमा पनि ट्विस्ट गर्छ ।' यसपालि फिल्म 'पूर्णबहादुरको सारङ्गी'ले १२ वटाभन्दा बढी रेकर्ड ब्रेक गर्‍यो । व्यापारले पनि अनपेक्षित रेकर्ड राख्यो । सधैं सहायक पात्र भएर चरित्र निर्वाह गरिरहेको मैले प्रमुख पात्र भएर काम गर्ने संकल्पचाहिँ राखेको थिएँ । तर मैले प्रमुख पात्र भएर निर्वाह गरेको पहिलो फिल्मले नै इतिहास बनाउँछ वा ट्विस्ट गर्छ भन्ने कुरा कहिल्यै सोचिनँ । म आफैंमा 'सरप्राज्इड' भएँ ।

हुन त फिल्ममा मेरो सुरुवात नै धार परिवर्तन भइरहेको अवस्थाबाट भयो । त्यतिबेला दयाहाङ राई, सौगात मल्लहरूले आफूलाई केही फिल्मबाटै प्रमाणित गरिसक्नुभएको थियो । हाम्रो यात्राचाहिँ अबको समयको फिल्ममा प्राकृतिक तथा मौलिक प्रस्तुतिमा जोड थियो । जस्तो कि अभिनयको फरक स्वाद । हाम्रो अभिनय नै कोहीसँग बोल्दै गर्दा आफ्नै मान्छेसँग बोलेको जस्तो अनुभूति गर्ने खालको थियो । 'नो एक्टिङ' अर्थात् एक्टिङ नै नगर्ने शैली । अभिनयको परम्परागत शैली ब्रेक गरेर अगाडि बढ्यौं । हुन पनि हाम्रो परिवेश तीन वटा लेयरमा हुन्छ- हिमाल, पहाड, तराई । भूगोलअनुसार भाषा र लवजमै विविधता हुन्छ । हामीलाई त्यतिबेला लाग्यो, 'हाम्रो चरित्र लाउड हुनसक्छ । लाउडनेस हुँदै गर्दा पनि चरित्र हामीजस्तै हुनुपर्छ । हाम्रो अनुहारजस्तै मिलेका हुनुपर्छ र हामीलाई बाटोमा हिँड्दा कसैलाई चिन्नै भएन ।' किनकि हामी आम अनुहार हौं । भीडबाट फरक देखिने अनुहार हैनौं ।

हिरोको मान्यता भत्किनु चानचुने कुरा थिएन । सुगठित शरीर, चकलेटी अनुहारलाई हिरो मानिरहेको समयमा हाम्रो पुस्ताले चरित्रलाई हिरो बनाउने शैली स्थापित गर्‍यो । अब त हिरो न बलियो हुनुपर्थ्यो, न गोरो । अभ्यासको डेढ दशकको अन्तरालमा सबै मेकर कन्भिन्स हुनुभयो कि फिल्मको हिरो कथाको पात्र हुनुपर्छ । त्यही अन्तरालमा मैले चरित्र अभिनेताका रूपमा काम गरें । साइड क्यारेक्टरका रूपमा काम गरे पनि मेरा चरित्र कहिल्यै सहायक लागेनन् मलाई । किनकि मेरो पात्रको आफ्नो जर्नी हुन्थ्यो । पृष्ठभूमि हुन्थ्यो । उद्देश्य हुन्थ्यो । त्यसैले मैले आफ्नो प्रोसेस इन्जोय गरें । जब मैले 'पूर्णबहादुरको सारङ्गी'मा प्रमुख पात्रको भूमिका निर्वाह गरें । प्रमुख हुँदा पनि सहज भयो । धेरै सहायक भूमिका गर्दा त्यतिबेला मैले बोक्दाको लोड र प्रमुख हुँदा अरूले बोकेको लोड देख्न पाएँ । प्रमुख पात्रका रूपमा काम गर्दा थाहा भयो, प्रमुख बन्नुको भार अर्कै हुँदो रहेछ । पहिला मलाई जहिल्यै फिल्ममा प्रमुख पात्रले मात्र क्रेडिट खायो जस्तो लाग्थ्यो । तर उसलाई त नचाहँदा नचाहँदै पनि धेरै भार हुँदोरहेछ । त्यही भार बहन गर्ने भएरै प्रमुख भूमिकाले बढी क्रेडिट पाउने रहेछ । त्यो पाउनु स्वाभाविक रहेछ ।

**कम्फर्ट जोन**

कथा, हिरोको मानक र अभिनय शैलीमा परिवर्तन त आयो । तर हामीले चाहेको जस्तो वातावरण बन्न अझै संघर्ष गर्नुपर्ने छ । फिल्म बलियो बन्नका लागि पटकथा बलियो हुनुपर्छ । कथाको पात्रहरू पनि जीवन्त देखिनुपर्छ । अहिले हाम्रो एउटा मान्यता छ, 'राम्रा कलाकारले अभिनय राम्रो गरिहाल्छन् ।' यो गलत हो । राम्रै अभिनय भए पनि फिल्म निर्देशकको माध्यम हो । त्यसमा तपाईंले कल्पना गरेको चरित्र देखिनुपर्छ । यसको लागि तयारी एकदमै आवश्यक छ । पछिल्लो समय कम तयारी भएको देख्छु । यसले कलाकारलाई कम्फर्ट जोनमा राख्छ । कम्फर्ट जोनमा बसेपछि नयाँ चरित्र बन्न छुट्छ । छुट्नु भनेको मैले गरेका काम उस्तै देखिनु हो । मैले कतिपय फिल्मको कथा सेटमै गएर पढेको पनि छु । त्यो हाम्रै दोष हो । कहिलेकाहीँ परिबन्धमा परिन्छ । कहिलेकाहीँ साथीहरूलाई दिएको वचन टार्न नसकेर त कहिलेकाहीं अर्थकै लागि पनि यस्तो गल्ती गरिन्छ । त्यस्तो बेलामै झुरै गर्ने भन्ने त हैन । किनकि एक्टर हुँ भन्ने कुरा त सोचिन्छ । एउटा एक्टरले विभिन्न चरित्रहरू ब्याकअप राखिरहेको हुन्छ । सेटमा कथा पढ्नासाथ लाग्छ- म आफ्नो ब्याकअप चरित्रलाई यसमा फ्युजन गर्छु । यद्यपि, आत्मग्लानिचाहिँ हुन्छ । अहिले पनि कुनै फिल्म सम्झँदा लाग्छ, 'पैसाका लागि कस्तो कामचलाउ अभिनय गरियो ।'

मैले निर्देशकहरूलाई पनि अहिले जोड दिने कुरा चरित्रको तयारीमा हो । कुनै चरित्रमा काम गर्दैछु भने केही न केही ट्विस्टिङ र ब्रेकिङ गर्नुपर्‍यो नि । भलै नयाँ चीज भनेर पूरै आवरण परिवर्तन गर्नु नपर्ला । तर आफूलाई मन्थन गर्नुपर्छ । अहिले मन्थनको कमी भइरहेको अवस्था छ । फिल्ममा जानुअघि गर्नुपर्ने पूर्वतयारी, चरित्रमाथि छलफल, लेखकले सोचेको चरित्र र निर्देशकले देखाउन खोजेको के हो ? त्यो एकापसमा बसेर निकाल्नुपर्छ । त्यसबाट नयाँ चरित्रको जन्म हुन्छ । नभए त आफैं भइयो नि । यो निरन्तर अभ्यासबाट आउने कुरा हो ।

पछिल्लो समय यही कुराको अभाव खड्किएको देख्छु म । अहिले प्रशस्त फिल्म बनिरहेका छन् । फिल्म धेरै बन्नेबित्तिकै कलाकारको माग आउँछ । कलाकारको माग हुनेबित्तिकै धेरै ठाउँमा काम गर्नुपर्ने हुन्छ । धेरै ठाउँमा काम गर्नेबित्तिकै लाइनअप मिलाउँदा निरन्तर एकपछि अर्को जानुपर्ने हुन्छ । त्यसरी पटकथा पनि कहिलेकाहीं उतै गएर पढ्नपर्ने अवस्था आइदिनसक्छ । यसमा मेकरको हतारो देखिन्छ । छिटो सिनेमा बनाऊँ र छिटो रिलिज गरौँ भन्ने दबाब हुन्छ । फेरि उनीहरूले छनोट गर्ने कलाकारको संख्या पनि सीमित छ । मेकरहरू चलेको अनुहार खोज्नुहुन्छ । अब्बल मान्छेहरूलाई विश्वास गर्नुहुन्न ।

मेरै हकमा पनि 'पूर्णबहादुरको सारङ्गी' चलेपछि लिडको अफर बढेको हो । हाम्रो समाजले मानेपछि मात्र मेकरले मान्नुहुन्छ । म भन्छु पनि- नयाँ अनुहार ल्याउने हो भने कास्टिङ गर्नुस् न । सीमित फिल्म बन्ने र राम्रो काम गर्‍यो भने एक्टरलाई तयारीका लागि पनि समय हुन्छ । एउटा फिल्मका लागि कम्तीमा पनि कलाकारले ३० दिन त दिनुपर्छ । यसले मन्थन गर्ने समय दिन्छ । एकपछि अर्को फिल्मको सेड्युल छ । कुनैको सेड्युल थुप्रेर बनिरहेको हुन्छ । कुनै सम्बन्धले गर्नुपरिरहेको हुन्छ । कुनै इमोसनमा जोडेर गरिन्छ । कुनै अर्थले गाह्रो पारेर गरिन्छ । फिल्म बनाउनेहरूको पनि लगानी धेरै हुन्छ । छिटो निकाल्नुपर्छ भन्ने दबाब हुन्छ । यी जोखिमयुक्त कुरा हुन् । यो कुरा फिल्म र अभिनयका लागि हानि हो ।

कथालाई लिएर लेखकको एउटा सपना हुन्छ, निर्देशकको सपना अर्को । अनि प्रोड्युसरको र अभिनेताको अर्को सपना । अन्ततः सबैको सपना दुर्घटित हुन्छ । यसमा दोषी निर्देशक हुन्छ । किनकि डिजाइनर नै उही हो । सबै कुराको नियन्त्रण निर्देशकमा हुन्छ । बलिया निर्देशकले मिलाएर सेटलडाउन गर्दै आफूलाई चाहिएको कुरा कथा र एक्टरबाट निकाल्नुहुन्छ । तर सबै निर्देशकको हकमा लागू नहुन सक्छ ।

**'फेस भ्यालु'को खोजी**

हाम्रो फिल्ममा लिड क्यारेक्टरको खोजी बजार अनुसार हुन्छ । खासमा स्क्रिप्टमा लेखिएको चरित्रअनुसार खोजी गर्नुपर्ने हो । अहिले लेखकले लेख्दैमा कुनै पात्रलाई सोचेर लेखेको छ । अनि नयाँ कुरा कसरी आउँछ त ? यदि तपाईंले मलाई सोच्नुभयो भने मप्रति एउटा दृष्टिकोण होला । विजयले कमेडी गर्छ भनेर त्यहीअनुसार लेख्नुहोला । मेरो लागि त रिपिटेसन हो । मलाई त मजा आउँदैन । तपाईं फ्रि भएर जति लेख्नुहुन्छ, त्यो कुराबाट नयाँ पात्र सिर्जना हुन्छ ।

मुख्य चरित्रकै खोजीबारे मन्थन गरौं । मेरो अनुभवमा दुई वटा तरिकाले उसको खोजी हुन्छ । पहिलो त अन्तर्राष्ट्रिय बजारमा उसको चर्चा कति छ ? दोस्रोचाहिँ निर्देशकको दिमागमा को को चरित्र आउँछन् त ? अभिनय क्षमता अन्तिममा जान्छ । कलाकारको नाम लिँदै गर्दा उसको अनुहारबाट बजारमा कति पैसा उठ्छ भन्ने कुरा सोचिन्छ ।

अभिनय क्षमताका आधारमा जाने हो भने प्रशस्त एक्टर छन् । तर गुमनाम छन् उनीहरू । जसले काम पाइरहेकै छैनन् । हुनुपर्ने त अभिनय क्षमताको आधारमा हो । तर मार्केटको आधारमा खोज्दा फिल्म क्षेत्रको विकास हुन्न । नयाँ मान्छे आउन पाउँदैन । नयाँ मान्छे आउन नपाउँदा नयाँ कुरा आउन पाउँदैन । जबसम्म नयाँ मान्छेलाई दिइन्न । तबसम्म रिजल्ट थाहा हुन्न ।

गर्नुपर्ने के हो त ? तपाईं दुई जना पुरानो कलाकार लिँदै हुनुहुन्छ भने चार जना नयाँलाई अवसर दिनुस् । फिल्म क्षेत्रका टप मेकर होलान् । ती मेकरले दुई जना चलेको मान्छे लिएर चार जना नयाँ मान्छेलाई अवसर दिए भने त्यसले कम्तीमा पनि २ जना 'खतरनाक' मान्छे जन्माउँछ । त्यसले फिल्म क्षेत्रमा घाटा हुन्न, फाइदा हुन्छ । नत्र त हामीसँग पलायनको स्थितिबाहेक के हुन्छ ?

'फेस भ्यालु'कै पछि लाग्ने हो भने राम्रो कथा पनि मर्छ । गजब लेखिएका कथा बजामा आउन पाउँदैनन् । 'फेस भ्यालु' निर्माण गर्दैगर्दा रिपिटेसन बढ्छ । 'फेस भ्यालु' खोज्नु भनेको केवल बजार सोच्नु हो । सोच्दा मार्केट मात्र सोचिन्छ । त्यसरी सोच्दा हाम्रो शैली खोइ ? हामीले खोजेको नेपाली सिनेमाको मौलिकता खै ? 'फेस भ्यालु'ले यी कुरा छुट्छन् । बजारीकरणलाई मात्र ध्यान दिँदा गुदी छुट्छ । सतही कुरामा हामी बग्छौं । अबका दिनमा निर्माता वा निर्देशकले यो कुरामा गहिरो चिन्तन गर्ने हो भने फिल्म क्षेत्रमा नयाँ सम्भावनाहरूले अवसर पाउँछन् । फिल्म क्षेत्रमा नयाँ आयाम देखापर्छन् ।

# योगमाया र झमकको कथा पर्खिरहेको रजतपट



अञ्जना बराइली
अभिनेत्री

यस क्षेत्रमा मेरो करियर सुरुआत सन् २०१७ देखि भयो। खास मेरो मिस नेपालमा भाग लिने इच्छा थियो। त्यहाँ जाँदा केही अनुभव बटुलेर र बलियो भएर जाऊँ जस्तो महसुस भयो। त्यही सोचले मैले २०१७ मा 'मिस फेसनिस्टा'मा भाग लिएँ। विजेता पो भएँ। यो कम्पिटिसनको टाइटल क्राउन आफ्नै टाउकोमा आएपछि मलाई म्युजिक भिडियो गर्न अफर भयो। एक्टिङभन्दा पनि डान्सिङ म्युजिक भिडियो थियो त्यो। जुन मलाई दीपु मल्लले अफर गर्नुभएको हो। त्यो भिडियोबाट मैले दर्शकको राम्रै प्रतिक्रिया पाएँ।

त्यसपछि अरू म्युजिक भिडियोहरूमा अफर हुन थाले। सँगै मोडलिङतिर पनि काम पाउन थालें। मोडलिङको काम त अहिले पनि आइरहेकै हुन्छ। फेसनप्रति रुचि भएकाले अझै पनि काम आउँदा र भ्याउँदा म मोडलिङ गरिरहेकै हुन्छु। मोडलिङले व्यक्तिको बाहिरी मात्र नभएर भित्री व्यक्तित्वसमेत विकास गर्छ। किनभने आत्मविश्वास नभई तपाईं मोडलिङ गर्न सक्नुहुन्न।

एकातिर मोडलिङ र अर्कोतिर म्युजिक भिडियो सँगै अघि बढिरहेको थियो। त्यही बेला, सुजन चापागाईंको 'घुमी घुमी' मा मैले काम गर्ने मौका पाएँ। 'घुमी घुमी' को काम बाहिरिएसँगै मेरो करियर पनि अंग्रेजीको 'यू' जसरी घुम्यो। अनि, म भित्रिएँ फिल्म क्षेत्रमा।

म्युजिक भिडियोमा भन्दा 'घुमी घुमी' मा अलि बढी म हराएँ। दर्शकले पनि त्यो गीतमा मेरो कामलाई खुब रुचाइदिनुभयो। त्यो गीतपछि नै मलाई पहिलोपटक चिन्ने दर्शकहरू बढ्नुभयो। अर्को शब्दमा भन्नुपर्दा 'घुमी घुमी' ले मलाई पेजेन्टले दिएकोभन्दा बढी पपुलारिटी दियो। अनि त्यही पपुलारिटीले दियो 'पुजार सार्की' र 'पूर्ण बहादुरको सारङ्गी'। त्यसो त सन् २०२५ सम्म आइपुग्दा मैले पाँचवटा फिल्ममा काम गरिसकेको छु।

तर, सबैभन्दा सन्तोषजनक अनुभव मैले 'पुजार सार्की' गर्दा पाएँ। किन होला भने त्यसमा मैले निर्वाह गरेको पात्रले कताकता मेरो वास्तविक जीवनका भावनाहरू बोकेको थियो। यो पात्र बाँच्दा आफूले आफ्नै यथार्थ जीवनमा खुलेर व्यक्त गर्न नसकेका भावना, संवेदना अभिनयमार्फत भए पनि खुलेर व्यक्त गर्न पाएँ। त्यसैले एक किसिमले यो पात्रमार्फत व्यक्तिगत जीवनमा आफैंसँग खुल्न पाएजस्तो लाग्छ। यसका निर्देशक दिनेश राउतसँग काम गर्न मलाई निकै सजिलो लाग्यो।




**समाजमा महिला जतिसम्म सशक्त छ, सिनेमाले पनि त्यति नै देखाइरहेको हुन सक्छ, फेरि सिनेमा समाजको त्यस्तो ऐना बनोस्, जसले समाजको भविष्य चित्रित गर्न सकोस्**

पूर्णबहादुरको सारङ्गीको पात्र प्रगतिशील सोच राख्ने महिला पात्र हो। 'छोरोलाई पढाउनुपर्छ, जातकै कारण मान्छे भएर पनि खुम्चिएर बाँच्नु हुँदैन' भन्ने किसिमको पात्रको सोच मन परेर म त्यो सिनेमा खेल्न इच्छुक भएकी हुँ। त्यसो त यो पात्रलाई पनि नयाँ जिन्दगी थाल्न पुरुषकै साथ चाहिएको देखाइएको छ। कथालाई रोचक बनाउन त्यस्तो गरिएको हुन सक्छ। कथा लेख्दा एउटा पात्र हेरेर लेखिने होइन होला। दर्शकलाई पनि बाँधेर राख्न सक्ने हुनुपर्‍यो। अनेक कारण हुन सक्लान्। फेरि सबै कथामा महिला एक्लै पर्याप्त हुनुपर्छ भन्ने होइन। महिला र पुरुषलाई एकअर्काको साथ चाहिनु प्राकृतिक कुरा हो। यद्यपि केही सिनेमा भने त्यस्ता महिला पात्रमाथि बन्न जरुरी छ जो पुरुषको साथबिना बाँचिरहेका छन्। किनभने पुरुषबिना महिला बाँच्नै सक्दैनन् भन्ने छाप दर्शकमा नपरोस्। नत्र घरेलु हिंसा, मानसिक यातना सहेर पनि सम्बन्ध तोड्न नसकिरहेका दिदीबहिनीहरूले त्यो सकसपूर्ण जिन्दगीबाट निस्किने हिम्मत कसरी गर्लान्?

मलाई उपन्यास र जीवनीका किताब पढ्न खुबै मन पर्छ। सेतो धर्ती, राधा, योगमाया, जीवन काँडा कि फूलले मेरो हृदयलाई छोएको छ। बाहिरतिर किताबमाथि फिल्म बनिरहेको सुनिन्छ। अलिक महिनाअघि पनि विदेशमा बेचिएको पुरुष पात्रमाथि लेखिएको जीवनी किताबलाई भारतमा सिनेमाको रूपमा ल्याइएको थियो। दर्शकले त्यस फिल्मलाई एकदम मन पराएको प्रसंगहरू सामाजिक सञ्जालमा जताततै पढेकी थिएँ। नेपाली फिल्म निर्माताहरूले पनि नेपालका प्रेरणादायी पात्रहरूमाथि सिनेमा बनाए हुन्थ्यो जस्तो लाग्छ। झमक घिमिरेकै जीवनी 'जीवन काँडा कि फूल' माथि फिल्म बन्यो भने किताब नपढ्ने दर्शकले पनि त्यसले दिने प्रेरणा र सकारात्मक ऊर्जा लिन पाउँथे होलान्। हामीले चाहने हो भने 'योगमाया' माथि नै फिल्म बनाउन सक्छौं होला। किताब पढ्दै गर्दा त्यसका पात्रलाई फिल्ममा देख्न खोज्ने लोभ होला मैले त्यस्तो सोचेको।

किताब पढ्नबाहेक मलाई नाच्न र गीत सुन्न मन पर्छ। पेसाले माग्दा मात्र नभएर घरमै पनि नाचिरहेकी हुन्छु। फुर्सदमा आफ्ना सौखका कामहरू गर्नुपर्छ जस्तो लाग्छ। गीतमा नेपाली र हिन्दी धेरै सुन्छु।

फिल्म क्षेत्रमा कलाकारको रूपमा आउन चाहनेले धैर्य अनि अनुशासनचाहिँ सिकेर आउनैपर्छ जस्तो लाग्छ। यो क्षेत्रमा समयको महत्त्व बुझ्ने, आफ्नो मानसिक र शारीरिक स्वास्थ्यको ख्याल राख्ने, कोसँग कसरी अभिव्यक्त हुने भन्ने, कतिपय अवस्थामा बाउन्डरी सेट गर्ने कुरामा सचेत र अनुशासित हुनुपर्ने हुन्छ। सबैभन्दा ठूलो कुरा पारिवारिक साथ पनि हो। कलाकार भएर बाँच्न खोज्नु नेपाली समाजमा विभिन्न हिसाबले चुनौतीपूर्ण छ। नैतिक-सामाजिक र आर्थिक चुनौतीसमेत छ फिल्म क्षेत्रमा। त्यसैले आमाबुवा र विवाहित हो भने श्रीमान्को सपोर्ट त हुनैपर्छ। मलाई भने पारिवारबाट पूर्ण रूपमा सपोर्ट भएको हुँदा निकै सजिलो भएको छ। तर, त्यति हुँदाहुँदै फिल्म क्षेत्रमा हुने आर्थिक चुनौतीले बेलाबेला असर नगर्ने त होइन। कहिलेकाहीं यस्तो पनि लाग्छ कि यो लाइन छोडेर एमबीएको पढाइ उपयोग पो गरौं कि? बिजनेस गरौं कि? फेरि सोच्छु, यहाँसम्म आइसकेको छु।

यही काममा मन रमाइरहेकै छ, बिजनेस नै गर्नुपरे पनि यही क्षेत्रमै किन नगरूँ? अनि भविष्यमा फिल्म निर्माण गरेको कल्पना आउँछ। पहिला त स्थापित कलाकार बनुँ अनि भविष्यमा फिल्म निर्मात्री बन्ने सपनाले गरा जाडेको छ।

# बजार खोज्ने होइन, बनाउने हो

**संगीतका विधा धेरै छन्, कुनै पनि विधामध्ये निरन्तर काम गरियो भने राम्रै हुन्छ, त्यहाँसम्म पुग्न धैर्य गर्नुपर्छ, अध्ययन र निरन्तरता चाहिन्छ**

**चक्र बम**
गायक

मविशेष गरेर सुदूरपश्चिम र कर्णालीका धुनहरूलाई लिएर गीत गाइरहेको हुन्छु। यसमा कर्णालीका भाकाहरूलाई फ्युजन (मिसाएर) गरेर गाउँछु। मैले सुदूरको देउडामा काम गरिरहेको हो। मेरो संगीतमा मौलिक सिर्जना हुन्छ। त्यसैमा कतिपय ठाउँमा मौलिक शैलीलाई परिमार्जन गरेर काम गर्छु।

मान्छेले सुदूरपश्चिमको भाका भनेपछि देउडा भनेर चिन्छन्। त्यहाँको भाषालाई समेटेर, मिसाएर संगीत भर्ने काम गरेको हो। मेरो गीत कतिपय लोक पप शैलीमा छन्। यसमा केही डान्सिङ सङ पनि बनाएको छु।

यसरी काम गर्दा सुरुवातमा स्विकार्न गाह्रो भएको पाएँ। कुनै पनि चिज मान्छेहरूलाई चाँडै स्वीकार गर्न गाह्रो हुने रहेछ। यसमा मैले मौलिकता बिगारेको होइन। हिजोको दिनमा जसरी मादलहरू मात्रै बजेर अथवा बाँसुरीसँग मात्रै देउडा गीत बज्थ्यो। मैले मर्म नमर्ने तरिकाले गितारको लयमा राखेर फरक शैलीको संगीतको धुन सुनाएको हुँ। मेरो गीतमा मौलिकता हराएको जस्तो लाग्दैन।

मेरो सुरुवाती 'मोटा चामलको' भन्ने मौलिक देउडा गीत थियो। २०७३ सालमा यो गीत निकालेको थिएँ, जसमा रेगुलर म्युजिक थियो। चल्दै आइरहेको संगीतमा मैले काम गरेको थिएँ। यसमा मैले नै संगीत भरेको थिएँ र सुशील बोहराको शब्द थियो।

त्यो समयमा मैले एक दर्जन मौलिक गीतमा काम गरें। अग्रजहरूको गीतलाई नै पछ्याउने काम गरें। तर त्यसले मलाई अहिलेको जसरी चिनाउने काम गरेन। यो गीतले त्यति चर्चा पाएन पछि मैले एउटा 'नाच मेरी झुमा' भन्ने 'डान्सिङ सङ' गाएँ। त्यसमा मैले सुदूरपश्चिमको भाषा राखेर काम गरें। त्यहाँबाट नयाँ ट्रेन्ड सेट भयो।

त्यसपछि मलाई कुरा के थाहा भयो भने मान्छेहरूले अति मन पराएका गीतहरू नयाँ ढंगबाट बुझ्दा रहेछन्। यस्तो खाले संगीतमा पनि एक वर्ष काम गरें। त्यसको २/३ वर्षपछि भने भिन्न आवाज र संगीतमा काम गरें। जस्तै : भारतको उत्तराखण्ड कुमाउ, गढवालको संगीत हामीसँग अलिक मिल्दोजुल्दो हुन्छ। मैले २०७७ सालमा 'ओए काजल' भन्ने गीत ल्याएँ। यो युट्युबमा ३ करोड पटकभन्दा बढी हेरिएको छ। यो अलिक भिन्न र भाषामा नौलो थियो। यो नेपालमा मात्र नभएर भारतको उत्तराखण्डतिर पनि चर्चित भयो। यसले गरेर त्यहाँ धेरै भारतीय आयोजकहरूको महोत्सवमा गएर गाएँ। यो गीतले छुट्टै किसिमको माहोल बनायो। 'नाच मेरी झुमा' ले सुदूरपश्चिममा चिनाउन सफल भयो भने 'ओए काजल' बाट मान्छेहरूले सबैतिरबाट मलाई चिन्न थाले।

त्यसपछि अलिक भिन्न गर्नुपर्छ भन्ने भयो। त्यहाँको मौलिक देउडा भाकामा 'भन साली' भन्ने गीत २०७७ सालमा नै ल्याएँ। देउडाको ताल भएको गीतलाई मैले लाइभ सेसनमा प्रस्तुत गरें। यो लाइभ म्युजिक जस्तो प्याट्रनमा बनाएँ। त्यो पनि सबैले एकदमै मन पराउनुभयो।

यसपछि २०७९ सालमा 'कर्णालीतिर झुमाइँदै' गीत ल्याएँ। यो युट्युबमा ५० लाखभन्दा बढी हेरिएको छ। यी सबै गीत केही भिन्न छन्। सुदूरपश्चिमको भाषा सुन्दा हरेक गीतमा नयाँपन थपिँदै गयो। नेपालमा संगीतका धेरै विधा छन्। त्यसमाथि सुदूरपश्चिमको भनेपछि एउटा ठाढे र देउडा गीत मात्र सुन्ने श्रोता छन्। यसरी सबै भेग, भूगोल, सम्प्रदाय र सबै उमेर समूहमा पुग्नुपर्छ भनेर भिन्न प्याट्रनमा काम गर्नुपर्ने भयो। यो काम गर्ने क्रममा 'कर्णालीतिर झुमाइँदै' युवाहरूले एकदमै मन पराए।

अनि बुढापाका लागि भनेर हुड्केली गीत ल्याएँ। मौलिक सिर्जनामा 'हरि भजन देउडा' भनेर भजन पनि ल्याएँ। सुदूरपश्चिमको होली शैलीको गीत ल्याएँ। भजन शैलीको होली गीतहरू ल्याएँ। यसमा हरेक मान्छेसँग पुग्नुपर्छ भनेर भिन्न शैलीको संगीतमा काम गरें।

भाषा मात्र नभएर अहिले मैले सानादेखि पाकासम्मले केही नयाँ लिएर आउँछ भन्ने आशा गर्नुहुन्छ। त्यतिम ात्र नभएर नयाँ आउनेहरूले पनि मेरो ट्र्याकलाई पछ्याउने र सल्लाह लिने गर्नुहुन्छ। हिजोको दिनमा यो गीत भएन भन्नेहरूले पनि यही प्याट्रनमा लेखेको पाइन्छ। त्यसले गर्दा आफूलाई पनि खुसी लाग्छ। मेरो आफ्नै सिर्जना हुन्छ। म आफैं गीत लेख्ने र त्यसमा संगीत भर्ने सबै काम गर्छु। भिडियोमा आफैं जोडिएर काम गरिरहेको हुन्छु। डान्स फर्मबाट पनि आएकाले मलाई नाच्न पनि मन पर्छ। मेरो भिडियोमा म आफैं आउनुको कारण सुरुमा मलाई कसैले पत्याएनन्। आफ्नो सिर्जनाप्रति म आफूलाई पनि विश्वास थिएन। त्यसैले सुरुको गीत पनि अरूको शब्दमा गाएँ।

अहिले बजारमा गाएका गीतहरू त्यतिबेला नै मेरो झोलामा थिए। तर आफूप्रति धेरै विश्वास नभएकाले त्यत्तिकै राखें। आफ्नो स्वर खत्रै पनि भएन। फेरि मैले लेखेको गीत अरूले नगाइदिने। ठीकै हो भनिदिने। पछि टुक्रा-टुक्रा सिर्जना बजारमा आउन थालेपछि सबैले मन पराइदिनुभयो।

अहिले उमेरले ३२ वर्ष लागें र संगीतको क्षेत्रमा लागेको पनि १२ वर्ष भइसक्यो। म संगीतमा एकदमै चुनौती मोलेर आएँ। नेपाली संगीत क्षेत्रमा स्थिर हुन गाह्रो छ। त्यसमाथि जसको धेरै बजार नभएको ठाउँमा आएँ। देउडाको बजार भनेको एउटा प्यासन र संस्कृतिका लागि मात्र गाइदिने भन्ने हुन्छ। त्यसलाई मान्छेले टिकट लिएर र पैसा तिरेर गायकलाई सुन्ने चलन छैन। मैले त्यस्तो ठाउँमा हात हालें। त्यसको बजार थिएन। अनि मैले निरन्तर काठमाडौंको स्टुडियोबाट एक मिनेट गर्दै टुक्रा-टुक्रामा काम गर्थे। यसैलाई जोडेर काम गरें। सुदूरपश्चिमको भए पनि मैले यसमा एउटा नतिजा दिने काम गरें। सुरुमा एकदमै गाह्रो भयो। नयाँ सुरुवात गर्दा धेरै गाह्रो हुन्छ। सुरुमा सुदूरको भाका बिगार्‍यो भन्ने आरोप पनि आयो। धेरै कार्यक्रममा म सहभागी हुन पाइनँ।

मलाई के लाग्छ भने म बजार बनिसकेको ठाउँमा आएको होइन कि म आइसकेपछि बजार बनेको हो। किनभने मेरो आशा देउडा गाएर देश-विदेश जान्छु, कन्सर्ट गर्छु र महँगो पारिश्रमिक लिन्छु भन्ने थिएन। अनि काठमाडौंका मान्छेलाई पनि देउडा सुनाएर स्टेजमा पर्फम गर्छु भन्ने आशा थिएन। तर काम गर्दै जाँदा प्रविधिमा भएको रूपान्तरणले गीतहरू जहाँ र जसले पनि सुन्न सक्ने भयो। त्यो मेरा लागि प्लस प्वाइन्ट भयो।

यहाँसम्म आइपुग्दा म खुसी छु। त्यति धेरै अपेक्षा नराखेको मान्छेले यति धेरै काम पाउँदा खुसी छु। म त्यस्तो मूलधारमा आएर चर्चा पाएको मान्छे होइन। एउटा सामान्य जिल्लाको भेगको मेलोडीलाई लिएर आएको हो। अहिले फिल्ममा गीत गाउन पाएको छु। पश्चिम कन्टेन्टमा बनेका फिल्महरूमा अफर आउँछ। केही कार्यक्रम भए मलाई सम्झिनुहुन्छ। त्यो हिसाबले निरन्तर लाग्यो भने १०/१२ वर्षपछि केही न केही नतिजा हातमा पर्छ भन्ने सिकेको छु।

हामी सानो हुँदा कोही देउडा गीत गाउँदैन थिए, लजाउँथे। सुदूरको सट्टा अरू म्युजिक कम्पोज गर्थे। अहिले त्यहाँका साथीहरू देउडा संगीतमा काम गर्न खोजिरहेका छन्। मलाई कुनै न कुनै पार्टमा जोड्नुहुन्छ। यसले सुदूर पहाडको संगीत माथि आएको छ जस्तो लाग्छ।

नेपालमा श्रोता कम छन्। बजार सानो छ। भाषाको विविधता पनि छ। यसमा कलालाई माया गर्न सक्ने मान्छे मात्र टिक्न सक्छ। व्यावसायिक मान्छे, कमाउँछु भनेर धेरै अपेक्षा बोकेर आएका मान्छे टिक्न सक्दैनन्। भित्रबाटै केही गर्न सक्ने हुनुपर्‍यो त्यो भन्दा बढी भित्रबाटै खुसी हुनुपर्‍यो। यसमा म खुसी छु। मन पर्ने विधामा छु। संगीतको विधा धेरै छन्। कुनै पनि विधामध्ये निरन्तर काम गरियो भने राम्रै हुन्छ। त्यहाँसम्म पुग्न धैर्य गर्नुपर्छ। अध्ययन र निरन्तरता चाहिन्छ। संगीतमा कमाइ छैन भनेर व्यावसायिक हिसाबले सोच्नु भएन। नेपाली संगीत धेरै अगाडि पुगेको छैन। रातारात घर र गाडी किन्छु भन्ने हुँदैन। समस्या जहाँ पनि हुन्छन्। हिजोको दिनमा पनि समस्या थियो। हामी कमर्सियल पनि हुनुपर्छ। संस्कृति र मौलिक भनेर मात्र हुँदैन। अलिकति कमर्सियल र बजार हेरेर काम गर्नुपर्छ। नभए नेपाली श्रोताले नेपाली मात्र नभएर बाहिरको संगीत पनि सुन्न सक्छन्। उनीहरूलाई कस्तो साउन्ड चाहिरहेको छ ? अहिले युवाले के खोजिरहेको छ ? मध्यनजर गर्दै भाकालाई अगाडि बढाउनुपर्छ।

म सानै उमेरमा संगीतमा होमिएँ। अहिलेसम्म जति पनि सिकियो, काँचो दिमागले हलुकासँग काम गरेको जस्तो लाग्छ। तर पनि मान्छेको कलाप्रति सम्मान देखेर साँच्चिकै राम्रो काम गर्नुपर्नेछ भन्ने लागेको छ। यसलाई योभन्दा अन्तर्राष्ट्रिय हिसाबमा धेरै कुरालाई ल्याएर नेपालको प्रतिनिधित्व हुने गरी नै सुदूरपश्चिमको देउडा, नेपालको संगीतको क्षेत्रमा काम गर्ने मन छ। अहिलेसम्म एउटा अनुभव र सिकाइ भयो। अब राम्रोसँग काम गरेर यसलाई ४/५ वर्षमा एउटा छुट्टै ठाउँमा पुर्‍याउनुपर्छ भन्ने मेरो सोच छ। म सजिलै यस क्षेत्रबाट पछि हट्दिनँ। अझै १० वर्ष यस क्षेत्रमा यसरी नै सक्रिय रूपले काम गर्न सक्छु।

मलाई नसुन्ने धेरै मान्छेहरू पनि हुनुहुन्छ। यसमा हाम्रो सानो देश छ त्यसमाथि धेरै भाषा र संस्कृतिलगायत विविधताले धेरैलाई बाँधेको छ। त्यही भएर मलाई सबैको संगीतलाई ल्याएर सबैसँग पुग्न मन छ। सबै ठाउँको संगीतलाई लिड गरिरहेको मान्छेसँग जोडिएर काम गर्न मन छ। देशको संस्कृति पनि साटासाट होस् र मान्छेले त्यसलाई नयाँ स्वादमा लिन सकोस्। नयाँ पुस्ताले त्यो कुरा राम्रो मान्छन्। भिन्न संगीतको विधामा जोडिएर काम गर्न मन छ। यसलाई मानिसले एकदमै हलुकासँग लिन्छन्। नयाँ र भिन्न गर्ने मान्छेलाई हामीले बुझिदिनुपर्छ। यसको प्रचारप्रसार राम्रो भयो भने हामी श्रोतामाझ राम्ररी पुग्न सक्छौं।

# पुस्ता मात्र होइन, विचार परिवर्तनको खाँचो

**लाइट, साउन्ड टेक्निसियन, प्रोडक्सन डिजाइनलगायत धेरै प्राविधिक कुरा आउँछ, यी सबैमा काम गर्ने र ज्ञान भएको मान्छे कम छन्, प्राविधिक रूपमा आफूलाई योग्य बनाउने र अनुभव बटुल्ने हो भने कामको कमी हुँदैन**

**शान्ता नेपाली**
निर्देशक

हाम्रो फिल्म उद्योग दिगो छैन। यसमै पूरा समय काम गरेर बाँच्नलाई गाह्रो छ। किनभने हाम्रो बजार सानो छ। हामीले व्यावसायिक काम गर्‍यौं भने त्यसलाई बेच्ने ठाउँ हल मात्र हो। अरू ठाउँ छैन। हलमा चलाउन पनि निकै प्रतिस्पर्धा हुन्छ। त्यसका लागि फिचर फिल्ममा नै काम गर्नुपर्छ कि मुख्य भूमिकामा काम गर्नुपर्‍यो। त्यो हिसाबमा चल्न सके मात्र यस क्षेत्रमा टिक्न सकिन्छ। डकुमेन्ट्री वा फरक धारको काम गर्दा धेरैजसो आर्थिक स्रोत बाहिरबाटै प्राप्त हुन्छ।

बाहिरको सहयोग लिएर काम गर्न सके बाँच्न सकिन्छ। त्यसका लागि आज मैले काम गरें भोलि बाँच्छु भन्ने हुँदैन। लामो समयसम्म आफूले आफूलाई स्थापित गर्नुपर्छ। समय दिनुपर्छ। तर अहिले नै डकुमेन्ट्री बनाएर म जीवन चलाउँछु भन्न गाह्रो छ। डकुमेन्ट्री बनाउन कसले दिने पैसा ? अब आफ्नै पैसा खर्च गरेर बनाइयो भने त्यसलाई बिक्री गर्न कहाँ लाने ? बजार नै छैन। बनायो, आफूले हेर्‍यो, २/४ वटा फेस्टिभलमा लग्यो, त्यतिमै सीमित हुन्छ। आम्दानी नै छैन। यसरी काम गरेर सकिँदैन।

अब क्रु भएर मात्रै काम गर्ने हो भने थुप्रै फिल्महरू बनिरहेका छन्। यसरी काम गर्दा पनि हुन्छ। तर कति फिल्ममा काम गर्नेले पैसा नै पाउँदैनन्। पाउनेले पनि समयमा पारिश्रमिक पाउँदैनन्। त्यसले कामको वातावरण विकास गर्दैन। सिर्जनालाई पनि मार्छ।

निराशाका बीच पनि आशा गर्न सक्ने स्थान छन्। राम्रो पाटो हेरेर निरन्तर लागियो भने स्थापित हुन सकिने धेरै अवसरहरू प्राप्त हुन सक्छन्। अहिले धेरै प्राविधिक काम हुन्छ। यसमा काम गर्ने मान्छे कम छन्। सीमित मान्छे भएकाले एकै मान्छे धेरै ठाउँमा व्यस्त हुन्छ। त्यसले गर्दा फिल्म बनाउनेले कुर्नुपर्ने अवस्था पनि छ।

लाइट, साउन्ड टेक्निसियन, प्रोडक्सन डिजाइनलगायत धेरै प्राविधिक कुरा आउँछ। यी सबैमा काम गर्ने र ज्ञान भएको मान्छे कम छन्। प्राविधिक रूपमा आफूलाई योग्य बनाउने र अनुभव बटुल्ने हो भने कामको कमी हुँदैन। अहिले फिल्म धेरै बनिरहेका छन्। हप्ताको दुई वटा जस्तो प्रोडक्सनमा गइरहेका छन्।

हेड अफ द डिपार्टमेन्ट र डिजिटल मेकिङ गर्न सक्ने क्षमता भएको मान्छे बाहिरबाटै ल्याउनुपर्ने अवस्था छ। सामान्य रूपमा ग्राउन्डमा काम गर्ने मान्छे मात्र यहाँबाट लिइन्छ। काम गरिरहेको भए पनि राम्रोसँग बजेटिङ गर्ने, कम्प्युटरका काम गर्ने, अन्तर्राष्ट्रियस्तरको काम गर्नलाई र सिक्नलाई पर्याप्त अवसर छैनन्। यसमा सुरुमा आफ्ना लागि आफैं पैसा खर्च गर्नुपर्छ। चलचित्र विकास बोर्डले क्षमता र सीप विकासका लागि वर्कसपहरू दिन सुरु गरे अझ सहज हुन्छ।

संसारमा हरेक दिन प्रविधिको विकास भइरहेको छ। हामीलाई त्यही भएर पनि अन्तर्राष्ट्रियस्तरमा प्रतिस्पर्धा गर्न गाह्रो छ। कम्तीमा सिकेर आफूलाई क्षमतावान बनाएर राखियो भने अवसर पाउन सकिन्छ।

मेरो घर धरान हो। पढाइसकेपछि के गर्ने भन्ने चिन्ता थियो। धरानकै पत्रिका 'ब्लास्ट खबर' मा काम गरें। मैले एसएलसी सकेपछि ११ मा पढ्दापढ्दै सिक्दै काम गरेकी हुँ। त्यहाँबाट मैले पत्रकारिता सुरु गरें। म सामान्य परिवारबाट थिएँ। परिवारमा पढेर काम गर्नुपर्छ भन्ने कुरा पहिल्यैदेखि सिकाइएको थियो। त्यही विचारलाई आत्मसात् गरेर हिँड्दै गर्दा आफूले भोगेको अनुभव, हाम्रो समाजको कुरा, त्यो विरुद्धमा कसरी लड्ने, कसरी बोल्ने भन्ने थियो। जब समाचारमा नाम आउन थाल्यो, मान्छेले चिन्न थाले। त्यसपछि मलाई आफ्ना कथाहरू यताबाट भन्न सक्छु भन्ने महसुस हुन थाल्यो।

धरानबाट काठमाडौं आएर एउटा रेडियोमा प्रशिक्षार्थीका रूपमा काम गरें। त्यहाँ दुई वर्ष काम गरें। त्यसपछि मलाई आफूले सोचेको क्षेत्र यो होइन रहेछ भन्ने भान भयो। मैले गरेको कामले प्रभाव देखिएन। त्यसपछि के गर्ने भन्ने अन्योल थियो। त्यसपछि टेलिभिजनमा काम सुरु गरें। फिल्म प्रोडक्सनको काम सिकें। त्यहाँबाट मैले बिस्तारै ट्राभल सो बनाउने, आफैं जाने, हरेक ठाउँमा पुग्ने गरें। त्यतिखेर कसरी कार्यक्रम बनाइन्छ, योजना बन्छ, स्क्रिप्ट लेखिन्छ, खिचेर आइसकेपछि पोस्ट प्रोडक्सनमा कसरी काम हुन्छ भन्ने शून्यबाट सिक्न सुरु गरें।

मैले 'लर्निङ बाई डुइङ' बाट काम सिकेको हो। पोस्ट प्रोडक्सनमा काम गर्न थालेपछि बिस्तारै टेलिभिजन कार्यक्रम, रियालिटी शो प्रोडक्सन र निर्देशनमा काम गर्न थालें। धेरै समय फ्रिलान्सिङ काम गर्न थालिसकेपछि इन्टरनेसनल प्रोडक्सन हाउसमा काम गर्न थालें। त्यसपछि स्वदेशमा मात्रै नभएर विदेशमा पनि कसरी काम हुँदो रहेछ भनेर अनुभव भयो। यसरी १० वर्ष बिताइसकेपछि बल्ल मैले आफ्नो शान्ता नेपाली प्रोडक्सन हाउस सुरु गरेको हो। जहाँ म मात्र होइन, अरू मान्छे पनि छन्। अहिले ४ जना कर्मचारी छन्। मैले जहिले पनि महिलालाई प्राथमिकतामा राखेर काम दिने गर्छु। मेरो प्रोडक्सन हाउसबाट धेरै काम भएका छन्। तर आफैं निर्देशक भएर सुरुमा काम गरेको 'जातको प्रश्न' हो। यसको पहिलो र दोस्रो सिजन युट्युबमा छ। त्यसपछि हिमालमा जलवायु परिवर्तनले कसरी परिवर्तन ल्याइरहेको छ भनेर डकुमेन्ट्री बनाएको थिएँ। यसबाहेक अरू पनि लाइनअपमा छन्।

यो क्षेत्रमा स्थापित हुन र टिक्न केटाहरूका लागि पनि गाह्रो छ। केटीलाई त्यसको २/३ गुणा गाह्रो छ। काम गर्दा धेरै क्रु मेम्बर केटा नै हुन्छन्। त्यही भएर महिला त्यसै पनि हेपाइ (डोमिनेसन) मा पर्छन्। अझ सिर्जनशील कुरा राख्नुपर्‍यो भने केटीहरूलाई कम प्राथमिकतामा राख्छन्। तर त्यसलाई ब्रेक गर्न केही निर्देशकहरू पनि आउनुभएको छ। तर केटीहरूलाई काम गर्न वातावरण सहज छैन।

बोल्दाखेरि कतिपय अवस्थामा होच्याएर बोल्ने र भाषाहरू त्यही किसिमको प्रयोग गर्ने गर्छन्। कोही एक जनासँग राम्रो बोल्यो भने सेटभरि हल्ला फैलाउने हुन्छ। सेटमा चरित्रलाई लिएर कुरा गर्नेसम्म हुन्छन्। धेरै कम हुन्छन् त्यस्तो प्रवृत्तिविरुद्धमा लडेर काम गर्ने। सबैमा यो क्षमता हुँदैन। आफ्नो काम गर्ने, धेरैसँग कुरा नगर्ने, घुलमिल नहुने गर्दा पनि समस्या आउँछ। केटीहरूको सिर्जनशील पक्षमा कुरा गर्नेभन्दा चरित्रमा टिप्पणी गर्न सजिलो छ।

अहिले युवा भाइबहिनीहरूले प्रयास गरिरहेका छन्। तर, कहिलेकाहीँ यस्तो वातावरण हुन्छ कि छोड्नु नै उत्तम हो जस्तो पनि लाग्न सक्छ। नयाँ पुस्ता आए पनि विचार परिवर्तन भएको छैन। केटी मान्छेले फिल्म बनाउन आइडिया पिच गर्दा 'यो फिल्म चल्दैन' भनिदिन्छन्। यसमा केटाहरूको ग्रुपिज्म हुन्छ। उनीहरूको ग्रुपिज्ममा छिर्न गाह्रो छ।

यो सबै समस्यालाई किनारामा राखेर हामीले निरन्तर काम गरिरहेका छौं। आफू मात्र अघि बढेर केही हुँदैन। म जस्तै अरू पनि आउनुपर्छ, जसले भिन्न कथा भन्न र देखाउन सक्छन्।

# सांगीतिक क्षेत्रको 'गोल्डेन टाइम'

**बुबाको पुस्तादेखि मेरो पुस्तासम्म आइपुग्दा सांगीतिक क्षेत्रमा धेरै अवसर आएका छन्, समयसँगै यो क्षेत्र परिवर्तन पनि भएको छ, इन्टरनेटले नेपाली सांगीतिक सिर्जनाहरूलाई अन्तर्राष्ट्रियस्तरमा पुर्‍याएको छ**

**महेश काफ्ले**
गायक

मेरो जन्म सिन्धुलीमा भएको हो। घरमा रेडियो सुन्ने संस्कृति नै थियो। बुबा लोकगायक भएकाले म सानैदेखि सांगीतिक माहोलमा हुर्किएँ। म जन्मनुअघि देखि नै बुबा भोजराज काफ्ले संगीतमा लाग्नुभएको थियो। बुबाको गीत रेडियो नेपालमा बज्ने भएकाले हाम्रो ध्यान सधैं त्यतै हुन्थ्यो। बाल्यकालमा बुबाको गीत रेडियोमा सुन्न पाउँदा अचम्म लाग्थ्यो। गीत-संगीतहरू सुन्दै जाँदा मेरो रुचि सानैदेखि यही क्षेत्रमा विकसित भयो। बुबाले लेखेको 'सानिमा मार्देऊ बरु बगाइदेऊ पानीमा' बोलको गीत मेरा लागि पहिलो अनुभव थियो। जुन मैले बाल्यकालमा नै रेकर्ड गराएँ। पारिवारिक पृष्ठभूमिकै कारण म संगीतमा व्यावसायिक रूपमा अगाडि बढेको हुँ।

बुबाको पुस्तादेखि मेरो पुस्तासम्म आइपुग्दा सांगीतिक क्षेत्रमा धेरै अवसरहरू आएका छन्। समयसँगै यो क्षेत्र परिवर्तन पनि भएको छ। इन्टरनेटले नेपाली सांगीतिक सिर्जनाहरूलाई अन्तर्राष्ट्रियस्तरमा पुर्‍याएको छ। विभिन्न डिजिटल प्लेटफर्महरू आएका छन्। इन्टरनेटका कारण कलाकारहरूलाई धेरै राम्रा अवसरहरू प्राप्त भएका छन्। हाम्रा गीतहरू अस्ट्रेलिया, यूएई, अमेरिका जस्ता देशहरूको युट्युबको ट्रेन्डिङमा समेत आउने गर्छन्। बजार फराकिलो हुँदै गएको छ। स्टेज कार्यक्रमहरू स्वदेशबाट विदेशसम्म विस्तार भएका छन्।

मैले सानैदेखि गीत-संगीतलाई नजिकबाट हेर्ने मौका पाएँ। यो क्षेत्रलाई अझ राम्ररी बुझ्न मद्दत भयो। पहिला अवसरको माध्यम एउटा रेडियो नेपालमात्रै थियो। त्यहाँसम्म जो पुगेर गाउन सक्यो उसका लागि मात्रै अवसर सिर्जना हुन्थ्यो। पछि बिस्तारै एफएम रेडियो, टेलिभिजनहरू खुल्न थाले। त्यहाँबाट नयाँ अवसरहरू सिर्जना भए। तर सामान्य मान्छेले यहाँ सहजै पहुँच पुर्‍याउन सक्थेन। अहिले इन्टरनेटले सांगीतिक उद्योगलाई नयाँ आयाम दिएको छ। कोही राम्रो गाउन सक्छ भने कुनै एउटा कुनामा बसेर गाएको भिडियोले सामाजिक सञ्जाललाई तरंगित बनाउन सक्छ। उक्त व्यक्ति रातारात स्टर हुन सक्छ। यसरी हेर्दा, अहिले सांगीतिक क्षेत्रको गोल्डेन टाइम चलेको छ।

अहिलेको समयमा कसैले पनि नयाँ पहिचान बनाउनका लागि धेरै संघर्ष गर्नु पर्दैन। अहिले आफूलाई चिनाउनका लागि उत्कृष्ट समय हो। पहिले र अहिलेका संघर्षको प्रारूप बदलिएको छ। पहिलेको संघर्ष आर्थिक कठिनाइसँग जोडिएको थियो। गाउँबाट राजधानी आएर टिक्नु नै चुनौती थियो। अहिले पनि त्यो संघर्ष छ। तर अहिले कलाकारका रूपमा मुख्य संघर्ष सामाजिक सञ्जालमा छ जस्तो लाग्छ। सामाजिक सञ्जालमा फलोअर्स बढाउनु, गीतलाई भाइरल बनाउनु र ट्रेन्डिङमा पुर्‍याउने संघर्ष। कलाकारका लागि यो स्वाभाविक पनि हो। यसले कलाकारको सिर्जना दर्शकमाझ पुर्‍याउन सहयोग गर्छ। आम्दानीसँग जोड्छ। त्योभन्दा ठूलो कुरा भविष्यको बाटो पनि सामाजिक सञ्जाल भएको छ।

कतिपयले सस्तो लोकप्रियताको पछाडि दौडिएको महसुस गर्छन्। भाइरल हुने प्रवृत्ति आयो भन्छन्। तर अन्ततः गुणस्तरीय सांगीतिक सिर्जनाले नै जित्छ। पहिले म्युजिक कम्पनीमा भर पर्नुपर्थ्यो, अहिले कलाकार आफैं मिहिनेत गरेर सफल हुन सक्छ। आम्दानीका माध्यम पनि फरक भएका छन्। पहिले क्यासेट बिक्री हुन्थ्यो, अहिले युट्युब भ्युज, डाउनलोड्स र स्टेज कार्यक्रमहरू। डिजिटल प्लेटफर्म र स्टेजबाट कलाकारहरू सोझै आम्दानीसँग जोडिन्छन्। सिर्जनशील प्रतिभालाई कसैले रोक्न सक्दैन। पहिला रेडियो नेपाल र म्युजिक कम्पनीको भर पर्नुपर्ने हुन्थ्यो। अहिले एउटा कलाकार उसको एकल मिहिनेतले पनि चिनिने क्षमता राख्दछ। त्यो अहिले आएको सबैभन्दा ठूलो परिवर्तन हो। क्षमता भएको मानिस आफ्नै मिहिनेत र स्रोतले पनि दर्शक र श्रोतासँग छिटो नजिक हुन सक्छ। अहिले रेकर्डिङ स्टुडियोको कन्सेप्ट पनि परिवर्तन भएको छ। होम स्टुडियोहरू पनि सुरु भएका छन्।

अहिले म पूर्णकालीन रूपमा सांगीतिक क्षेत्रमा छु। संगीतबाहेक मेरो अन्य कुनै पेसा व्यवसाय छैन। पत्रकारिता पेसा त्यागेर म सांगीतिक यात्रामा आएको हुँ। कुनै समय अस्ट्रेलिया जाने सोच बनाएको थिएँ। लोक सेवाको फाराम पनि भरें। सिनेमा खेल्ने रहर पनि थियो। तर, प्रविधिको विकाससँगै सांगीतिक क्षेत्रमा अथाह सम्भावना देखें र यही क्षेत्रमा समर्पित भएर लागेको छु। मैले संगीतबाट जे पाएको छु। सायद अर्को कुनै पेसा व्यवसायबाट प्राप्त गर्न गाह्रो हुन्थ्यो होला।

जुनसुकै काममा समर्पित भएर लाग्यो भने सफलता प्राप्त हुने रहेछ भन्ने अनुभूति नै गर्न पाएँ। सबै क्षेत्रमा मिहिनेत र निरन्तरता चाहिन्छ। गीत-संगीतमा मिहिनेत र राम्रो उत्पादन गर्न सक्यो भने गीत गाएर बाँच्न सकिन्छ। जो आफ्नो सिर्जनालाई उन्नत बनाउन मिहिनेत गर्छ, उसले सांगीतिक क्षेत्रबाट राम्रो नाम र आर्थिक उन्नति पाएका छन्। गाउँबाट काठमाडौं आएर घरजग्गा जोड्ने कलाकारहरू धेरै छन्। एकदमै निम्न वर्गीय परिवारबाट आएकाहरूले गरेको प्रगति अनुसरणीय छ। सामान्य गाउँबाट आएर काठमाडौंमा घरघडेरी, गाडी जोड्नु ठूलो उपलब्धि हो। संघर्ष नगरी यो सम्भव हुँदैन। जसलाई दर्शकले मञ्चमा देख्छन्, सम्झिन्छन्, उनीहरूका लागि यो क्षेत्र निकै फलदायी छ।

एउटा तप्का छ, जो सांगीतिक कार्यक्रमका लागि कलाकार ल्याउनेको सूची बनाउँछन्। त्यो लिस्टमा पर्ने कलाकारलाई धेरै नै राम्रो हुन्छ। उनीहरूको आर्थिक पक्ष सबल भइरहेको हुन्छ। तर, जो त्यो लिस्टमा पर्न संघर्ष गरिरहनुभएको छ, उनीहरूका लागि भने कठिन छ। जुनसुकै क्षेत्रमा एउटा पल संघर्ष गर्नैपर्छ। व्यवसायीका लागि पनि सुरुवाती दिनहरू गाह्रो हुन्छन्, तर सफल भएपछि राम्रो हुन्छ।

यति भन्दै गर्दा केही सर्जकहरू गीत-संगीत क्षेत्रबाट पलायन पनि भएका छन्। यो क्षेत्रमा स्थापित हुन सजिलो भने छैन। तर, आफू समर्पित भएर लाग्यो भने जुनसुकै पेसाबाट पनि पलायन हुनु पर्दैन। कुनै पनि क्षेत्रमा टिक्न मिहिनेतसँगै भाग्यले पनि साथ दिनुपर्ने रहेछ। जसले आफ्नो स्थान बनाएका छन्, उनीहरूको अवस्था निकै राम्रो छ।

हाम्रो देशको राजनीति स्थिर छैन, त्यसका कारण अन्य क्षेत्रजस्तै सांगीतिक क्षेत्र पनि प्रभावित भएको छ। हामीले यो अवस्थालाई आत्मसात् गर्दै अगाडि बढ्नुको विकल्प छैन। हाम्रो मिहिनेतलाई राज्यले असर त गर्न सक्दैन। तर, हाम्रो रोयल्टीलगायत आर्थिक उपार्जनमा भने राज्यको नीतिले धेरै फरक पार्न सक्छ।

हामीलाई सम्पूर्ण चिज दिएको यो समाजले हो। हामी कलाकार भएका कारण नै दर्शक श्रोताले हाम्रो जीवन सहज बनाइदिएका छन्। समाजको सद्भाव र माया हामीसँग सधैं छ। अहिले पनि रोयल्टीको उचित व्यवस्थापन छैन। कलाकारहरूका लागि बिमा, सामाजिक सुरक्षाजस्ता विषयमा कुनै ठोस प्रणाली छैन। सरकारले सांगीतिक क्षेत्रलाई व्यवस्थित बनाउन विशेष नीति ल्याउनु आवश्यक छ। यो क्षेत्रमा लागेका अध्ययन गरेका व्यक्तिहरूसँग छलफल गरेर राज्यले बृहत् नीति बनाउन आवश्यक छ।

अबको दिनमा म सामाजिक सन्देश बोकेका गीतहरू ल्याउने तयारीमा छु। सांगीतिक कार्यक्रमका लागि विदेश जाउँला, तर कर्मभूमि नेपाललाई नै बनाउने निश्चित छ। आजको पुस्ताले प्रेम गीतहरू बढी रुचाएको देखिन्छ, तर गीत-संगीतमार्फत विचार र अनुभूति व्यक्त गर्न मन छ। नयाँ पुस्ताका कलाकारहरू नवीन सिर्जनामा निरन्तर लाग्नुपर्छ। सोसल मिडिया मात्र होइन, गुणस्तरीय संगीतलाई प्राथमिकता दिनुपर्छ।

# सरल फिल्म नै महान् फिल्म

**छिमेकको बलिउड हेरेर हुर्केका हामी, अलिकति फाइट, इमोसनल मिक्स, इन्टरटेन्टमेन्टका लागि जे-जे तत्त्व चाहिन्छ, त्यो मिसाएर बनेका फिल्म मात्रै कमर्सियल हो भनेर सोच्छौं, मलाई भने फिल्म सरल भएर सबैले बुझ्ने भइदिए हुन्छ भन्ने लाग्छ**



नाजिर हुसेन
अभिनेता

म नाटकमै रमाइरहेको थिएँ। तर, नाटकमा पैसा थिएन। यो सबैलाई थाहा भएकै कुरा हो। रेडियो नाटक गर्दा अलिअलि पैसा आउँथ्यो। विजय दाइहरूलाई 'कबड्डी' मा देखेपछि नाटक हेर्न आउँदा पनि उहाँहरूलाई हेर्न दर्शकको जमात झुम्मिन्थ्यो। दया दाइ, विजय दाइ र बुद्धि दाइलाई पर्दामा देखिरहँदा र रंगमञ्चमा आउँदा अलिक धेरै मान्छेले चिनेको देखेर फिल्म गर्नुपर्छ भन्ने मनमा भइरहेको थियो।

आफूलाई धेरै मान्छेले चिनोस् भन्ने लालसा सबैमा हुन्छ। त्यो लालसा ममा पनि पलाउँदै गयो। त्यसपछि मलाई पनि पर्दामा देखिन पाए धेरैले चिन्ने थिए भन्ने लाग्न थाल्यो। त्योभन्दा अगाडि म नाटक नै गर्छु, बाहिरबाट थिएटर पढेर आउँछु र थिएटर आटिस्ट हुन्छु भन्ने योजना थियो।

अभावले बाटो देखाउँछ भनेजस्तै सन् २०१४ तिर त्यस्तै भयो। 'पुन्टे परेड' को अफर आयो। दुई हप्ताको सुटिङ। हिरोको साथीको रोल। र, पैसा पनि आउने भयो। त्यो पैसा मेरो जीवनको पहिलो ठूलो कमाइ थियो। दया दाइसँग सल्लाह लिएँ। उहाँले नयाँ अनुभव हुन्छ काम गर भनेर सल्लाह दिनुभयो। त्यसपछि सो फिल्म गरें। त्यही टिमले काम देखेर सुटिङकै क्रममा 'जंगे' भन्ने अर्को फिल्मका लागि पनि सम्झौता गर्नुभयो। त्योभन्दा अगाडि 'होस्टेल रिटर्नस्' पनि गरें। त्यो फिल्म सुटिङ र रिलिजको हिसाबले 'जंगे' भन्दा अगाडि आयो। होस्टेल रिटर्नस्ले फिल्म करियरमा एउटा बाटो बनाइदियो।

फुर्सदको समयमा अन्तर्वार्ता हेर्थें। एक/दुई जना वरिष्ठ हलिउड र बलिउड कलाकारहरूको कुरा सुन्थें। थिएटरबाट आउनु भएका, सैद्धान्तिक आयामबाट कुरा राख्ने कलाकारका कुरा सुन्दा पात्रको छनोट कसरी गर्नुपर्छ भन्ने छनक मिल्यो। पर्दामा सबैले चिने पनि बाटोमा हिँड्दा कसैले नचिन्ने पात्र हुने गरी अभिनय गर्नुपर्छ भन्ने लाग्यो।

मेरो फिल्म यात्रा छुट्टै खाले छ। म तराईको 'डार्क स्किन' भएको केटो हो। त्यसैले कहिलेकाहीं फिल्ममा पाइसकेको रोलबाट हटाइएको छु। त्यस्तो बेला जे भए पनि थिएटर छँदै छ भनेर आत्मविश्वास पलाउँथ्यो। फिल्म भनेको अभियनको अभ्यास हो, ग्ल्यामरभन्दा यो नै ठीक छ भनेर चित्त बुझाउँथे। त्यही भएर थुप्रै फिल्महरू गरिनँ पनि।

त्यसपछि मैले 'गाँठो' गरें। 'वीर विक्रम' मा मनबहादुर विश्वकर्माको भूमिका निभाएँ। त्यसपछि मलाई यसरी पनि प्रस्तुत गर्न मिल्ने रहेछ भन्ने भयो। समयसँगै मेरो सोच र पात्रको छनोट परिस्कृत हुँदै गए। शारीरिक र मानसिक परिवर्तन पनि आयो। अभिनेतामा दरिँदै गर्दा शारीरिक सुगठनलाई पनि ध्यान दिन थालें। ज्यान बनाएँ। त्यसपछि फिल्म निर्माताहरूले व्यावसायिक रूपबाट पनि हेर्न थाल्नुभयो। केही निर्देशकहरूले एकदमै राम्रो प्रतिक्रिया दिनुभयो।

त्यसपछि 'राजारानी' र 'कागज पत्र' गरें। त्यसपछि 'वीर विक्रम २' आयो। हुँदाहुँदा 'अगस्त्य' आयो। अहिले 'केटी हराएको सूचना' आएको छ।

यो क्षेत्रमा आबद्ध भएको १० वर्ष भयो। हामी चियापसलमा बसेर कन्टेन्टलाई बेस मानेर लाग्नुपर्ने र व्यापारमा धेरै सोच्न नहुने कुरा गर्छौं। तर अभ्यास गर्न भने डराउँछौं। अरूले फिल्म हेरिदिँदैन कि भनेर डराउँछौं। पैसा आओस् र कमाओस् भन्ने हामी सबैलाई हुन्छ। जुन हिसाबमा साथीहरूबीच छलफल हुन्छ त्यही रूपमा ठूलो ब्यानरमा, अब्बल कलाकारहरू राखेर उत्कृष्ट निर्देशकले फिल्म बनाउने अभ्यास गर्न भने सकेका छैनौं। त्यो गर्न सके राम्रो हुन्छ। हामी सबै हुर्किँदै छौं। फिल्म पनि एकै प्रकारको नहुने अभ्यासलाई अंगाल्न सके कलाकारको चरित्र निर्माणमा थप सहयोग पुग्छ। हामी अभिनयको आयामबाट अगाडि बढ्न जोखिम मोल्न तयार हुनुपर्छ। अझै व्यावसायिक भएर तोकिएको समयमा काम हुने हो भने राम्रो हुन्थ्यो।



'गुलाबी' अहिले रिलिज भएको छैन। तर अहिले जुन हिसाबमा 'गुन्यो चुलो'मा मैले अभ्यास गरें। त्यस्तै रोल धेरै आइदिए राम्रो गर्न सकिन्छ भन्ने लाग्छ। निर्देशकले एकै खालको पात्रलाई हटाउने र स्क्रिप्ट राइटरले तपाईंलाई सुहाउँदो रोलभन्दा पनि तपाईंलाई चुनौती दिने रोल दिए अझै मजा हुन्थ्यो।

फिल्म क्षेत्रमा राम्रो लेखक र लेखनको ठूलो खडेरी छ। जति धेरै लेखक भए त्यति धेरै सोच हुन्छ। त्यसमा विविधता थपिन्छ। अनि अभिनय गर्ने कलाकारलाई फिल्म छान्न पनि ऊर्जा प्राप्त हुन्छ। फरक समाज र भोगाइबाट आएका लेखकले अवसर पाए 'स्टेरियो टाइप'को समस्या हट्न सक्छ। लेखन जति उत्कृष्ट हुन्छ कलाकारले त्यति नै खुलेर काम गर्न पाउँछ। तर यो परिवर्तनलाई आत्मसात् गर्न जोखिम मोल्न सक्ने क्षमता भने हुनुपर्छ।

फिल्म भनेको कला हो। तपाईं डाँडामा गएर प्रेमकथालाई रंगीन तरिकाले खिच्नुहुन्छ। त्यो रिलमा उतारेर ल्याएर सेतो पर्दामा देखाउँदा अझ सुन्दर देखिन्छ, जुन कमर्सियल पेन्टिङ जस्तै लाग्छ। कहिलेकाहीं गीत र फिल्मकै सिनहरू एकदमै सुन्दर लाग्छ। फिल्ममा सामान्य कुरा भन्नका लागि पनि 'मेटाफोर' प्रयोग गर्दा त्यो कलात्मक देखिन्छ। छिमेकको बलिउड हेरेर हुर्केका हामी, अलिकति फाइट, इमोसनल मिक्स, इन्टरटेन्टमेन्टका लागि जे जे तत्त्व चाहिन्छ त्यो मिसाएर बनेका फिल्म मात्रै कमर्सियल हो भनेर सोच्छौं। मलाई भने फिल्म सरल भएर सबैले बुझ्ने भइदिए हुन्छ भन्ने लाग्छ।

कमर्सियल फिल्म दर्शककै लागि बनाउने हो। त्यसैले त्यो जुनसुकै तप्काका दर्शकले पनि सजिलै बुझ्ने खालको हुनुपर्छ। केही फिल्म निर्देशकहरूले आफ्नो कलात्मक सोचलाई देखाउन बनाएका हुन्छन्। त्यो छुट्टै विषय र विधा हो।

कुन फिल्म कलात्मक हो र कुन व्यावसायिक हो भन्ने लडाइँ नै ठीक होइन। किनभने फिल्म भनेको सबै कला नै हो। बिम्बमा मात्रै खेलेर फिल्म बनाउँदा मात्रै कलात्मक हुने होइन। हाम्रो समाजलाई बुझाउन धेरै सहज छ। त्यो समूहलाई ध्यानमा राखेर फिल्म बनायो भने त्यसै सफल हुन्छ।

नाटकको कुरा गर्दा अहिले त्यता अपनत्व कम हुँदै गएको पाएको छु। म आफैं पनि निकै वर्ष हराएँ। म आफैं पनि रंगमञ्चबाट टाढा भएकाले पनि त्यो महसुस गरेको हुन सक्छु। तर हामी रंगमञ्चमा हुँदा जुन ऊर्जा मिल्थ्यो त्यो हराएको छ।

वरपर भएका नाटक हेर्दा सिनेमेटिक बनिरहेको हो कि जस्तो लाग्छ। नाटक फिल्मभन्दा फरक हुनुपर्छ। किनभने त्यसको अस्तित्व नै बेग्लै हो। नाटकमा एउटा लाइनले जिन्दगी बताउन सक्नुपर्छ। मेरा लागि फिल्म उपन्यास हो भने रंगमञ्च कविता।

नाटकमा सेट नै नहुँदा पनि प्रत्यक्ष अभिनयद्वारा मानिसलाई हो नै जस्तो बनाइदिन सक्नुपर्छ। नाटकमा धेरै प्राविधिक पाटा हुन्छन्। नाटकमा कहिल्यै पनि 'एस्थेटिक भ्यालु' मर्नु हुँदैन। फिल्ममा ठूलो बिल्डिङ देखाउन सकिन्छ। तर नाटकमा बजेट अभाव हुन्छ। त्यो म्याजिकल लाग्छ। त्यही भएर नाटकमा कोरस सुनमा सुगन्ध हो। कोरस कहिले पहाडै बन्न सक्छ, कहिले खोलै बनिदिन सक्छ। फिजिकली जुन डायनामिक ल्याउन सकिन्छ नि नाटकमा त्यो जीवन्त हुनुपर्छ। त्यो अहिले विस्तारै कम हुँदै गएको छ।

मलाई नाटक यथार्थभन्दा अझ बढी काल्पनिक भइदियोस्, हेर्ने दर्शक कल्पनाको सागरमा गोता लगाइरहुन् भन्ने लाग्छ। बोल्दा बोल्दै मान्छे एकैचोटि अर्कै भइदियोस् र त्यो क्षण सबैका लागि 'वाउ मोमेन्ट' होस्। नाटकबाट 'वाउ' फ्याक्टर गुम्नु हुँदैन। अहिले जसरी हामी पर्दामा देखिएका छौं वा सामाजिक सञ्जालमा प्रदर्शित भएका छौं, त्यो देख्दा निकै सरल देखिन्छ। मण्डला गएर तीन महिनाको क्लास लिएर यहाँ पुगिन्छ भन्ने सोच पनि होला। मेरै कुरा गर्दा मैले १७ वर्षको उमेरदेखि संघर्ष गर्न थालेको हुँ। त्यो बिर्सिनु हुन्न। कुनै पनि क्षेत्रमा सफलता प्राप्त गर्न भोक चाहिन्छ। र, त्यो भोकलाई मेट्न चेत चाहिन्छ। रफ्तार र हुटहुटी पनि चाहिन्छ।

जब सपनाको प्राप्ति हुन्छ तब वास्तविक खेल सुरु हुन्छ। जसका लागि धैर्य चाहिन्छ। प्राप्त गरेको अवसरलाई उत्कृष्ट बनाउन लगन चाहिन्छ। त्यो साइकलको पाङ्ग्रा जस्तैको दोहोरिरहन्छ। एउटा मुकाम हासिल गरेपछि रोकियो भने कलाकारले आफ्नो आयाम नै हराउँछ। उत्कृष्ट हुनु निरन्तर लागि रहनुपर्छ। एउटा ठाउँमा पुगिसकेपछि टिकिरहन गाह्रो हुन्छ। न पुग्न सजिलो छ, नपुगेपछि टिक्न नै।

नाटक भनेको सिकाइ हो। विजय दाइ र मैले धेरै समय लिड कोरस भएर वर्षौं काम गर्‍यौं। त्यो समयमा कोरस भएर काम गर्दा त्यो सबै लिड एक्टरको डायलग याद हुन्थ्यो। सबैको टाइमिङ थाहा हुन्थ्यो। हामी कस्ट्युम हेर्थेम्। सेट बनाउन रेडी गर्थ्यौं। काठको काम गरेर सेट तयार पार्थ्यौं। त्यो सिकाइ अहिले गुमेको देख्छु। धैर्य एकदमै कम देख्छु।

म यसरी कलामा लागें कि मेरो भोक पनि यही, भोजन पनि यही भयो। मेरो कर्म र धर्म यही भएको छ। म कलामा बाँचिरहन चाहन्छु। म यसमै निहित छु। यो उद्योग सानो छ तर अभ्यास गर्ने ठाउँ एकदमै धेरै छ। पहिला अवस्था गाह्रो थियो। अहिले सिनेमा र थिएटरमा मन लगाएर चाहेको काम गरिरहन पाइन्छ। त्यो गरिरहँदा मज्जाले घर चल्ने पारिश्रमिक आउँछ। त्यही हिसाबले हाम्रो जीवन चल्नुपर्‍यो। चरित्रलाई चलायमान राख्न आफू बाँच्नुपर्‍यो। त्यो बचाइदिने सम्भावनाले नै लोभाइरहेको हुन्छ।

# भाषा र भाका जगाउँदै देउडा

**हाम्रो गाउँमा दिदीबहिनी, आमा, भाउजूहरू कति राम्रो देउडा, ठाडी भाका गाउनुहुन्छ तर यहाँसम्म आइपुग्न सक्नुभएको छैन, उहाँहरूलाई हाम्रो समाजले गायकगायिका बन्न दिँदैन**

**इब्सल सन्ज्याल**
लोक गायिका

देउडा र दोहोरी हुँदै गीतसंगीतको क्षेत्रमा सक्रिय रहेको छु । चार वर्षदेखि यो क्षेत्रमा सक्रिय छु । म मोडलिङ हुँदै गायनमा लागेको हो । हाम्रोतिर चल्ने देउडा गीतको थुप्रै भिडियोमा अभिनय गरेपछि गायनमा लागें ।

मेरो घर कालीकोट हो तर सांगीतिक क्षेत्रमा मेरो प्रवेश मामाघर बाजुराबाट भएको हो। कानुन व्यवसायीसमेत रहेका संगीतकार हर्क खडायतले मलाई यो क्षेत्रमा अवसर दिनुभएको हो । उहाँले मलाई 'पापी बुढीगंगा'बोलको गीतमा अभिनय गर्ने अवसर दिनुभएको थियो। त्यो समयमा बुढीगंगा बाढीले थुप्रै बस्ती बगाएको थियो। त्यो समय सान्दर्भिक गीत थियो। त्यसमा अभिनय गरेपछि थप दुई/तीन गीतमा अभिनयको अफर आयो । त्यसपछि म प्लस टू अध्ययनका लागि धनगढी आएँ ।

त्यसपछि मलाई कालिकोट बोलाइयो । खगेन्द्रप्रसाद न्यौपाने गुरुले कालिकोट बोलाएपछि त्यहाँ बसेर गीत संगीतसँग जोडिएर थुप्रै काम गरियो। त्यतिबेला धेरै गीतहरूमा अभिनय गरें। कर्णाली र सुदूर कर्णालीमा चर्चित गीतका भिडियोहरूमा अभिनय गर्नका लागि थुप्रै बस्ती पुगें। ती बस्ती हिँडेरै पुगेको थिएँ। कालिकोटमा अझै पनि यातायातको सुविधा छैन। त्यतिबेला मलाई लाग्यो कि संस्कृति जगेर्ना गर्नु सबैभन्दा ठूलो कुरा हो। हामी पूर्वेली गीतहरूमा नाच्छौं। अरू संस्कृतिका गीतहरूमा नाच्छौं। हाम्रो गाउँमा कार्यक्रम भएमा मगर समुदायले लगाउने पहिरन लगाएर नाच्ने गरेका छौं। तर हाम्रोमा मगर बस्ती थिएन।

हाम्रो पहिरन लगाउनुपर्छ र प्रचारप्रसार गर्नुपर्छ भन्ने मलाई लाग्यो। हाम्रो पहिरन, संस्कृतिको संरक्षण हामीले गर्नुपर्छ भन्ने लागेको थियो। मान्छे जन्मिएपछि एउटा समाजमा हुर्किएको हुन्छ। बोटबिरुवा हुर्किनका लागि जरा चाहिएजस्तै हाम्रो सांगीतिक क्षेत्रको जरो भनेको देउडा हो। सिन्जा हो। भाषा त्यतैबाट उत्पत्ति भयो। बस्ती बुझ्दै र देउडाका भिडियोमा अभिनय गर्दैगर्दा मैले कहिले गीत गाए सबैभन्दा पहिला देउडा नै गाउँछु भन्ने प्रण थियो।

मलाई 'झुपडी' भन्ने गीत असाध्यै मन पर्‍यो। त्यो गीत पुरुषको स्वरमा आइसकेको थियो। केशव अधिकारीको स्वर र कुशल न्यौपानेको शब्द रहेको त्यो गीत रेकर्ड गर्न काठमाडौं आएर पहिलो गीत रेकर्ड गरेको थिएँ।

यो क्षेत्रमा प्रवेश गर्दैगर्दा युवाहरूलाई परिवारको समर्थन हुन्न। बाआमाको चिन्ता हुन्छ कि यो पेसा गलत हो कि भन्ने। मेरो परिवारमा सबैजना सरकारी जागिरे छन्। मेरो यात्रा अर्कैतर्फ मोडिँदा मेरो भविष्यलाई लिएर परिवारमा चिन्ता थियो। अहिले पनि म संघर्षमै छु। यत्तिको पनि हुन्छ कि हुन्न भन्ने चिन्ता भने परिवारमा थियो। पहिलो पटक यो क्षेत्रमा लाग्छु भन्दा बुबा रिसाउनुभएको थियो। गीतसंगीतको क्षेत्रको बारेमा बुझ्दै नबुझेको मान्छे एक्कासि यसै क्षेत्रमा लाग्दा चिन्ता हुनु स्वाभाविक थियो।

हाम्रो गाउँमा कुखुरा पाल्ने चलन थिएन। बाहुनको घरमा झन् कुखुरा हुँदै हुन्न। त्यो चलन नभइराख्दा कुनै बाहुनले कुखुरा पाल्यो भने पाप गर्‍यो, अनर्थ गर्‍यो भन्छन्। त्यही कुखुरा पाले बराबर भयो म यो क्षेत्रमा लाग्नु। कालिकोटबाट यो क्षेत्रमा अग्रज गायक हुनुहुन्थ्यो। महिला खासै हुनुहुन्थेन। पेसागत रूपमा खट्नुभएको थोरैमात्र हुनुहुन्थ्यो। डर पनि हो। तर सबैभन्दा ठूलो सपोर्ट र समर्थन परिवारको हुन्छ, चाहिन्छ।

म यो क्षेत्रमा अगाडि बढ्दै गएपछि बुबाआमाले नै सम्झाउन थाल्नुभयो, समर्थन गर्न लाग्नुभयो। अहिले त बुबाआमा म यो क्षेत्रमा लागेको देखेर खुसी हुनुहुन्छ। मार्गदर्शन गरिरहनुभएको छ।

परिवारले कर गरेपछि म काठमाडौंको इन्द्रेणीमा गीत गाउन आएको हो। 'बाटो खुल्यो मोटर चल्यो जुम्ला कालिकोटको' बोलको दोहोरी गीत गाएँ। त्यसले चर्चा दियो। त्यसपछि परिवारले नै काठमाडौं पठायो। त्यसबीचमा थुप्रै लाइभ दोहोरी गाउने अवसर मिल्यो।

पहिला क्यासेटमार्फत गीत श्रोता कहाँ पुग्यो। अहिले सामाजिक सञ्जालका कारण गीतलाई श्रोतासम्म पुर्‍याउन धेरै सजिलो भएको छ। व्यक्तिमा भएको कला दर्शकश्रोतामाझ लैजानका लागि सामाजिक सञ्जालहरू साह्रै उपयोगी भएका छन्।

जुम्ला कालीकोटमा यातायात चल्दैन, तर हातहातमा मोबाइल पुगेको छ र टिकटक पुगेको छ। त्यहाँका मान्छेले पनि गीतसंगीत हेर्छन्। त्यसमा पहुँच पुर्‍याएका छन्। सामाजिक सञ्जालमार्फत गीतसंगीत हेर्छन्। टिकटकलगायतका सामाजिक सञ्जालले सांगीतिक क्षेत्रलाई धेरै राम्रो गरेको छ। टिकटक बन्द हुँदा कति धेरै गीत व्यावसायिक रूपमा डुबेका छन्। टिकटकमा गीतले राम्रो चर्चा पायो भने व्यावसायिक रूपमा पनि चल्छन्।

कुनै पनि कुराको राम्रो र नराम्रो दुवै पाटो हुन्छ। ५० प्रतिशत राम्रो हुँदा अर्को ५० प्रतिशत नराम्रो हुन्छ। कुनलाई हेर्ने भन्ने व्यक्तिमा भर पर्छ।

गीतसंगीतमा सम्भावनाका कुरा गर्दा, एउटा जागिरमा लाग्ने हो भने त्यसमै जिन्दगी जान्छ। कलाकारको जिन्दगी फरक छ। उसले हजारौं दर्शक र श्रोता कमाएको हुन्छ। त्यसले सुरुमा आर्थिक रूपमा सक्षम नबनाए पनि, आफ्ना दर्शक र श्रोताको मायाले खान नपुगे पनि पहिचान बन्छ। हाम्रै क्षेत्रको कुरा गर्दा हाम्रो पुस्ता गीतसंगीतमा लागेपछि कालीकोट, हुम्ला, जुम्ला, मुगुका प्रतिभाहरू देउडा र दोहोरी लिएर आएका छन्। त्यहाँको स्थानीय भाषा, भाका र संस्कृतिलाई गीतसंगीतमार्फत अगाडि बढाइरहेका छन्।

हाम्रो ठाउँको ठेट भाका र भेषभूषासहित देउडा र दोहरी सार्वजनिक भइरहेका छन्। हाम्रोतिरको वास्तविक देउडा, ठाडी भाका अहिले सार्वजनिक भइरहेका हुन्। एउटाले अगाडि बढ्दा अरूका लागि पनि बाटो खुलेको छ। अब त्यस क्षेत्र सम्हाल्ने जिम्मा नयाँ पुस्ताको हो।

देशको राजधानीले हाम्रो क्षेत्रलाई हेर्ने दृष्टिकोण धेरै फरक छ त्यसले मलाई देउडा र दोहोरीमा लाग्न प्रेरित गरेको हो। पहिलेको कर्णाली भनेको हुम्ला, जुम्ला, कालिकोट, मुगु र डोल्पा हो। प्रदेश बन्दा १० जिल्ला भएको छ। अहिले कर्णालीमा जोडिएका पाँच जिल्लाले हाम्रो क्षेत्रलाई हेर्ने दृष्टिकोण फरक छ। यस्तो अवस्थामा मैले मेरो तर्फबाट आफ्नो गाउँठाउँ, भाषा संस्कृतिका लागि के गर्न सकिन्छ भन्ने लागेर यो क्षेत्रमा छु। भाषा संस्कृतिको जगेर्ना हाम्रै ठाउँका मान्छेले गर्ने हो। विदेशीले त केही टिपेर राख्ने हो, जगेर्ना गर्ने होइन।

गीतसंगीतमा स्थानीय प्रतिनिधित्व हुनुपर्छ भन्ने लाग्छ। गायकले देउडा र दोहोरी मात्रै गाउनुपर्छ भन्ने होइन, जस्तो गीत पनि गाउन सक्नुपर्छ। भर्सटाइल हुनुपर्छ तर आफ्नो क्षेत्रको भाका, भाषा र संस्कृतिलाई छोड्नुहुन्न।

गीतसंगीतमा संस्कार र संस्कृति सँगसँगै नलगे समस्या उत्पन्न हुन्छ। हाम्रो फुली, बुँलाकी कसले लगाउने ? कपालमा टालो कसले लगाउने र धोतीचोली कसले लगाउने ? अरूले हाम्रो संस्कृतिलाई त बढावा दिँदैन। संस्कृति आदानप्रदान हुन जरुरी छ, त्यसका लागि आफ्नो संस्कृतिलाई अगाडि बढाउनुपर्छ। मैले आफ्ना कार्यक्रममा सकेसम्म हाम्रै कर्णालीको भाषा, भेषभूषा र पहिरन लगाउने गरेको छु। दोहोरी र देउडा गाउँदा फुली, बुलाकी, टालो बाँधेर चोली र धोती लगाउने गर्छु। साडीमा पनि त्यो काम गर्न सकिन्छ तर मेरो प्राथमिकतामा कर्णालीको संस्कृतिलाई पहिचान दिनुपर्छ भन्ने छ। गीतसंगीतमार्फत संस्कृतिले पनि चर्चा पाउँछ। हामी यस्तो लुगा लगाउँछौं भन्नका लागि पनि त्यस्तो गर्छौं।

देउडा र दोहोरीमा 'बाज, सुवा' लगायतका भाका विरलै सुनिन्थे। अहिले व्यापक बनेको छ। पहिले देउडाका साथै कर्णाली र सुदूरपश्चिमलाई हेर्ने नजर राम्रो थिएन। हाम्रो भाषा, भाका र लय सुन्दैमा नकारात्मक भाव देखाउनेहरूले अहिले हाम्रो देउडा र भाकालाई मन पराउन थालेका छन्।

देउडामा छोटो लुगा लगाएर गीत गाउनु र धोतीचोलोमा गीत गाउनुमा फरक हुन्छ। दर्शकको दृष्टिकोणमा नै फरक पर्छ। त्यसैका आधारमा ट्यागसमेत लगाइन्छ। फलानो संस्कारी, फलानो उट्पट्याङ छ भन्ने गर्छन्। कुनै आयोजकले मलाई 'नानी आइदिनुपर्‍यो' भन्छन् भने अर्को कसैलाई त्यो भाषामा बोलाइन्न। त्यसमा हामीले बोकेको भाषा भेषभूषा र संस्कृतिले गर्दा नै हो। त्यसले फरक पार्छ। समाजले हामीलाई हेर्ने दृष्टिकोणमा नै बदलाव ल्याउँछ। यो क्षेत्र आज काम गर्‍यो सकियो भन्ने हैन। यो क्षेत्रमा गरेको काम पुस्तौंसम्म रहिरहन्छ। हाम्रो काम सन्ततिले हेर्ने हो। हामीले बोकिरहेको संस्कृतिले भावी पुस्तालाई पनि शिक्षा दिने भन्ने सन्देश बोकेको हुन्छ।

पुस्तान्तरणसँगै देउडाको लय र भाकामा परिवर्तन भइरहेको छ। देउडा तलमाथि होला, उत्ताउलोपन बढ्दै जान्छ। त्यो अहिलेको पुस्ताको माग हो जस्तो लाग्छ। पुस्तान्तरणसँगै देउडामा आएको परिवर्तन हो। पहिले मेलापात र गाउँका चाडपर्वमा गाउने जस्तो ठेट भाका नहुन सक्छ। त्यो अनुभव नहुँदा अहिलेकोलाई त्यो नआउने भएको छ। पहिले गाउँदै गर्दा मादल बजाइन्थ्यो, सारङ्गी बजाइन्थ्यो अहिले कम्प्युटर आयो र परिवर्तन ल्यायो। त्यसरी नै संस्कृतिमा पनि केही परिवर्तन हुने हो तर मर्ने होइन। संस्कृति मार्ने गरी गीतसंगीतलाई अगाडि बढाउनुहुन्न। त्यसरी जानु दीर्घकालीन यात्रा भने हुन्न।

देउडा र दोहोरीका क्षेत्रसँगै आउने समस्या छन्। अछाम र डोटी गएर झ्याउरे गीत गाउनुले धेरै अर्थ हुन्न, त्यता देउडा सुन्छन्। बागलुङ गएर देउडा गाउनुको अर्थ खासै रहन्न। हाम्रो देशले जिल्लैपिच्छे फरक संस्कृति बोकेको छ। तैपनि अछाममा झ्याउरे बजाइदिए दर्शक नाच्छन् भने बागलुङमा देउडा सुन्छन्।

गीतसंगीतमार्फत फरक भाषा र संस्कृतिलाई समाजमा अन्तरघुलन गर्नुपर्छ भन्ने हो। नेपालका जुनसुकै स्टेज चढे पनि म देउडा नगाई आफ्नो प्रस्तुति दिन सक्दिन। देउडा सुन्न आग्रह गर्छु। यसरी संस्कृतिको आदानप्रदान जरुरी छ। हामी लाज मान्ने पनि छौं कि म देउडा गायक हो भन्न। छाती फुलाएर म देउडा गायक हो भन्न सक्नुपर्छ। देउडा गाउन सक्नु सानो कुरा होइन। अझ देउडाको ठाडी भाका हामी गाउन सक्दैनौं। गाउँतिर गाइने ठाडी भाका हामी यो पेसामा लागेकाले पनि सक्दैनौं, कठिन हुन्छ। धक नमानेर हाम्रो पुस्ताले आफ्नो गीतसंगीत र संस्कृतिलाई अगाडि बढाउनुपर्छ।

हामीले देउडा र दोहोरीलाई सँगसँगै लगिरहेका छौं। अब यसलाई थप अगाडि बढाउन र संरक्षण गर्नका लागि बिरुवा हुर्काउन मलजल चाहिएजस्तै सबैको साथ र सहयोग आवश्यक हुन्छ। पुस्तान्तरण यो क्षेत्रको सबैभन्दा ठूलो आवश्यकता हो। अग्रजहरूले के गर्नुभयो भन्ने हेर्नुपर्‍यो। उहाँहरूसँग संवाद हुनुपर्‍यो। एक/दुई गीत चल्दैमा खुट्टले भुइँ छोड्न हुँदैन। फलेको हाँगो जहिले पनि झुक्छ भनेझैं झुक्न सिक्नुपर्छ।

सुदूरपश्चिमबाट पहिले नन्दकृष्ण जोशी, राजाराम भाट, भुवन दाहालले देउडालाई अगाडि ल्याउनुभयो। अहिले चक्र बम, टंक तिमिल्सिना हुनुहुन्छ। अर्को पुस्ता पनि आउँछ। किनभने यो पुस्तान्तरण भइरहेको छ। त्यसैलाई जोगाएर जानुपर्छ। यसरी नै दीर्घकालीन हुनुपर्छ। नयाँ पुस्ताले पनि संस्कृतिका कुरा भाका र भाषाको तत्त्व संरक्षण गरेर अगाडि लैजानुपर्छ। मैले देउडा र दोहोरी बाराको सिमरामा आयोजित कार्यक्रममा पनि गाएको छु। भोजपुरी गीतको प्रभाव रहेको क्षेत्रमा पनि दोहोरी सुने दर्शकले। त्यसरी संस्कृतिको आदानप्रदान गरिरहनुपर्छ।

हाम्रो क्षेत्रका गीतसंगीतमा लाग्ने युवा पुस्ताले आफ्नो भोकल पनि पहिचान गर्नुपर्छ। कसैको स्वर नै देउडा गीत गाउन नसक्ने वा नमिल्ने हुन्छ। कसैले देउडासँगै आधुनिक गीत पनि गाइरहनुभएको छ। ऱ्यापमा समेत देउडा आइसकेको छ। तर, जतासुकै जोडे पनि देउडाको आफ्नोपन मार्न भएन।

पछिल्लो समय डोटेली भाषा नजान्नेहरूले फिल्ममा पनि हाम्रो भाषा र गीतहरू प्रयोग गर्न लागेको देखिन्छ। दीपाश्री निरौला र दीपकराज गिरीले आफ्ना फिल्ममा हाम्रो भाषा प्रयोग गरिरहनुभएको छ। यसको अर्थ कमर्सियल फिल्ममा पनि हाम्रो भाषा पुगेको छ, यो सकारात्मक पाटो हो। यसरी नै हाम्रो भाषा र गीतसंगीतलाई अझै फिल्ममा पनि निरन्तरता हुनुपर्छ भन्ने लाग्छ। त्यसमा स्थानीयपन राख्नसके झनै राम्रो हुन्छ। यो भनेको म्युजिक इन्डस्ट्रीबाट फिल्म इन्डस्ट्रीमा पनि देउडा गीतसंगीत प्रयोग भएको र त्यो तहसम्म ठाउँ पाएको रूपमा लिनुपर्छ। फिल्ममा हाम्रो भाषा, भेषभूषा र गीतसंगीत उनीहरूले जति सक्नुभयो त्यति प्रयोग गरिरहनुभएको छ, हाम्रा लागि त्यो पनि ठूलो कुरा भएको छ।

नयाँ पुस्ताले देउडा गाउनका लागि आफ्नोपन र आफ्नो भोकल थाहा पाउनुपर्छ। सबै जनाले देउडा नै गाउनुपर्छ र गाएर मात्रै संरक्षण हुन्छ भन्ने त छैन जताबाट सकिन्छ आफ्नो क्षमताले भ्याएको दिनुपर्छ। निरन्तरता दिनुपर्छ।

हाम्रो गाउँमा दिदीबहिनी, आमा भाउजूहरू कति राम्रो देउडा, ठाडी भाका गाउनुहुन्छ तर यहाँसम्म आउन पुग्न सक्नुभएको छैन। उहाँहरूलाई हाम्रो समाजले त गायकगायिका बन्न फिटिक्कै दिँदैन। किनभने म पनि त्यो भोगेर आएको छु। विवाह गरेको महिलाले त झनै सक्दैन। बुहारी भइसकेपछि घरबार सबै सम्हाल्नुपर्ने हुन्छ। त्यसो हुँदा कैयौं प्रतिभाहरू, मभन्दा धेरै राम्रो गाउनेहरू बन्धनमा बाँधिनुभएको छ। त्यो लाज, धक र समाजको करले हो। जाउ छोरी, बुहारी तिमीले यो क्षेत्रमा राम्रो ख्याति कमाउन सक्छौ भने त पक्कै पनि धेरै प्रतिभा बाहिर आउँथे होला। अशिक्षा, सम्भावना र प्लाटफर्मको अभावले विगतमा धेरै प्रतिभावनले ठाउँ पाउनुभएन। तर, अहिले त टिकटकमा भिडियो खिचेर पोस्ट गरे पनि चल्छ। सम्भावनाको ढोका खुल्छ। एक पटक चल्यो भने दर्शकले खोज्दै हिँड्छ। अहिलेको पुस्ताले शिक्षा पाएको छ, देश र विदेशका कुरा थाहा पाउँछ, कहाँ के सम्भावना छ भनेर प्रविधिले सिकाएको र सहयोग पुर्‍याएको छ।



# नेपाली गीतमा सुगन्धको खोजी

**संगीत त सबैलाई बाँध्ने कुरा हो, आत्मालाई जोड्ने कुरा हो, यसमा जति लगानी गर्न सक्यो, उति गुणस्तरीय सिर्जना बनेर आउँछ**


सुजन चापागाईं
गायक तथा संगीतकार

अहिले गीतको बजारीकरण भएको छ । धेरैजसो गीतमा संगीतबाहेक सबैथोक छन् । गम्भीर भएर गरिएका कामहरू निकै कम छन् । सयौं गीत निस्किरहेका छन् तर कलात्मक र गुणात्मक सिर्जना कम छन् । विश्वमा राम्रा गीतहरू हामीजस्तै मान्छेले बनाएका हुन् । स-साना ठाउँको सन्देश नै उठेर ठूलो हुने हो । विभिन्न आयामबाट काम गर्न सकिन्छ ।

देशमा गीतमा लगानी गर्ने वातावरण बनिरहेको देखिन्न । संगीत त सबैलाई बाँध्ने कुरा हो । आत्मालाई जोड्ने कुरा हो । यसमा जति लगानी गर्न सक्यो, उति गुणस्तरीय सिर्जना बनेर आउँछ ।

चलिरहेको ट्रेन्डभन्दा फरक तरिकाले काम गर्नेहरूलाई चुनौती छ र आनन्द पनि । चलिरहेको धारबाट आफू छुट्टिएर फरक हुनुमा ठूलो चुनौती हुन्छ । सबै प्रक्रियामा गहिरो काम गरेर पस्किँदा दर्शकले कुन रूपमा लिन्छन् भन्नेमा चिन्ता हुन्छ । बजारमा चलिरहेको खालको आउँदा श्रोता-दर्शकले छिट्टै निर्णय गर्छन् । तर नयाँ धारमा मौलिक कुरालाई अहिलेका नवआधुनिक जमातका लागि आधुनिक प्रविधिमा फ्युजन गरेर तयार गर्दा श्रोताहरूलाई तान्छ कि तान्दैन भन्ने डर हुन्छ । दर्शकले मन पराइसकेपछिको आनन्द भने छुट्टै हुन्छ । किनकि आफू भीडबाट फरक रहेको अनुभूति हुन्छ । त्यही भीडमा हुनु र मान्छेले फरक र राम्रो भनिदिँदा आफू सही बाटोमा छु भन्ने ऊर्जा मिल्छ ।

संगीतमा पहिला विविधता देखिन्थ्यो । बीचमा ग्याप भयो । देशमा भएको राजनीतिक उतारचढावले पनि संगीत क्षेत्रमा प्रभाव पार्‍यो । द्वन्द्वका बेला पारिवारिक बेमेल भयो । अघिल्लो पुस्ताले पछिल्लो पिँढीलाई आफ्नो कला सिकाउन पाएनन् । त्यसले पछिसम्म असर पारिरह्यो । त्यतिबेलाका पुस्ताले यसमा करिअर देखेनन् ।

कसरी बाँच्ने भन्ने माहोलमा संगीतको विकास हुन सकेन । बरु, निरन्तर ओरालो यात्रामा लाग्यो । अहिले हामीले पुराना पुस्ताबारे खोज्दा पनि हामीलाई निकै समय लाग्छ । हिजोका दिनमा विभिन्न भूगोलका स्वाद आउँथे गीतमा । ज-जसले जति बाँड्नुभयो, हामीले त्यहीबाट खोजिरहेका छौं । म पनि विभिन्न भूगोलमा गएर खोजिरहेको हुन्छु । नयाँ-नयाँ सुगन्ध मैले पनि लिएर आइरहेको हुन्छु । सबै कलाकारले घुमीफिरी विश्व जगत्मा के लैजाने भनेर सोच्दा नेपाली संगीत नै त लैजानुपर्‍यो । नेपाली मौलिकता, भाका, नेपाली माटोको बास्ना लिएर गयो भने विश्व बजारले राम्रोसँग ग्रहण गर्छ । यो हाम्रो पहिचानसँग जोडिएको विषय पनि हो । संगीतमा पनि आ-आफ्नो विधा हुन्छ । हामीले जुनसुकै विधाका संगीतमा फ्युजन गर्न सक्छौं ।

उस्तै अभिप्रायले कम्तीमा १५/२० जना लाग्नुभयो भने अवश्य सम्भव हुन्छ । अबको १० वर्षपछि हेर्दा नेपाली लोकभाका कहाँ छ भनेर हेर्दा निकै सुन्दर देखिन्छ ।

छोटो समयका लागि सोच्नु हुँदैन । गीत चल्दैमा राम्रो हुन्छ भन्ने हैन । तत्काल भाइरल भएका गीतले क्षणिक खुसी देलान् । तर कालान्तरमा त्यो हानिकारक पनि हुन सक्छ । अहिले हामीलाई गाह्रो यहीँनिर छ । जसरी हुन्छ मान्छेले नोटिस गरुन् भन्ने सोच छ । त्यो लहलहैमा आएका गीतहरूले विकृति फैलाइरहेका छन् ।

पहिला-पहिला तीजका गीतमा चेलीबेटीसँग बसेर उत्सव मनाइन्थ्यो । तर अहिले तीजमा आउने गीतहरू विकृतजन्य छन् । संगीत त चलिरहला । रेकर्डिङ स्टुडियो खाली नहोलान् । तर गुणस्तर के हुन्छ ? यसबारे पनि कसैले सोच्नुपर्छ ।

धेरै पहिला सांगीतिक रूपमा हामी भारतभन्दा माथि थियौं भनिन्छ । यदि त्यो हो भने हामीकहाँ निरन्तरता नभएर अहिले भारतसँग तुलना गर्न नसकिने अवस्था छ । क्षेत्र चलिरहेको छ । तर, नेतृत्व गरेर लैजाने सिर्जना नै आएका छैनन् । कलाका लागि समय छैन । कसरी हुन्छ कमर्सियल कुरा मात्र प्रोमोट हुन्छ । एउटा गीत चल्यो भने १०/१५ वटा गीत त्यस्तै आइरहेका हुन्छन् ।

अहिले महिनामै दर्जनौं गीत रेकर्ड गर्नेहरू पनि छन् । हामी जो निकै समय लगाएर तयार पार्नेहरू पनि छौं । बजारको अहिलेको लहरले कलालाई समय दिऊँ भन्नेलाई गाह्रो छ । बजारमा गीत आइरहेका छन् र महोत्सव चलिरहेका छन् । कमर्सियल एक्टिभिटी बढी भइरहेको छ । हामी संख्यात्मक हिसाबमा थोरै गर्नेहरूलाई कठिनाइ छ । पैसाको धेरै स्रोत पनि छैन । आफ्नै साथी सर्कलले पनि भन्छन्, 'दुनियाँले यति गीत निकालिसक्यो । तँ कता हराइस् ?' अरू धेरै सक्रिय हुँदा आफू हराएको अनुभूत पनि हुन्छ । आफूलाई यी कुराले डर पनि हुन्छ । म बाठो भएर पो बिग्रिएँ कि भनेर सोच्न बाध्य पनि बनाउँछ । फ्यानहरूलाई पनि त्यस्तो लाग्न सक्छ । एउटा गायकले लगातार दिइरहेको छ, एउटा गायक आउँदैन । भन्छन् पनि, 'कता हराउनुभयो ? नयाँ गीत ल्याउनुपर्‍यो ।' तर सदैव कलाले तानिरहने भएपछि एक वर्ष लगाएर बनाएको गीतमा ठूलो आनन्द हुन्छ । हामी त्यो प्रोसेसमा रमाइरहेका हुन्छौं ।

हामी सुरुबाट नै 'म्युजिकल फिल्म' को बाटो हिँड्यौं । संगीतले गीतमात्र हैन, कथा पनि बोक्छ । कथाले संगीत पनि बोक्छ भन्ने बाटोमा हिँड्यौं । सुरुमा त्यो ट्रेन्ड नै थिएन । पछि सबैले 'म्युजिकल फिल्म' को नाम दिन थाले । संगीत क्षेत्रमा सबै कुरामा मैले मात्र गरेर पनि हुँदैन । मिहिनेत गर्ने जति धेरै आए, उति फाइदा हुन्छ । धेरै कलाकारले नेपालको नाम ठाउँ-ठाउँमा चुलाएपछि पो नेपाल पनि चिनिँदै जान्छ । एउटाले मात्र सक्दैन । कलामा कसरी रस भर्ने भन्ने कुरामा साधनामार्फत सबैले गर्नुपर्छ ।

संगीतले आफूलाई बुझाउँछ । 'म को हुँ ? मैले गाएका वा संगीत भरेका गीत म बोल्दा कसरी प्रस्तुत हुन्छ ?' त्यसरी सोचियो भने कला जीवनमा त्यसरी नै प्रवेश गर्छ । बिहानदेखि बेलुकासम्म आफू कलासाधनामै भइन्छ । त्यसरी सोचिरहँदा आफ्नो बौद्धिकतालाई पनि कलात्मक बनाउन सकिन्छ । आफ्नो खुसीले बिनाबन्देज सोच्दा कहाँसम्म गइन्छ स्वतन्त्र छाडिदिने हो । जति फराकिलो हुँदै गयो त्यति नयाँ कुरा निस्कन्छन् । नयाँपन आउँछ । साँघुरिनुभन्दा सबैलाई फैलनलाई राम्रो लाग्छ । आफ्नो व्यक्तिगत विचारधारादेखि सबै कुरामा परिवर्तन ल्याउनुपर्छ कलाको बाटोमा हिँड्न ।

संगीत साधनामा जीवनशैलीकै साधना गर्न सकिन्छ । संगीत रच्दै गर्दा सोच्नुपर्छ, 'आगामी पुस्तालाई मेरो दायित्व के हो ? उनीहरूलाई संगीतमा के-के सिकाउन सक्छु ?' यो कुरा पनि अहिले नै मनन गरेर गम्भीर भएर लागियो भने राम्रो हुन्छ । म्युजिक स्कुलिङ बढ्दै गयो भने संगीत क्षेत्रमा राम्रो हुन्छ । संगीत साधकहरूलाई राज्यका तर्फबाट अत्यास बढाइरहेको छ । कलाले विश्वभरका मान्छेलाई जोडेको हुन्छ । संगीतले राज्यलाई धेरै तवरबाट फाइदा गर्छ । संगीतले विश्व यात्रामा जाँदा चिनारी लिएर जान्छ । संगीतमा राज्यले थुप्रै लगानी गर्नुपर्ने देखिन्छ । संगीत पाठशाला, कार्यशाला, रोयल्टीजस्ता कुराहरूमा राज्य सचेत हुनुपर्ने हो । विभिन्न संस्थान त छन् । सबैलाई समेटेर राज्यले लैजान सकेको छैन । धेरै सम्भावना भएको वस्तुमध्ये सबैभन्दा दिव्य संगीत हो । सबैसँग सल्लाह गरेर, कम्युनिटी बनाएर राज्यले आफ्नो उपस्थिति देखाउन सक्छ ।

# शृङ्गारको बजारमा देखेको भविष्य

**विश्वभर नै विशेषतः महिला शृङ्गार गर्न मन पराउने हुन्छन्, यो चाहना पनि बढ्दो छ, यसको प्रयोग कसरी बढिरहेको छ भनेर विभिन्न माध्यमका सामाजिक सञ्जालबाट पनि देख्छौं, यसमा विभिन्न व्यक्तिले मेकअपमा आधारित भएर कन्टेन्ट बनाइरहेका छन्, मेकअप गर्न र गराउन नै त्यस्ता कन्टेन्ट बनेका हुन्, यो चलन नेपालमा पनि बढ्दो छ**

**सकिल कुँवर**
हेयर मेकअप आर्टिस्ट तथा प्याजेन्ट ट्रेनर

नेपालमा पार्लरसम्बन्धी गुणस्तरीय सेवा दिएको पाइरहेको थिइनँ । बजारमा यसको माग थियो तर त्यो अपुग्दो थियो । त्यसैले मैले विवाह समारोहलाई केन्द्रमा राखेर बिहेसम्बन्धी मेकअप सेवा दिने व्यवसाय सुरु गरें । यसका लागि एउटा सानो टिम तयार बनाएँ । २१ वर्ष उमेरबाट मेरो व्यवसाय यात्रा सुरु भयो । अहिले ३२ वर्ष पुगिसकेको छु । मेरो व्यवसायले दशक पार गऱ्यो भन्दा हुन्छ ।

खासमा मेरो हुर्काइ सिंगापुरमा भयो । बुवा सिंगापुर पुलिस फोर्सको चिफ इन्स्पेक्टर हुनुहुन्थ्यो । मेरो बाल्यकाल उतै बित्यो । १७ वर्षको उमेरमा नेपाल आएँ । यहाँ आइसकेपछि हाइस्कुल जानुअघि ६ महिनाको छुट्टी थियो । मलाई मेकअपप्रति रुचि भएकाले यसको क्लास लिएँ । ए लेभल अध्ययनका लागि रातो बंगलामा भर्ना भएँ । पढाइसँगै मैले विभिन्न फोटोग्राफर र एड्भाइजिङ म्यागजिनसँग सम्पर्क गरें । मैले मेरो सीपबारे बताएँ । सहकार्यका लागि मलाई सम्झनु भनेर अनुरोध गरें । मलाई एक जना फोटोग्राफरको काम एकदमै राम्रो लाग्थ्यो । उहाँलाई आफूसँग काम गर्न अनुरोध गरें । उहाँको सुटमा मैले मेकअप र हेयरको काम गर्न थालें । बिस्तारै उहाँले अरू पैसा लिने काममा मलाई सिफारिस गर्नुभयो । त्यसपछि मैले स्कुलको पढाइ पनि सिध्याएँ । पढाइ सकेपछि फेसन डिजाइनिङ, फेसन शो कोरियोग्राफी, शो डाइरेक्सनतिर लागें । यी सबै काम मैले नेपाल आएको चार वर्षमा गरिसकेको थिएँ ।

सिंगापुरमा हुँदा पनि मैले पिज्जाहटमा काम गर्थें नै । त्यतिबेलै सेवा क्षेत्रमा आबद्ध भएर व्यवसायी बन्छु भन्ने इच्छा मभित्र पलाएको थियो । यही इच्छाले व्यवसाय सुरु गरें ।

अर्को त सानैदेखि स्कुलमा पनि प्ले ग्रुप र थिएटरमा भाग लिने सहपाठीलाई सिँगार्ने काममा अघि सर्थें । मैले जाने जति सीपले सिँगार्थें । पछि मलाई यसमै रुचि बस्यो ।

दशक लामो व्यवसायमा मैले एउटा एकेडेमी पनि सुरु गरेको छु । जहाँ म र मेरो टिमले ब्युटिसियनसम्बन्धी तालिम र कक्षा दिन्छौं । व्यवसाय सञ्चालन गर्न परिवारले पनि सहयोग गर्नुभएको छ ।

यस क्षेत्रमा अवसर धेरै छ । यो करियरले मलाई धेरै कुरा दिएको छ । यसले मलाई आर्थिक रूपमा आत्मनिर्भर बनाएको छ । यसमा धेरै युवाले रोजगार पाएका छन् । कसरी सिकाउँदा राम्रो हुन्छ भन्नेमा ठूलो जिम्मेवारी बोकेको छु । प्रत्येकलाई राम्रोसँग सिकाउनु मेरो ठूलो जिम्मेवारी हो जस्तो लाग्छ । त्यसरी मैले यस क्षेत्रबाट सिकेका सीपलाई अरूमाझ बाँड्न चाहन्छु ।

मैले व्यवसाय सुरु गरेपछि धेरै परिवर्तन आइसकेको छ । जुन मैले पनि आशा गरेको थिइनँ । मकहाँ आउने क्लाइन्टमार्फत र टिमबाट सहयोग पाइरहेको छु । चुनौती यो क्षेत्रमा मात्र होइन, हरेक क्षेत्रमा हुन्छ । यसको समाधान भनेको उदार र खुला विचारबाटै हुनुपर्छ । हामीले आस नगरेको कुरा हुँदा र हुन नसक्दा हामी त्यसमा उदार भइदिनुपर्छ । यसबाट हामी प्रभावित पनि हुनु हुँदैन ।

विश्वभर नै विशेषतः महिला शृङ्गार गर्न मन पराउने हुन्छन् । यो चाहना पनि बढ्दो छ । यसको प्रयोग कसरी बढिरहेको छ भनेर विभिन्न माध्यमका सामाजिक सञ्जालबाट पनि देख्छौं । धेरैले भिडियो र सामाजिक सञ्जालमार्फत आफूले सिकेका कुराहरू देखाइरहनुभएको हुन्छ । यसमा विभिन्न व्यक्तिले मेकअपमा आधारित भएर कन्टेन्टसमेत बनाइरहेका छन् । मेकअप गर्न र गराउन नै त्यस्ता कन्टेन्ट बनेका हुन् । यो चलन नेपालमा पनि बढ्दो छ । नेपालमा विभिन्न कार्यक्रम हुँदा, दीक्षान्त समारोह, पारिवारिक जमघट कार्यक्रम, बिहे, व्रतबन्ध, पास्नीमा समेत शृङ्गार गर्ने चलन बढिसकेको छ । यसमा धेरैले वेडिङ मेकअप भनेर आफ्नो करियर नै अघि बढाएका छन् । यसरी नै आफ्नो करियर अगाडि बढाउने हो । यो राम्रो पक्ष हो । नेपालमा बिहेलाई धेरैले प्राथमिकता दिने संस्कृति छ । यसमा अरूले व्यवसाय सुरु गर्ने अवसर पाउँदा धेरै खुसी लाग्छ ।

मेकअपबारे विद्यार्थीलाई सिकाइरहँदा के भन्छु भने मेकअप यस्तो कुरा हो, तपाईंले लगाउनुहुन्छ मन परेन भने हटाउनुहोस् । यो अनुहारमा बसिरहँदैन । कहिलेकाहीं मेकअप गर्न मेरा विद्यार्थीहरू पनि डराउँछन् । म उनीहरूलाई 'नडराऊ यो सधैंका लागि अनुहारमा बस्दैन' भनेर सम्झाउँछु । कति व्यक्तिमा अनुहारको छालामा समस्या हुँदा मेकअपले एलर्जी हुन सक्छ । त्यसप्रति सचेत भने हुनुपर्छ ।

मेकअप भनेकै केमिकलको कम्पाउन्ड हो । अनुहारमा मात्र होइन, कपालमा पनि केमिकल नै प्रयोग गरिरहेका हुन्छौं । त्यसले एलर्जी आउँछ भने त्यो सन्चो पनि हुन्छ । यसमा आत्तिनु पर्दैन ।

मेकअप भनेको एउटा शृङ्गार वा तयार हुने अभ्यास हो । यो अभ्यासमा कुनै व्यक्तिलाई आफ्नो राम्रो सोच वा आत्मविश्वास बढ्छ भने त्यो व्यक्तिले मेकअप गराउँदा वा गर्दा गलत हो जस्तो लाग्दैन । यो आफूलाई प्रस्तुत गर्ने माध्यम हो ।

अहिले महिला मात्र नभएर पुरुषले पनि शृङ्गार गर्छन् । उनीहरूले पनि आफ्नो व्यक्तित्व बाहिर ल्याइरहेका हुन्छन् । त्यसैले यो आफू आफ्नोबारे व्यक्त गर्ने माध्यम हो । यो सिर्जना पनि हो । किनभने धेरै किसिमका प्रडक्टहरूलाई आकार दिनुपर्छ । त्यसलाई मिलाएर प्रस्तुत गर्नुपर्छ । त्यसैले यो कला हो । कसैले यसबाट आफ्नो कला प्रस्तुत गर्छन् भने त्यो नराम्रो होइन ।

मैले सिकिरहेको छु । आफूले सिकेको कुरा अरूलाई पनि सिकाउँछु । मैले बुझिरहेको कुरा भनेको म यो स्थानमा हुनुको कारण मेरो यस कामप्रतिको निरन्तरता हो । त्यसैले अब मेरो रुचिभन्दा यसमा धेरै जिम्मेवारी थपिएको छ । जुन मैले निरन्तर गरिराख्नुपर्छ र गरिरहेको पनि छु ।

धेरैले रुचिका बारेमा कुरा गर्नुहुन्छ । रुचि हुनुपर्छ तर जिम्मेवारी महसुस गर्नुपर्छ । मेरो त रुचिभन्दा बढी यो जिम्मेवारीमा पुगिसकेको छ । हरेक कुरा समयसँगै अगाडि बढ्छ । मेरो अफिसमा ५३ जना जतिले काम गरिरहेका छन् । उनीहरूले हरेक महिना मबाट अपेक्षा गरिराखेका हुन्छन् । घरधनी, बिजुली, सप्लायर्स सबैले आस गरिरहेका हुन्छन् । यी सबै कुरा गर्दा कुनै दिन मेरो चाहना वा रुचि कम भयो भन्दैमा म रोकिन सक्दिनँ । निरन्तर अगाडि बढ्नुपर्छ । यी सबै कुरा जिम्मेवारीमा बदलिसकेको छ । आफ्नो वरिपरि के भइरहेको छ बुझ्ने अनि कतिसम्म गर्न सकिन्छ त्यो गर्ने । निरन्तर गर्दै गइरहने भनेर भन्छु ।

# फिटनेसमा पनि नयाँ-नयाँ ट्रेन्ड

**फिटनेसमा आउने नयाँ मानिसहरूलाई कसरी सिकाउँछौं, कसरी सहयोग गर्छौं, त्यसले व्यवसायमा धेरै फरक पार्ने रहेछ**

**सुशान्त प्रधान**
फिटनेस ट्रेनर तथा व्यवसायी

सामाजिक सञ्जाल (सोसल मिडिया) धेरै शक्तिशाली रहेछ । चलाउने तरिका राम्रोसँग सिकेका जोकोहीलाई फाइदा हुन्छ । ११ वर्षको जिम व्यवसायको अनुभवले मलाई सिकाएको मुख्य पाठ पनि यही हो । सुरुवातदेखिकै व्यवसायको यात्रामा मलाई सामाजिक सञ्जालले धेरै नै सहयोग गरेको छ ।

म सन् २००९ देखि आफू फिट हुन र स्वस्थ हुन 'फिटनेस जर्नी' मा लागें । आफू फिट हुनुपर्छ भनेर यही क्षेत्रमा लागेको भएर यसमै रमाउन पनि थालें । त्यसैले सन् २०१३ मा आफ्नै जिम सुरु गरें । त्यो बेलामा विज्ञानमा आधारित भएर फिटनेस गराइँदैनथ्यो । विज्ञानमा आधारित छैन, ग्याप छ भन्ने अनुभव भइरहेको थियो । 'वर्कआउट', 'डाइट' देखि सबै विज्ञानमा आधारित हुनुपर्छ भन्ने लाग्थ्यो । सन् २०१४ तिर नै मैले युट्युब पनि सुरु गरें । फिटनेससम्बन्धी 'कन्टेन्ट' हरू बनाउन थालें । फिटनेस, जिमबारे जानकारी दिन सुरु गरेको थिएँ ।

सुरुमा कुमारीपाटीमा सुरु गरेको जिम पनि बढाउँदै लगें । २ वर्षपछि कमलादीमा खोलें । कोभिडअघि मैतीदेवी, बानेश्वर र महाराजगन्जमा पनि सुरु गरें । अहिले म पोडकास्ट पनि चलाउँछु । धेरैले अहिले पोडकास्ट हेर्नुहुन्छ । फिटनेसका कन्टेन्ट पनि नियमित बनाउँछु । आफ्नो व्यवसाय सुरु गर्नुअघि पनि मैले जिममा नै इन्टर्नसिप गरेको थिएँ । त्यहींबाट नै इन्डस्ट्रीको ग्यापबारेमा थाहा पाएँ । अर्को, मैले यो फिल्डमा मानिसहरूको बुझाइमा पनि कमी भएको पाएँ । जिममा के हुन्छ ? फिटनेस भनेको के हो ? भन्ने मानिसमा राम्रो बुझाइ रहेको पाइनँ । यो व्यवसाय नै किन त भन्ने प्रश्नहरू पनि नआएका होइनन् । आफू फिटनेसमा ध्यान दिने व्यक्ति भएकाले मैले व्यवसाय सुरु गरेको हो । फेरि आफ्नो फिटनेस रुटिनले मेरो अनुशासन बढायो, जसले मलाई उद्यममा लाग्नुअघि धेरै सोच्नुपरेन ।

व्यवसाय सुरु गरेको केही समय थुप्रै कठिनाइमा जेलिएँ । जस्तै, मलाई फिटनेसबारे आइडिया थियो । फिटनेसमा कस्तो हुन्छ, के गर्नुपर्छ भन्नेबारे थाहा थियो । तर व्यवसाय कसरी चल्छ, त्यो आइडिया थिएन । फेरि मेरो परिवारमा कसैको पनि व्यवसाय थिएन । सुरुमा 'सेटअप' कसरी गर्ने भन्नेमा गाह्रो थियो । निकै कम बजेटमा सुरु गर्न लागेको थिएँ । १५-१६ लाखमा सुरु गरेको थिएँ । ३ देखि ४ लाख हलकै भाडाहरू तिरें । ८ देखि १० लाखमा सामानको व्यवस्था गरेको थिएँ । सामानहरू किन्न पुग्ने पैसा थिएन । मेसिनको नमुना फोटोहरू देखाउँदै मेटल वर्कसपमा बनाउन दिएको थिएँ । अहिले त यस्तो जिमको सामान बनाउने थुप्रै लोकल ठाउँहरू खुलिसकेका छन् । त्यो बेला मैले प्रायः सामान आफैंले बनाउन दिएको हो । फेरि सामान पनि महँगो थियो । बिजनेस राम्रो हुन थालेपछि अलिअलि गरेर रिप्लेस गर्दै लगें ।

सुरुमा ६-७ महिना घाटामै चलाउनुपऱ्यो । आफूसँग कुनै विषयमा ज्ञान हुनु, स्किल हुनु र त्यसमा व्यवसाय चलाउनु फरक कुरा रहेछ भन्ने लाग्यो । त्यसपछि मेरो तर्फबाट मार्केटिङ पुगेन भन्ने अनुभूति भयो अनि कन्टेन्ट क्रिएसन सुरु गर्न थालेको हो ।

वर्कआउट प्लान सबैलाई एउटै प्रकृतिको हुँदैन । आफ्नो अनुभव र क्षमताअनुसार पनि धेरै कुरा फरक हुन्छ । यही बुझेर मैले व्यवसाय अघि बढाएको थिएँ, जुन त्यो समयमा मेरो व्यवसायको फरक पक्ष थियो । न्युट्रिसन पनि मानिसअनुसार फरक हुन्छ । त्यही मैले व्यवसायमा प्रमोट गरेको हो । जुन हामी अझै पनि गर्छौं । यसका लागि बेग्लै पैसा पनि लिएनौं ।

सुरुमा व्यवसायमा आर्थिक पक्षले असर गर्ने रहेछ । पछि आफूले थप कति मिहिनेत लगायो त्यसले पनि धेरै अर्थ राख्ने रहेछ । फिटनेसमा आउने नयाँ मान्छेलाई कसरी सिकाउँछौं, कसरी सहयोग गर्छौं, त्यसले व्यवसायमा धेरै फरक पार्ने रहेछ । हामीले थप मिहिनेत त्यसमै गऱ्यौं ।

हाम्रो जिम आउनेले सुरुमा दुई दिन ट्रायल लिन सक्छ । त्यसमा चित्त बुझ्यो भने 'मेम्बरसिप' लिने र चित्त बुझेन भने नलिने सुविधा छ । जीवनशैली कस्तो छ, लक्ष्य के हो, त्यसमा पुग्ने समय कति ? त्यहीअनुसार जिम प्लान गराइन्छ ।

सन् २००९ मा मैले सुरु गर्दा जिम जाने भनेको ज्यान बनाउने भन्ने थियो । महिलाहरू त जिममा हुँदैन थिए । बिस्तारै २०१३/१४ देखि स्वास्थ्य स्थितिका कारण मानिसहरू जिम आउन थाले । दुब्लाउने मात्र होइन, जिम गएर मोटाउन पनि सकिन्छ भन्ने आमबुझाइ रहन थाल्यो । फेरि २०१७/१८ मा आइपुगेपछि मोटाउने, दुब्लाउने मात्र होइन, सबैले व्यायाम गर्न आवश्यक छ भन्ने बुझाइ थपियो । सन् २०२१ मा आएपछि मानसिक स्वास्थ्यका लागि पनि व्यायाम आवश्यक छ भन्ने 'कन्सेप्ट' बढ्यो ।

फिटनेस ट्रेन्डहरू के आइरहेको छ, त्यही जिममा राख्नुपर्छ भन्ने मलाई लाग्दैन । जस्तै २०१२/१३ तिर जुम्बा निकै ट्रेन्डमा थियो । पछि अरू यस्ता ट्रेन्डहरू आइरह्यो । अहिले 'पिलाटिज' पनि ट्रेन्डमा छ । सबै ट्रेन्ड सबै व्यवसायका लागि बिल्कुल होइन । मैले जे गरिरहेको छु, त्यसमा अझ राम्रो गरौं भन्ने लाग्छ । सबै खालको व्यवसायमा त्यही हुनुपर्छ जस्तो लाग्छ । एकैपटक सबैतिर लाग्नु हुँदैन, जुन हाल धेरै 'स्टार्ट अप' मा पनि देखिन्छ । मेरो योजना राम्रो सर्भिस दिने हो । राम्रो कुराचाहिँ अहिले आएका ट्रेन्डहरू भने धेरै स्वास्थ्यप्रति फोकस छन् ।

जिमको टार्गेट व्यक्ति भनेकै १५ देखि ३०-४० उमेर समूहका हुन्छन् । फेरि त्यही समूहका लागि कन्टेन्ट पनि बनाइरहेको छु । यसरी फिटनेसमा आउन चाहेकालाई के चाहिएको छ भनेर बुझ्न पाएका छौं । अहिले धेरैले कन्टेन्टको क्रिएसन गर्दै व्यवसाय गरिरहेका छन् । मैले सन् २०१४ मा कन्टेन्ट बनाउन सुरु गरेको व्यवसाय प्रमोट गर्ने हो ।

अहिलेको आर्थिक संकटले अनि कोभिडको असरले सबै व्यवसायमा हानि गऱ्यो । धेरै युवा विदेश पुगेका छन् । यहाँ भएकामध्ये धेरै नेपाल बस्न चाहँदैनन् । त्यसले गर्दा प्रायः व्यवसायमा असर गरेको छ । जिममा युवा धेरै हुने हुन् । तर अहिले धेरै युवा विदेश गएका छन् । त्यसले यो व्यवसायमा पनि समस्या आइरहेको छ । अहिले यो मार्केटमा जिमको प्रतिस्पर्धा बढेको छ । जिम नै धेरै खुलिसकेका छन् । यद्यपि युवाहरू पलायन भएकै कारण भने जिम व्यवसायमा समस्या आएको हो ।

जिम व्यवसायमा ट्रायलमै आएका सबैले मेम्बरसिप लिन्छन् भन्ने छैन । के कसरी उनीहरूलाई सन्देश दिइरहेका छौं, मार्केटिङ कसरी गरेका छौं भन्ने कुराले अर्थ राख्छ । यो व्यवसाय गर्न चाहेकाले याद गर्नुपर्ने कुरा यिनै हुन् । जस्तो कि हामीले चेतनाको काम पनि गरिरहेका छौं । म आफैंले अरूको फिडब्याक कस्तो छ सुन्छु, हेर्छु र प्रतिक्रिया जनाउँछु ।

अहिले जसरी धेरै युवा अवसर छैन भनिरहेका छन् । नैराश्यता देखिएको छ । अहिले सबै व्यवसायलाई आर्थिक संकटले असर गरिरहेको छ । त्यो राम्रो हुनेबित्तिकै सबैको व्यवसाय राम्रो हुन थाल्छ । अहिले व्यवसाय कसरी बचाउने भन्ने हो । बिस्तारै यो समस्या समाधान हुनेछ अनि व्यवसाय कसरी उठाउने, राम्रो गर्ने भनेर सोच्नुपर्छ जस्तो लाग्छ । हाल चार ठाउँमा मेरो जिम छ । अन्य ठाउँमा जिम थप्ने योजना छ । सही समय कुरिरहेको छु ।

व्यवसाय खोल्न व्यवसायसम्बन्धी स्किल पनि हुनुपर्छ । व्यवसाय चलाउने भनेको फेरि सीप मात्र भएर पुग्दैन । लगानीकर्ताका तर्फबाट पनि सोच्नुपर्छ । मलाई कुनै बिजनेस बढाउनु छ, देशका लागि काम गर्छु, रोजगारी सिर्जना गर्छु भन्ने भावनाले मात्र व्यवसाय चल्दैन । मान्छे चिन्न, नेटवर्किङ गर्न निकै आवश्यक छ । आफ्नो आइडियाले बजारमा काम गर्छ कि गर्दैन ? सोचेर मात्र केही योजनामा लाग्ने हो । आइडिया युनिक छ भनेर हामफाल्ने पनि होइन । आइडियाबाट पैसा बनाउन सकिन्छ कि सकिँदैन भनेर पूर्वयोजना आवश्यक पर्छ । देशका लागि काम गर्न पैसा त आवश्यक पर्छ नै । धेरैले यो साइडमा राखेर सोच्छन् जुन सही होइन । काम गर्न 'प्यासन' र ज्ञान दुवै आवश्यक हुन्छ ।

केही व्यवसायमा सुरुमा पर्याप्त लगानी आवश्यक पर्छ । कति व्यवसायमा धेरै लगानी चाहिँदैन । जिम जस्ता व्यवसायमा लगानी चाहिन्छ । जस्तै जिमकै व्यवसायमा लाग्ने इच्छा छ तर पैसा धेरै छैन भने सुरुमा पर्सनल ट्रेनर भएर काम गर्न सकिन्छ । ३/४ करोडको लगानी गरेर खोलिएका जिम पनि छन् । मैले सुरु गर्ने बेलामा १५-१६ लाखबाट सुरु गरेको हो । मेरो अभिभावकले पढाइका लागि जम्मा गरेर राख्नुभएको पैसा थियो । त्यही प्रयोग गरें । त्यो समयमा पनि जिम खोल्न ३०-४० लाख लाग्थ्यो । मसँग पर्याप्त पैसा थिएन । म जिम खोल्न सक्दिनँ भन्ने पनि लागेको थियो ।

व्यवसायमा आउने हरेक नवआगन्तुकलाई मेरो सल्लाह छ, व्यवसायको सबै प्रक्रिया बुझ्ने, अध्ययन गर्ने अनि काम अघि सार्ने । लगानी गरेअनुसार प्रतिफल छ कि छैन सबै कुरा बुझ्न आवश्यक छ । अर्को सल्लाह भनेको जुनसुकै व्यवसायमा लाग्ने भए पनि पढ्न र ज्ञान लिन नछोड्ने । यसले आत्मविश्वास ल्याउँछ । आत्मविश्वास हरेक व्यवसायमा चाहिन्छ । मेरो सल्लाह सामाजिक सञ्जालहरू चलाउन सिक्नुस् । 'पर्सनल ब्रान्ड' बनाउनुस् । मानिसहरूलाई चेतना फैलाउने हिसाबले कन्टेन्ट क्रिएट गर्नुस् ।



सौरभ घिमिरे
फिल्ममेकर

# अन्तर्राष्ट्रिय बजारमा नेपाली फिल्म

## फेस्टिभलले फिल्मलाई राम्रो बुस्ट गर्ने रहेछ, फिल्म हेर्नेको संख्या बढ्दो रहेछ, ग्लोबल बजारमा कनेक्ट हुन पाइने रहेछ

हरेक फिल्ममेकरको अन्तर्राष्ट्रिय फेस्टिभलमा आफ्नो फिल्म देखाउने सपना हुन्छ। मसँग केही विषय थिए, जुन भन्नैपर्छ जस्तो लाग्यो। फिल्म बनाएँ 'सङ्स अफ लभ एन्ड हेट।' मैले मास्टर्स पढ्दा बनाएको फिल्म हो यो। मास्टर्स बेल्जियमको लुका स्कुल अफ आर्टसमा मैले फिल्म निर्देशन पढें। फिल्म कलेजको अन्तिम समयतिर, फाइनल प्रोजेक्ट बनाउनुपर्ने थियो। मसँग हाइकिङ र घुम्न जाँदाका केही पुराना फुटेज थिए। तिनै फुटेजहरू चलाएर सर्ट फिल्म बनाउनुपर्छ भन्ने सोच आयो।

सुरुमा स्क्रिप्ट लेखेर, डाइलग लेख्दै थिएँ। पछि लेख्ने क्रममा छाडिदिएँ। मसँग पुरानो फुटेज छ, यही जोडेर बनाउँछु भन्दा साथीहरू चकित भए। शिक्षकहरू पनि। उहाँहरूले नगरचाहिँ भन्नुभएन। कसरी हुन्छ भनेर कन्भिन्स गर्न लगाउनुभयो। मैले बुझाएँ, तर उहाँहरू कन्भिन्स हुन सक्नुभएन। मेरो दिमागमा चाहिँ यो फिल्म बन्छ भन्ने थियो।

सन् २०२३ को जनवरीतिर मैले फिल्मका लागि चाहिने मुख्य आइडिया भेटें। कथामा रेडियो शो छ। फिल्मलाई ५/६ महिना लगाएर एडिट गरियो। जुनमा सकियो। ग्र्याजुएसन भयो। फेस्टिभलहरूमा पनि अप्लाइ गरें। ६ महिनापछि बर्लिनबाट जवाफ आयो। बर्लिन अन्तर्राष्ट्रिय फिल्म फेस्टिभलमा फिल्म 'सङ्स अफ लभ एन्ड हेट' ले स्पेसल मेन्सल अवार्ड जित्यो पनि। फेस्टिभलले फिल्मलाई राम्रो बुस्ट गर्ने रहेछ। फिल्म हेर्नेको संख्या बढ्दो रहेछ। बर्लिनमा हाम्रो ४ वटा स्क्रिनिङ थियो। सबै स्क्रिनिङको हल बुक भएको थियो। फिल्मलाई दिने माइलेज फेस्टिभलले एकदमै राम्रो गर्दोरहेछ। ग्लोबल बजारमा कनेक्ट हुन पाइने रहेछ। नेपालमा फिल्म स्कुल छन्। फिल्म स्कुलका साथीहरूले सर्ट फिल्म बनाइरहेका हुन्छन्। सर्ट फिल्म भनेको सामान्यतयाः फिचर फिल्मका लागि अभ्यास नै हो। भोलि सबैलाई फिचर फिल्म बनाउनु छ। फिचर फिल्म बनाउन आफूलाई केही हदसम्म प्रमाणित त गर्नैपर्छ।

आफ्नो फिल्म मेकिङ बुझ्न सर्ट फिल्म उपयुक्त बाटो हो। सर्ट फिल्मको महत्त्व मैले देखेको त्यहीं हो। मल्टिपल सर्ट फिल्म बनाएर त्यो सिक्नुपर्छ भन्ने हो। नत्र त बजारको हिसाबमा भ्यालु कम छ। म आफ्नो कला बुझ्छु, त्यसलाई निखार्दै वा विकास गर्दै जान्छु भन्नलाई सर्ट फिल्म हो।

सर्ट फिल्ममा फर्महरूसँग खेल्न पाइयो। न्यारेसनसँग खेल्न पाइयो। फरक टेक्निक प्रयोग गर्न पाइयो।बाहिरी देशमा अडियो भिज्युअल डिपार्टमेन्ट भनेरै छुट्याएका हुन्छन्। बेल्जियम फिल्म स्कुल पढ्ने विद्यार्थीका लागि छुट्टै कोर्स थियो। त्यो फिल्म स्कुल पढ्ने विद्यार्थीलाई मात्र पैसा दिन। मैले पनि पाएँ। ती देशहरू फिल्मको विकासमा सचेत छन्। उनीहरू आफ्नो फिल्म क्षेत्र, अडियो भिज्युअल इन्डस्ट्री विकास गर्न लागिपरेका हुन्छन्। बेल्जियममा रोचकचाहिँ पासआउट भए पनि मैले ग्र्याजुएसन प्रोजेक्टलाई अप्लाइ गर्न पाउँथें। उनीहरूले ५० हजार युरो दिन्थे। त्यो अप्लाइ गरेको चार विधा फिक्सन, डकुमेन्ट्री, एनिमेसन, एक्सपेरिमेन्टललाई ५०-५० हजार युरो छुटचाइएको थियो। यो बेल्जियमभरका फिल्म स्कुलबाट पासआउट भएकाले अप्लाइ गर्न पाउँथे।

फिल्म संरक्षणमै उनीहरूको आफ्नै अर्काइभ हुन्थ्यो। यसले फिल्म क्षेत्रको विकासमा योगदान पुऱ्याएको थियो। नेपालमा अहिले फिल्म स्क्रिनिङ, प्रोजेक्सन, हलका विषयलाई अझ सक्रिय बनाउन, अवार्ड कार्यक्रमले फिल्ममेकरलाई चिनाउने खालका कार्यक्रममा सरकारी निकायले सहभागिता जनाइरहेको देखिन्छ।

नेपाली फिल्मलाई अन्तर्राष्ट्रिय बजारसँग कनेक्ट गर्ने, अन्तर्राष्ट्रिय मार्केटमा पुगेर आइसकेका फिल्ममेकरसँग मिलेर कार्यक्रम गर्ने, बजार खोज्ने जस्तो काम भएकै छैन। बजार त धेरै फराकिलो छ।

पछिल्लो दशकयता एउटा ट्रेन्ड विकास भयो। सर्ट फिल्म बनाउने, बाहिर अप्लाइ गर्ने, बाहिरबाट फन्ड ल्याउने, फन्ड ल्याएर नेपालमा फिल्म बनाउने, त्यो फिल्म बाहिरै लगेर बेच्ने। सीमित मात्रमा रिजल्ट पनि नआएको होइन। तर, यसले व्यक्तिगत रूपमा फिल्ममेकरलाई मात्र सहयोग गऱ्यो। चेतना त प्रोड्युसरहरूमा पनि बढाउनुपऱ्यो नि।

हामीले बाहिरबाट फन्ड ल्याएर जहिलेसम्म नेपालमा आएर फिल्म बनाउने सोच राख्ने हो भने त्यो प्रभावकारी छैन। यहीं लगानी जुटाउन सक्नुपर्छ। बाहिरबाट त केही फिल्ममेकरले मात्र पाउँछन्। एक-दुई जना फिल्ममेकरले गर्न सक्नुहोला। तर, त्यो स्पेसचाहिँ यहाँ बनेन। जबसम्म हामीले यहीं कन्भिन्स गरेर गर्न सक्दैनौं। फिल्म क्षेत्रको विकासमा अड्चन आइरहन्छ।

# समाज र जीवनको दोभान : थिएटर

**हाम्रा ऐतिहासिक कथाहरू, परम्परागत मूल्यहरू अनि समयक्रममा ओझेल परेका संस्कृति थिएटरमा पर्याप्त आएका छैनन्, नयाँ पुस्ताले यी विषयवस्तुलाई उजागर गर्न सक्छन्**

**पवित्रा खड्का**
रंगकर्मी

रंगमञ्च मेरो जीवनको अभिन्न हिस्सा बनिसकेको छ। मैले थिएटर यात्रा थालेको १०-११ वर्ष भइसकेको छ। अहिले म शिल्पी थिएटरसँग आबद्ध छु। 'लस्ट एन्ड फाउन्ड' नामक नाटकको तयारीमा छौं हामी।

तर, मेरो यात्रा सुरुदेखि नै थिएटरप्रति केन्द्रित थिएन। थिएटर सिक्ने उद्देश्यले काठमाडौं आएकी होइन। माओवादी द्वन्द्वकालको समयमा काठमाडौं आइपुगेकी थिएँ। जब विद्यालयहरू बन्द भएका थिए। मलाई नाटकबारे केही नै थाहा थिएनभन्दा हुन्छ।

एसएलसी सकिएपछि कम्प्युटर सिक्ने योजना बनाएको थिएँ। घरमा त्यही भनेको थिएँ। तर डाँटेर म डान्स क्लासतिर लागें। क्लासमा साथीहरूले अभिनय सिक्दै गरेको देखें। उनीहरूले मलाई नि अभिनय सिक्न आग्रह गरे। तीन महिनाको कोर्स लिएँ। त्यहीं हो, मैले पहिलो पटक अभिनय, नवरस, पात्र निर्माण आदिबारे सिक्ने मौका पाएँ। त्यही प्रशिक्षण क्रममा म शिल्पी थिएटरसँग जोडिन पुगें। संयोगले म शिल्पीको पहिलो ब्याचकी विद्यार्थी भएँ।

शिल्पी थिएटरमा प्रवेश गरेपछि मैले रंगमञ्चबारे गहिराइमा बुझ्न थालें। थिएटर भनेको के हो ? यसले समाजमा के प्रभाव पार्न सक्छ ? यसको माध्यमबाट कति धेरै कुरा व्यक्त गर्न सकिन्छ भन्ने थाहा पाएँ। शिल्पीले मुक्त रंगमञ्च र बन्द रंगमञ्च दुवैको अभ्यास गराउँछ। मुक्त रंगमञ्चको अनुभवले मलाई फरक समुदायमा पुग्न, भाषागत विविधता बुझ्न, लैंगिक विभेदसम्बन्धी चेतना पाउन र समाजमा विद्यमान विभिन्न समस्याको प्रत्यक्ष अध्ययन गर्न सहयोग गर्‍यो।

थिएटरप्रति मेरो झुकाव समयक्रमसँगै गहिरिँदै गयो। त्यसपछि मैले यसलाई पेसा नै हो भन्ने सोच्न थालें। अहिले नयाँ कलाकारको सहभागिता हेर्छु, धेरै युवाहरू यसमा संलग्न हुन चाहँदैनन्। केही रुचि भएरै यसमा आउँछन्। तर, अभिभावकको दबाबका कारण निरन्तरता दिन सक्दैनन्। युवा पुस्तामा धेरैको रुचि घट्दो क्रममा देख्छु। केही समयमै निराश भएर जाने प्रवृत्ति बाक्लो छ। नाटक लोकप्रिय पेसा होइन। धेरै अभिभावकले आफ्ना सन्तानलाई डाक्टर, इन्जिनियर बनाउन चाहन्छन्, कलाकार बनाउन होइन। समाजको सोच त्यस्तै छ। फेरि धेरै युवा चाँडै चर्चित हुन चाहन्छन्, दुई-तीन महिना सिकेपछि ठूला काम पाउनुपर्ने अपेक्षा राख्छन्। थिएटर भनेको लामो यात्रा कला हो।

नाटक पेसागत रूपमा अँगाल्न सजिलो छैन। नाटक गर्छु भन्नेबित्तिकै परिवार र समाजबाट 'पैसा कहाँबाट कमाउँछौ ?' भन्ने प्रश्न आउँछ। मेरा लागि नाटक नै पेसा हो भन्नसमेत गाह्रो छ। अझ महिलाहरूका लागि झन् कठिनाइ छ। यो पेसाबाट पनि जीवन धान्न सकिन्छ भन्ने बुझाउन सक्नुपर्छ। निरन्तर लागिरहनुपर्छ। अभिनयलाई पेसा बनाएका मान्छेहरूलाई अझै पनि समाजले 'यसबाट बाँच्न सकिन्छ ?' भनेर प्रश्न गर्छ।

तर, स्थिर भविष्यको ग्यारेन्टी त कुनै पेसामा पनि हुँदैन, होइन र ? आर्थिक अस्थिरताको डरले थिएटरलाई पूर्ण रूपमा पेसाका रूपमा अपनाउन कठिन भए नि यसभित्र अनेक अवसरहरू छन्।



उदाहरणका लागि नृत्य, संगीत, लेखन र निर्देशनमा विशेषज्ञता बढाउन सकिन्छ। मैले नृत्यमा स्नातक गर्न सफल भएँ। यसले मलाई नाटकसँगै नृत्य सिकाउने अवसर दिलायो। थिएटर डिजाइन, म्युजिक, लाइटिङ, स्टेज म्यानेजमेन्ट, प्रप्स र कस्टुम डिजाइन जस्ता अतिरिक्त सीपहरूले कलाकारलाई वैकल्पिक स्रोत दिन सक्छ। धेरै कलाकारले नाटक लेखन वा अभिनय प्रशिक्षणबाट पनि आम्दानी गर्न गरिरहेका छन्।

यदि हामी यो कुरा बुझ्न सक्छौं भने थिएटरलाई पनि एउटा स्थिर पेसाका रूपमा स्थापित गर्न सकिन्छ। आर्थिक रूपमा चिन्ता लिनुपर्ने भए पनि सही ढंगले काम गर्न सकियो भने यसैबाट आत्मनिर्भर बन्न सकिन्छ। अभिभावकहरूले आफ्ना सन्तानको इच्छा बुझेर नाटक पनि पेसा हो भनेर बुझ्नुपर्छ। हाम्रो समाजमा अहिले भाइरल, चर्चित भएका कामतर्फ आकर्षण बढेको छ। नाटक वा थिएटर भने अलि लामो यात्रा हो। निरन्तरता दिएर धैर्यसाथ लागेमा यस क्षेत्रमा भविष्य बनाउने सम्भावना छ।

थिएटर भनेको मात्र अभिनय गर्ने ठाउँ मात्र होइन। यो समाज बुझ्ने माध्यम हो। जस्तै, थिएटरले शिक्षालाई सहज बनाउँछ। विभिन्न विद्यालयहरूमा नाटकहरू प्रदर्शन गरिन थालेका छन्, जसले विद्यार्थीको सिकाइ प्रभावकारी बनाउँछ।

थिएटरले आत्मबोध गराउँछ। मैले आफैंलाई चिन्न, आफ्नो भावना बुझ्न र समाज बुझ्न थिएटरबाट सिकें। समग्रमा समाज, वरपरको वातावरण र आफैंलाई बुझ्ने माध्यम हो। थिएटर सामाजिक विभेदविरुद्धको हतियार हो। रंगमञ्चले लैंगिकता, भाषिक विविधता तथा विभिन्न सामाजिक मुद्दाहरू बुझ्न सघाउँछ। नाटक हेर्नु भनेको समाजका विविध पाटाहरू बुझ्नु पनि हो।

नाटकलाई अझ प्रभावकारी बनाउन आवश्यक पर्ने मुख्य पक्ष भनेको डिजिटल युगमा यसको प्रवर्द्धन हो। हाल डिजिटल युगमा छौं, तर डिजिटल माध्यमको प्रयोग थिएटरमा न्युन छ। थिएटरकर्मीहरूले आफ्ना नाटकलाई डिजिटल प्लेटफर्मबाट कसरी 'सेल' गर्न सकिन्छ भनेर सोच्नुपर्छ। डिजिटल मार्केटिङको सही प्रयोग गर्न सकियो भने थिएटरको प्रभाव अझ फैलिन सक्छ।

काठमाडौंबाहिर नाटक लैजान कठिन छ। धेरै ठाउँमा थिएटर नै छैनन्। नाटक बुझ्ने, हेर्ने, चासो राख्ने व्यक्तिहरू कम छन्। तर, जब हामी राजधानीबाहिर नाटक देखाउन जान्छौं, राजधानीको भन्दा बेग्लै अनुभव हुन्छ। त्यहाँका दर्शकहरू नाटक हेर्न आउँछन्, आफ्नो जीवनका घटनाहरू त्यसमा देख्छन् अनि संवाद गर्छन्। समाजको ऐनाजस्तो भएर नाटक उनीहरूलाई प्रतिविम्ब देखाउने माध्यम बन्छ। तत्काल परिवर्तन नआउला तर दर्शकहरूले घर फर्किंदा नाटकका विषयमा बहस गर्न थालेको पाउँछौं।

थिएटरको भविष्य समाजको बुझाइमा निर्भर छ। जब समाजले नाटक आवश्यक छ भनेर महसुस गर्छ, तबमात्रै यसको भविष्य सुरक्षित हुन्छ। अहिले काठमाडौंका धेरै थिएटर बन्द हुँदै छन्। यो अवस्थामा कसले जिम्मेवारी लिने ? राज्यको नीति के हो ? यस्ता प्रश्नहरू गम्भीर छन्।

थिएटर सिक्न आउने धेरैजसो कलाकार लामो समय टिक्दैनन्। सिक्न त आउँछन्, केही समयमै छोडेर जान्छन्। सफलताको हतारो भएकाहरू तीन महिने कोर्स सकेपछि ठूलो उपलब्धि खोज्छन्। तर, राम्रो कलाकार बन्न धैर्य चाहिन्छ, निरन्तरता चाहिन्छ।

हालसम्म थिएटरले समेट्न नसकेका क्षेत्रहरू पनि छन्। एलजीबीटीक्यु समुदाय, अपांगता भएका व्यक्तिहरूका लागि थिएटरले अझै पनि पर्याप्त अवसर दिन सकेको छैन। महिला कलाकारका लागि अझै पनि लैंगिक संघर्ष कायम छ। समाजले महिला कलाकारलाई अझै परम्परागत सोचकै आधारमा हेर्छ। नाटकमै पनि महिला पात्रहरूलाई सधैं निरीह पात्रका रूपमा हेर्ने गर्दछ। महिलाका सशक्त भूमिकाहरू नाटकमा ल्याउन जरुरी छ।

थिएटरले मलाई आफूलाई चिन्न सिकाएको छ। हाम्रो समाजमा छोरीहरूलाई 'अर्काको घर जाने' सोचले हुर्काइन्छ। तर, थिएटरले मलाई आफ्नै सपनाको बाटो बनाउन सिकायो। म आफ्नो पहिचान बनाउन चाहन्छु अनि अरूलाई प्रेरित गर्न चाहन्छु। थिएटर केवल अभिनयको माध्यम मात्र होइन, यो जीवन बुझ्ने, समाज बुझ्ने र आफूलाई चिन्ने माध्यम हो। थिएटरमा लाग्ने जो-कोहीलाई यो यात्राले एउटा गहिरो अर्थ दिनेछ। जुन केवल चर्चित हुन होइन, बरू आफूलाई खोज्न सहयोग गर्नेछ।

आउने पुस्ताका लागि थिएटर अझ सहज बन्दै गएको छ। आफ्नो सीप प्रस्तुत गर्न चाहने जोकोहीका लागि यो एक खुला मञ्च हो। नयाँ प्रविधिको प्रयोग गरी डिजिटल माध्यम अपनाएर थिएटरलाई व्यापक बनाउन सकिन्छ। डिजिटल प्लेटफर्ममार्फत कसरी नाटकलाई नयाँ स्वरूप दिन सकिन्छ, कसरी फरक आइडिया प्रस्तुत गर्न सकिन्छ भन्ने सोचसाथ आउनु नयाँ पुस्ताका लागि अवसर हो। अबको पुस्ताले थिएटरलाई केवल स्टेजमा सीमित नराखी डिजिटल दुनियाँमा कसरी प्रभावकारी रूपमा प्रस्तुत गर्न सकिन्छ भन्नेमा ध्यान दिन सक्नुपर्छ।

थिएटर सिर्जनात्मक अभिव्यक्तिको एक माध्यम हो। जहाँ आइडिया छ भने त्यसलाई लागू गर्ने ठाउँ यही हो। विशेष गरी हाम्रा ऐतिहासिक कथाहरू, परम्परागत मूल्यहरू अनि समयक्रममा ओझेल परेका संस्कृति थिएटरमा पर्याप्त रूपमा आएका छैनन्। नयाँ पुस्ताले यी विषयवस्तुलाई नाटकमार्फत उजागर गर्न सक्छन्। इतिहास पुनर्जीवित गर्दै समसामयिक सन्दर्भ प्रस्तुत गर्न सकिन्छ। डिजिटल माध्यमको सहयोगमा थिएटरलाई अझ व्यापक दर्शकमाझ पुर्‍याउन सकिन्छ। जसले यसलाई केवल मनोरञ्जनको साधन होइन, सांस्कृतिक संरक्षण र परिवर्तनको प्रभावकारी उपकरण स्थापित गर्न सक्दछ।

थिएटर भनेको अभिनय गर्ने ठाउँमात्र होइन, यो जीवनलाई नयाँ तरिकाले लैजाने गन्तव्य हो। अभिनय केवल संवाद बोल्ने कुरा होइन। यो पात्रको भाव, सोच र परिवेशलाई जिउँदो बनाउने कला हो।


नयाँ पुस्ता ३२औं वार्षिकोत्सव
• **संयोजक** : कृष्ण आचार्य • **सम्पादन** : राजेन्द्र बस्नेत, स्वरूप आचार्य, भूमीश्वर पौडेल, ध्रुव तुलाधर, फणीन्द्र संगम र उत्तम अर्याल
• **भाषा** : बालचन्द्र मिश्र, घनेन्द्र केसी, पर्शुराम रेग्मी र कुलप्रसाद भट्टराई • **कला** : शारब • **लेआउट/डिजाइन** : विशेश्वर श्रेष्ठ र रामकृष्ण श्रेष्ठ • **तस्बिर** : कान्तिपुर फोटोग्राफी शाखा • **मार्केटिङ** : कान्तिपुर मार्केटिङ विभाग